*समर्पणः*

"वैचारिक द्वन्दको धरातलबाट उत्पन्न मानव
सेवा,शान्ति,धर्म र अधिकारको खेलमा भाग लिएका र
लिनको लागि लालायित व्यक्तिहरूप्रति समर्पित.........."

प्रकाशक :
भिजन नेपाल कास्की,
पोखरा - ६, जरेवर, लेकसाइड
E-mail: visionnepal2007@gmail.com
Website: www.visionnepallive.org


E-mail: disorderinorder@yahoo.com
Website: www.disorderinorder.com

मूल्य : १५०/-

संख्या : १००० प्रति

मुद्रण :
आदर्श अफसेट प्रिन्टर्स
पोखरा-१, बगर
फोन : ०६१-५४१९६२

## पुस्तक भन्दछ....

विभिन्न विषय र क्षेत्रसँग सम्बन्धित नयाँ खोज र आविष्कारको परिणामस्वरूप पुस्तकहरूको प्रकाशनमा तीव्रता आइरहेको बेला यो पुस्तकले मानव जीवनमा घटेका, घटिरहेका र घट्नसक्ने घटनाक्रमहरूको बारेमा प्रकाश पार्ने जमर्को गरेको छ । घोषणा–पत्रलाई साधारणतया निर्वाचन हुनुभन्दा अगाडि कुनै नेता वा समूह ,विशेषतः राजनैतिक पार्टीद्वारा कुनै पूर्वनिर्धारित लक्ष्यप्राप्तिको लागि बनाइएको नीति नियम र सिद्धान्तहरूको संक्षिप्त विवरण भनेर मानिन्छ तर यहाँ घोषणा–पत्र भन्नाले कुनै नेता, समूह वा पार्टी विशेषलाई नऔंल्याएर, स्वयम् समग्र मानव जीवनले नै वकालत गरेको, गरिरहेको र गरिरहने समस्याहरूको समाधान केवल जीवनको निष्पक्ष स्व–अध्ययन र स्व–बोधको विष्फोटनबाट मात्र तय हुने कुरालाई औंल्याइएको छ । विचारको घोषणा–पत्र राजनैतिक पार्टीहरूको हुन्छ तर विचारको लागि जीवन नभई बरु जीवनको लागि विचार हुने भएकोले यो किताब विचारको घोषणा–पत्र नभई जीवनको घोषणा–पत्र हो । यस घोषणा–पत्र अन्तर्गत लेखिएका वाक्यहरूको व्यावहारिकतालाई मन्थन गर्नको लागि सम्वाद एउटा सशक्त माध्यम बन्न सक्ने कुरालाई पनि औंल्याउन खोजिएको छ । वास्तवमा शब्द आफैंमा मृत हो वा सजीव हो भन्ने कुरालाई कुनै पनि व्यक्तिले त्यस शब्दले बोकेको अर्थलाई कति गहिराइसम्म गम्भीरता र सतर्कतापूर्वक लिन पुग्दछ भन्ने कुराले बोध गराउँदछ । यद्यपि शब्दको अर्थ स्वयम् तथ्य बन्न नसके तापनि शब्दको अर्थले साधनको रूपमा केही कुरा सञ्चार गर्न वा औंल्याउन भने अवश्य नै खोजेको हुन्छ । शब्दले बोकेको अर्थको स्व–बोध भने शब्दको बिसर्जन गर्नुमा मात्रै सम्भव हुन सक्ने भएकोले कुनै पनि कुराको व्यावहारिक विष्फोटनबिना जीवनको मौलिकता अभिव्यक्त हुन नसक्ने यथार्थतालाई औंल्याउन खोजिएको छ । यस पुस्तकले वैचारिक उत्पादनलाई भन्दा विचार स्वयम्‌को प्रक्रियागत कार्य प्रणालीलाई शल्यक्रिया गर्नुपर्ने गम्भीर आवश्यकतालाई महसुस गरेको कुरा औंल्याउन खोजेको छ ।

प्रस्तुत पुस्तक सत्य छ ,सत्य छैन र प्राकृत जीवन गरी तीन खण्डमा विभाजित छ । सत्य छ भन्ने खण्ड एकले आजसम्म मानिसले सत्यको अस्तित्वलाई कुनै न कुनै रूपमा स्वीकार गरी सत्य वा शान्ति प्राप्त गर्न अग्रसर भएको कुरालाई कुनै विधिको माध्यमले प्राप्त गर्न खोज्दा उत्पन्न हुन सक्ने कुरालाई अति सुक्ष्म रूपमा प्रस्तुत गरिएको छ भने सत्य छैन भन्ने खण्ड दुईले खण्ड एकको विपरीत कुनै पनि सत्य, मुक्ति वा शान्ति भन्ने कुराको संसारमा अस्तित्व छैन र यदि तथाकथित कुनै सत्य, शान्ति वा प्रेम भन्ने कुरा छ भने पनि त्यसको अस्तित्व कुनै पनि वैचारिक क्षेत्रले स्पर्श गर्न नसक्ने

भएकोले सम्पूर्ण विचार स्वतः आफैं भष्म नभएसम्म यहाँ कसैले पनि कसैलाई कुनै कुराको आश्वासन दिनु आफैंमा ठूलो घातक सिद्ध हुन जानेछ भन्ने कुरा औंल्याइएको छ । त्यस्तै गरेर खण्ड तीनले औंल्याउन नसकिने र नमिल्ने प्राकृत अवस्थाको अविभाज्य चेतनलाई वैचारिक साधनको माध्यमबाट औंल्याउने दुस्साहस गरिएको छ जसको लागि पाठकवर्गसँग क्षमा माग्नु अत्यन्त गम्भीर आवश्यक देखिन्छ ।

जीवनका अति गहन र गम्भीर कुराहरूलाई संक्षिप्त रूपमा प्रस्तुत गर्दा हुन जाने अचानक पसङ्ग परिवर्तनले र एउटै कुरालाई विभिन्न तरिकाले औंल्याउँदा शब्द फरक भए पनि एउटै अर्थ दिन पुग्ने हुनाले यस पुस्तकबाट कसैले पनि धार्मिक ग्रन्थ तथा उपन्यास पढेर र फिल्म हेरेर प्राप्त हुनेजस्तो गुलियो रस कुनै पनि हालतमा प्राप्त हुन नसक्ने कुरालाई यहाँ स्पष्ट पार्नुपर्ने आवश्यकता देखिन्छ । प्रस्तुत पुस्तकभित्र लेखिएका कुराहरूलाई लेखकको धरातलबाट नहेरी जीवन उन्मुख धरातलबाट हेरेर आउने कुनै पनि सुझावलाई सहर्ष स्वागत गर्दछ र गरिरहने गतिशीलता व्यक्त गर्दछ । यस पुस्तकले निश्चय पनि भाषागत शुद्धिसम्बन्धी समस्याबाट वञ्चित नरहेको अनुभूतिलाई आत्मसाथ गर्दै सो सम्बन्धमा आउने कुनै पनि सुझाव तथा सल्लाहलाई विनम्रतापवक स्वागत गर्ने कुरा पनि यहाँ राख्न चाहान्छ । यहाँ विशेषतः जीवनसँग सम्बन्धित कुराहरू स्वयम् आफैंले आफैंद्वारा स्व-बोध गर्न सकिने भएकोले वास्तवमा यहाँ लेखिएका कुराहरू लेखक स्वयम्को मात्र एकलौटी अर्थात पेवा कदापि बन्न सक्दैन । वास्तवमा सत्य कसैको पेवा होइन । प्रस्तुत पुस्तकले कुनै पनि व्यक्तिको आधिकारिकताको माग गर्नुपर्ने आवश्यकता देख्दैन । सत्य, शान्ति वा मुक्तिलाई कसैले पनि आधिकारिताको माग गरी कैद गर्नु भनेको कहिल्यै पनि उपचार गर्न नसकिने मानसिक रोगको सूत्रपात गर्नु गराउनु हो । यहा सही र गलतको व्याख्या लोकप्रियताको आधारमा गर्नुहुँदैन भन्दै डर,बन्दुक वा स्वर्गप्राप्तिका साधनहरूले मानिसको मस्तिष्कमा प्रभाव जमाइ आफ्नो बहुलठ्ठीपनलाई सही प्रमाणित गर्न व्यावसायिकताको खास्टो ओडेका कुनै पनि धर्म,पार्टी र स्कूल पछाडि नपरेको कुरा हाम्रो सामु छर्लङ्ग भइराखेको कुरालाई बिना पूर्वाग्रह देखाउन खोजिएको छ ।

अविभेद धार्मिक सत्यताले प्रकृतिलाई प्रकृति भित्रै र प्रकृतिद्वारा नै परिवर्तन हदै जाने अन्तिम यथार्थको रूपमा वैज्ञानिक विश्लेषण गर्दछ । प्रत्येक प्रक्रियाहरूको प्राकृतिक सम्पादन गर्नुमा नै मानव स्वयम्को धार्मिक स्व-बोधको प्रक्रिया अर्न्तनिहित रहने कुरालाई स्पष्टसँग औंल्याउन खोजिएको छ ।

मौलिकताको प्रस्तुति केवल वर्तमानमा मात्र सम्भव हुन सक्ने भएकोले सम्पूर्ण विधि र विगत ज्ञानको विष्फोटन अपरिहार्य हुन आउँदछ । वर्तमान भौतिक तथा प्राविधिक प्रगति र विकास विचारको कार्यगत मूल्यको परिणाम हो तर अति सुक्ष्मरूपमा सिर्जना गर्न पुगेको मानसिक समस्याहरूको समाधान भने विचारबाट असम्भव हुने कुरालाई वैज्ञानिक तरिकाले औंल्याउन खोजिएको छ ।

वर्तमान समयको विभाजित, व्यावसायिक र जागिरोन्मुख शिक्षा प्रणालीले शिक्षकले प्रदान गर्ने शिक्षा शिक्षकबाट कुनैपनि हालतमा विभाजन हुन नसक्ने यथार्थतालाई बेवास्ता गर्दै किताबोन्मुख घोकन्ते एकोहोरो गुल्देवो भवः को शैक्षिक परम्परालाई कायम राख्न खोजेको कुरामाथि तीव्र प्रहार गरिएको छ । वास्तवमा यो पुस्तक सजीव हेराइ र श्रवणको लागि बाधक बन्न सक्ने कुरालाई पनि गम्भीरतापूर्वक औंल्याउन खोजिएको छ ।

प्रस्तुत पुस्तकले निःस्वार्थी बन्नेभन्दा पनि स्वार्थी भएको कारणले निःस्वार्थ बन्नुपर्ने धारणा विकसित गराइरहेको र उक्त धारणाले गर्दा नै तथ्यको धरातललाई उपेक्षा गराइरहेको कुरालाई सम्वादको माध्यमद्वारा समाधान गर्न सकिने र सम्पूर्ण मानव जातिले अस्तित्वको सजीव सम्बन्धको स्व-बोध वर्तमान समयमा स्वयम् आफूले आफ्नो व्यावहारिक धरातलमा गर्नुपर्ने घोषणा गरेको छ, अन्यथा विश्व तथाकथित शान्ति र सेवाको नाउँमा विध्वंशको मार्गतिर अग्रसर भइरहेको छ र भविष्यमा भइरहने कुरा निश्चित छ ।

**- युवराज तिमिल्सिना, २०६५ मंसिर**

# मानव जीवनमा प्रश्न यसरी बीजारोपण हुन्छ !

वि.सं २०३९ साल चैत्र महिना १२ गते सोमबार बिहान,एउटा हिन्दु पारिवारिक परिवेशमा हुर्कंदै गरिरहेको सरकारी विद्यालयको कक्षा ४ मा अध्ययनरत ११ वर्षे एक छात्र सदा झैं बिहान ६ बजे उठ्दछ र दैनिक बिहान गर्नुपर्ने नियमित काम गरी चिया लिएर पढ्न बस्दछ । उक्त दिन स्कुल विदा भएको र सोही दिनमा नै घरमा आफ्नो बुवाले हजुरआमाको श्राद्ध गर्नुपर्ने तिथि परेकोले विहानैबाट घरको वातावरणमा अलि फरक भएको महसुस गर्दछ । यसै क्रममा पढिरहेको छोरालाई उसका बुवाले गाईको गोबर र दूध लिएर आउने भनी आज्ञा गर्नुहुन्छ । गाईको दूध र गोबर लिएर घरमा आउँदा श्राद्ध गर्नको लागि भनेर आउनुभएको पण्डितबासँग भेट हुन्छ र आफ्नो शरीर झुकाइ पण्डितबाको खुट्टामा हातले स्पर्श गरी हिन्दु संस्कारअनुसारको अभिवादन प्रकट गर्दछ । तत्पश्चात् केही फुलपाती जम्मा गरेर ल्याउनु पर्ने आज्ञालाई शिरोपर गर्दै अगाडि बढ्ने क्रममा गुरुबाले भुइँमा पिठोले विभिन्न किसिमका रेखीहरू कोरिरहेको देख्दछ तर उक्त रेखी कोर्नाको अर्थ प्रति प्रश्न चिन्ह खडा गरी जान्न खोज्नुभन्दा बरु केवल परम्परागत शैलीलाई स्वतः स्वीकार गरी अगाडि बढ्नुबाहेक अन्य सजिलो काम केही पनि नभएको महसुस गरी आफ्ना पाइलाहरू अगाडि बढाउँदछ ।

घरमा फूलपाती टपरीमा लिएर आउँदा विभिन्न नातेदारहरूको बीचमा आफूलाई पाउँदा खुसीका साथ उनीहरूसँग नमस्कारको आदानप्रदान गर्दछ । आमाले टपरीमा राख्नुभएका चामल, नुन, घिऊ आदि पण्डितबालाई दिने लगायत अन्य श्राद्धसँग सम्बन्धित कामहरू गर्दागर्दै ११ बजिसकेको हुन्छ । भोकले आत्तिए तापनि श्राद्ध नसिद्धिइकन पण्डितबाको हातबाट पहेंलो टीका नलगाइकन खाना खाने अनुमति शास्त्रले नदिने भन्ने कुरालाई मनमा राख्दै केवल पर्खेर हेरिरहन्छ ।

श्राद्ध सिद्धिएपछि उसले खाना खान्छ र साथीहरूसँग खेल्न बाहिर निस्कन्छ । खेल खेल्दै गर्दा ४ बजेको थाहै हुँदैन । अचानक ऊ सदाझैं क्रिश्चियन स्कूलमा टयुसन पढ्न जाने कुरा सम्झन्छ र तुरुन्त घरमा आएर किताब कापी लिएर स्कूलतिर लाग्दछ । उसले स्कूलको गेट बिस्तारै खोलेर केही पाइलाहरू अगाडि बढाउनेबित्तिकै स्कूलको प्रमुख व्यक्तिसँग जम्काभेट हुन्छ । उसले आफ्ना दुई हात जोडेर अभिवादन गर्ने क्रममा ऊ आफूले आफूलाई एउटा ठूलो छाँगाबाट खसेको अनुभूति गर्न पुग्दछ । आफ्नो निधारमा पहेंलो टीका लगाई स्कूलभित्र प्रवेश गरेको गल्तीलाई सम्झँदै गर्दा अचानक झस्कने गरी रुखो स्वरमा शिक्षकले आफ्नो नाम बोलाएको सुन्न पुग्दछ । ऊ अवाक् भई जहाँको तहीं उभिइरहने आदेशको पालना गर्दै निर्दोषिताको परिचय दिन्छ । त्यसपछि शिक्षकबाट इशाई धर्मअन्तर्गत टीका र मूर्ति पूजाको पूर्ण अस्वीकृत गरेको कुरालाई लिएर अति कठोर र उत्तेजित भई रिसाएर आफूमाथि लगातार शब्दहरूको आक्रमण भइरहेको अनुभूति गर्दछ । परमेश्वरलाई हेलचक्र्याइँ गरी नडराएमा जीवन अस्तव्यस्त भई मरेपछि नरकमा पर्ने कुरालाई अति उत्तेजित भाषामा शिक्षकले अभिव्यक्त गरिरहेको कुरालाई डराएर सुनिरहन्छ । तिम्रो भगवान् शिव र रामले मूर्ति पूजा माने पनि यहाँ आउँदा सदा तिमीले निधार सफा गरेर आउनुपर्ने स्कूलको नियम स्मरण गराउँदै आफ्नो इशाई धर्म हिन्दु धर्मको तुलनामा विभिन्न तरिकाले सर्वश्रेष्ठ भएको कुरालाई केवल मौन भई उभिएर सुनिरहन्छ । त्यसपछि शिक्षकको अत्यन्त कडा निर्देशन मुताबिक गेटबाहिर गई आफ्नो निधारमा भएको टीका हातले पुछ्दा अचानक कहीं कतै भित्रबाट प्रश्नहरूको बिष्फोटन हुन पुग्दछ ।

घरमा बस्दा आमाबुवाले गाई काटेर खाने धर्ममा लाग्नुहुँदैन भनिदिएको मानसिक दबाव र अहिले निधारमा लगाएको टीका बाध्य भएर फाल्नुपर्दाको पीडाले नयाँ गतिको सुरुवात् भएको अनुभूति गर्दछ । ईश्वर एक छन् भनेर भनिए तापनि किन कुनै धर्म अन्तर्गत अति आदर र सम्मानपूर्वक आफ्ना मान्यजन र गुरुहरूबाट ग्रहण गरिने टीका अर्को धर्मको लागि बाधक बन्न पुग्दछ ? भन्ने प्रश्नले उसलाई घचघच्याउन थाल्दछ । सबैले स्वर्ग, शान्ति र हरियाली स्वच्छ वातावरणको वकालत गरे तापनि पृथ्वीमा किन ईश्वर,मानव-धर्म,वातावरण र सेवाको नाउँमा गालीगलौज,हिंसा,हत्या र प्रदूषणले जरो गाडिरहेको छ भन्ने प्रश्नले उसलाई अन्वेषणको धरातलमा उभ्याइदिन्छ ।

आफ्नो निधार सफा गरी स्कूलभित्र प्रवेश पाएर पढ्न लागे तापनि आन्तरिक धरातलमा एउटा अनन्त यात्रासँग सम्बन्धित प्रश्न उब्जिरहन्छ, त्यो हो- आखिरमा सत्य, ईश्वर,शान्ति,युद्ध, सेवा वा प्रेम भन्ने कुराहरू के हुन त ? यही प्रश्नको परिणामस्वरूप उत्पन्न हुन पुगेको पुस्तक हो- मानव जीवनको घोषणापत्र ।

## विषय सूची

# खण्ड-एक

# सत्य छ।

# ("TRUTH IS.")

यहाँ सत्य छ, वास्तविकता छ तर विभिन्न तर्कहरू दिएर विद्वता प्रदर्शन गर्दै विभिन्न साम्प्रदायिक साङलाहरूमा अल्झाएर समग्र सत्यतालाई खण्डित गर्नमा सफल भएका छन् - हाम्रा धार्मिक र राजनीतिक पार्टीहरू। एक-अर्काप्रति बनाएका प्रतिकूल सिद्धान्त र वादहरूको कथित सुरक्षाका लागि एकआपसमा हिंसा र युद्ध गर्ने गराउने कुराले परहत्याभित्र आत्महत्याको भ्रूण सलबलाइरहेको तथ्यलाई अनुभूति गर्न असफल भइरहेको छ -संसारको कथित सर्वोत्कृष्ट चेतनशील सामाजिक प्राणी। निर्दोष विद्यार्थीहरूको बस्तुगत विवेचना गर्ने क्षमतामा खिया लगाउन सफल भएका नेता र गुरुहरूको सुरक्षाको निम्ति भनेर लडिने प्रत्येक युद्धोन्मुख खेलले व्यापकता पाएको यथार्थता स्पष्ट छ। कसैको आड लिएर गरिने मन-मस्तिष्कभित्रको अध्ययन र अवलोकनबाट आउने कथित स्वतन्त्रताले अधिनायकवादतिर उन्मुख गराउँदछ। पराश्रित प्रवृत्तिमा लतपतिएका व्यक्तिहरू कुनै पनि पारदर्शितालाई देख्न सक्ने स्व-निंभरता र नैतिक दायित्वबोध गर्नसक्ने शक्तिलाई कमजोर बनाएर बस्तुतः हुनुपर्ने वा गर्नुपर्ने कुरा के हो र के भइरहेको छ भन्ने कुराको बोध गर्न नसक्ने स्थितिमा पुगेको पाइन्छ। प्रत्येक मानवको स्वभावमा पलाइरहेको साँघुरो आत्मलाभमै मात्र लक्षित हुने अन्तर्निहित वास्तविकतालाई उदाङ्गो नपारेसम्म यहाँ कुनै अवतारले केही गर्न नसक्ने कुरालाई स्पष्ट पार्नु पर्दछ। कुनै पनि व्यक्तिको कमीकमजोरीबाट उत्पन्न हुने हीनताबोधले पलायनका अनेक उपायहरू अवलम्बन गर्न बाध्यता वा प्रोत्साहन गर्न लगाई बलीको बोका बनाउने कथित गुरु र नेताहरूका पराश्रित बाटाहरू प्रशस्तै पाइन्छन्। भौतिक रूपले पराश्रित हुनुपर्ने वास्तविकतालाई

स्व-बोध गरी मनोवैज्ञानिक आश्रितपनलाई विष्फोट गराई सुषुप्तावस्थामा रहेको उर्जालाई जागृत गर्नुपर्ने आवश्यकता देखिएको छ। समस्याको बौद्धिक व्याख्यानमा अल्झिनु नै यान्त्रिकताको सिक्रीद्वारा आफूलाई बाँधी आफूले गरिरहेको नरसंहारकारी युद्धको निरन्तरतालाई प्रमाणित गर्न पुगिने वास्तविकतालाई अभिव्यक्त गर्ने एउटा गतिशील सञ्चारको माध्यम आवश्यकता परेको छ। कुनै पनि व्यक्तिको विचार एवं अवधारणाहरूलाई कुनै आकार विशेषमा ढाली आफ्नो वा कुनै नेताको सर्वोत्कृष्टता प्रदर्शन गर्ने गराउने प्रयास हावी भएर गएको कुरालाई अनुभूति दिलाउने माध्यम चाहिएको छ। एक-अर्काप्रति असम्वेदनशील,पलायन तथा शरणागत विचार र दुविधाले ग्रसित परपीडामा आनन्दित हुने मस्तिष्कले मानवीय मौलिकतालाई नष्ट गरेको छ। **गहन मैत्रीभावका साथ व्यक्तिहरूले सँगालेर राखेका अवधारणा र पूर्वाग्रहका अवशेषहरूलाई विसर्जनमात्र नगरी बरु तिनीहरूको सुरक्षार्थ उठाइने सम्पूर्ण तर्कका पर्खालहरूलाई भत्काउँदै रचनात्मक सहयोग र समर्थनको ढोका खुलाउन सक्ने साधन आवश्यक परेको छ।** प्रत्येक जीवले सामना गरिरहेको दुःख कष्टसित समानरूपमा सरोकार राखेर पृथकतावादी प्रवृत्तिलाई विर्सजन गर्दै अगाडि लैजाने माध्यमको आवश्यकता सबैले अनुभूति गर्नुपर्ने समय आइसकेको छ। अरूले वा स्वयम् आफूले आफैंमाथि लादिएका परिचयसूचक विल्लाको औचित्यलाई अर्थहीन गर्दै जीवनको आन्तरिक तथा बाह्य परिवेशका घटनाहरूलाई अन्वेषण गर्ने एउटा विशुद्ध मानवीय दृष्टिले ओतप्रोत भएको माध्यम आवश्यकता परेको र उक्त अन्वेषणलाई अग्रगति दिन र सत्यताको अनुभूति गराउन सम्वाद एउटा सफल र सशक्त माध्यम हुन सक्ने कुरालाई सर्वप्रथम सम्वाद र वादविवादको परिभाषा तथा स्वभावबाट प्रारम्भिक स्व-बोध गर्न सकिन्छ।







## सम्वाद र वादविवाद – चेतनाको विश्वव्यापी खेल
## (Dialogue and Debate- Universal Game of Consciousness)

सम्वादको माध्यमद्वारा यथार्थताको अनुभूति गर्दा आउन सक्ने कठिनाइलाई सजिलैसँग समाधान गर्नको लागि सर्वप्रथम सम्वाद के हो र सम्वादको प्रकृति कस्तो हुन्छ भन्ने बारेमा बुझ्नु पक्कै पनि राम्रो कुरा हो।

**सम्वाद** शब्दको अर्थ वृहत् शब्दकोश अनुसार वार्तालाप,परस्परको कुराकानी भनेर परिभाषित गरेको पाइन्छ तैपनि यसको अर्थलाई त्यतिमा नै सीमित गर्न अनुकूल होला जस्तो देखिदैन। सम्वाद शब्दको समास विग्रह गर्दा **सम् र वाद** हुन जान्छ। सम् को अर्थ बराबर, समान वा निष्पक्ष भन्ने बुझिन्छ भने 'वाद'को अर्थ सारकुरा पत्ता लगाउनका निमित्त गरिने तर्क, विचार वा छलफल भन्ने बुझिन्छ। यसरी दुवैलाई मिलाउँदा **सम्वाद भन्नाले कुनै पनि विषयको सार तत्व निष्पक्ष रूपले चिन्तन र छलफलद्वारा पत्ता लगाउने प्रक्रिया नै सम्वाद हो** भन्ने अवगत हुन्छ जब कि **वादविवाद भन्नाले कुनै पनि विषयको सारतत्व पत्ता लगाउनमा खेलिने प्रतिकूल भावनालाई जनाउँदछ जसले समन्वयभन्दा पनि बढी विभाजनतर्फ उन्मुख गराउँदछ।** विवादले जहिले पनि जीतहारको गुण जाहेर गर्दछ तर सम्वादमा कसैले पनि कसैलाई जित्न सक्दैन। सम्वादमा कुनै एक व्यक्तिको जीत सबैको जीत हुन पुग्दछ। वादविवाद अन्तर्गत आफ्ना कुराहरू खुला भएर राख्न नसकिने स्थिति सिर्जना गर्ने वा गराउने भएकोले वादविवाद अन्तर्गत गम्भीरता र सम्वेदनशीलता पाउन सकिदैन।

हामीले वरिपरि देख्ने र सुन्ने गरेका छलफलहरू विशेषतः विवादयुक्त प्रकृतिका हुने गर्दछन् जहाँ आफ्ना कुराहरू खुला भएर राख्न नसकिने स्थिति सिर्जना हुने वा आफ्ना कुराहरू आदान प्रदान गर्नबाट बन्चित राख्ने वा राख्न लगाउने भएकोले कतिपय विवाद त पाखण्डपूर्ण हुन्छन् जसले यथार्थतालाई लुकाएर काल्पनिक आदर्शलाई प्रस्तुत गरी स्वयम्ले स्वयम्लाई धोका दिइराखेको पाइन्छ। यसको विपरीत सम्वादमा सहभागी स्वयम्ले देखेर, सुनेर र पढेर प्राप्त गरेको ज्ञानको व्यावहारिकता झल्किने गरी स्वयम्ले महसुस गरेको उतार चढावहरू स्पष्ट रूपमा प्रस्तुत गर्न सक्दछ। परिणामस्वरूप त्यस्तो स्पष्ट वास्तविक अभिव्यक्तिले कुनै एक व्यक्तिको मात्र नभई सबै सहभागीहरूभित्र निहित सम्भावनाको प्रष्फुटनलाई सजिलो बनाइदिएको हुन्छ। सम्वादअन्तर्गत कुनै पनि समस्या समाधानको दायित्व कुनै एक व्यक्तिसँग मात्र सम्बन्धित नभई सम्पूर्ण सहभागीहरूको

पनि समान दायित्व रहने हुनाले कसैले पनि आफ्नो यथार्थता वा कमीकमजोरीलाई लुकाउनु स्वयम्को लागि ठूलो घातक सिद्ध हुन जाने कुरा औंल्याउँदछ। सम्वादमा साझा सहभागिताको कुरा अस्तित्वमा आउने र समग्रताको हित रच्ने हुनाले विशेषतः यो सम्वादको खेल **एक-अर्काको विरुद्ध खेलिने खेल** नभई **एक अर्कोसँग खेलिने खेल** बन्न जान्छ जसको समापनमा सबैले जित्ने गर्छन, हार्ने कोही पनि हुँदैन।

विरोधाभासपूर्ण धारणाहरूले उत्तेजित बौद्धिक प्रतिक्रियालाई गति प्रदान गर्ने भएकोले कतिपय व्यक्तिले आफ्नो व्यक्तिगत धारणाको सर्वश्रेष्ठताको परिचय उत्तेजित रूपमा प्रस्तुत गरी मेरो विचारमा पनि कहीं केही सत्यता छ भन्ने कुरा झल्काउन खोज्दछन् तर यथार्थमा त्यो सांस्कृतिक, धार्मिक, राजनैतिक, शैक्षिक वा सामाजिक प्रणालीमा आधारित विगतका केवल साँघुरो सोचाइ र हेराइले भएको पनि हुन सक्दछ। त्यसैले यदि कसैको धारणाले समग्रतामा आधारित रहेर कुनै पनि कुराको गम्भीरता र यथार्थतालाई स्पष्ट रूपमा प्रस्तुत गरिरहेको छ भने त्यस्तो **सत्यतालाई उत्तेजित संरक्षणको आवश्यकता नै पर्दैन।** त्यस्तै यदि धारणा नै गलत सावित हुन्छ वा व्यक्ति स्वयम्द्वारा नै धारणा गलत भएको स्व-बोध हुन्छ भने पनि त्यस्तो धारणालाई उत्तेजित संरक्षणको औचित्यता नै रहँदैन। सम्वादको धरातल सामाजिक हुन्छ। सम्वादको प्राथमिक कार्य विभिन्न राजनैतिक, धार्मिक, आर्थिक तथा शैक्षिकलगायत अन्य कुनै पनि संस्कृतिहरूको पृष्ठभूमिबाट आएका विभिन्न मानिसहरूलाई एउटा समग्र अन्वेषणको अवसर सिर्जना गर्नु हो। ती विभिन्न पृष्ठभूमिबाट आएका मानिसहरूले चिन्तन मननको लागि प्रस्तुत गर्ने आफ्ना धारणा तथा तर्कहरू एक आपसमा विरोधाभास हुनसक्ने कुराको दृष्टिबोध गर्नु गराउनु नै सम्वादको महत्वपूर्ण प्रमुख कार्य हो।

सम्वादलाई कुनै पनि रूपमा कोष सङ्कलन गर्ने घटनाको रूपमा लिनुहुँदैन तर **सम्वादले कमसेकम सहभागीहरूले प्रवेशको लागि चुकाएको मूल्य बराबरको व्यावहारिक सन्तुष्टि भने दिनुपर्दछ** तर यदि कुनै व्यक्तिले सम्वादको लागि स्थान, समयको व्यवस्था गर्ने गरी कुनै न कुनै रूपमा जीविकोपार्जनका रूपमा सम्वादलाई आत्मसाथ गरेको छ भने उक्त कुरा पनि सम्वादको समयमा स्पष्ट पारिएको हुनुपर्दछ।

सम्वादको वास्तविक मूल्य प्रस्तुत गरिएका धारणा वा तर्कहरूमा भन्दा ती धारणा वा तर्कहरूद्वारा ल्याइएका वा ल्याइने उत्तेजित बौद्धिक प्रतिक्रियामा रहेको हुन्छ। सम्वादअन्तर्गत खेल्ने र लिनुपर्ने महत्वपूर्ण कुरा भनेको कुनै पनि विचारले उत्पन्न गर्ने प्रतिक्रिया नै हो। जब व्यक्तिहरूबीच हुने सम्वादलाई अन्त्य गरेर स्वयम् आफैंभित्र

यदि बदल्नु नै छ भने सर्वप्रथम वर्तमान समयमा आफूले आफूलाई बदलौं, संसार स्वतः बदलिनेछ।





क्रिया-प्रतिक्रिया गर्न थाल्दछ तब उसलाई आन्तरिक तनाव उत्पन्न हुन थाल्दछ र त्यो तनाव यति ठूलो बन्न पनि सक्दछ कि शान्त भएर बसेको अवस्थामा पनि अकस्मात् प्रतिक्रिया आउन थाल्न सक्दछ। कुनै समाधानको बाहिरी बाटो नपाएर सोच्दा सोच्दै थाकेर स्वयम् निराश भएर बस्ने अवस्था आउन पनि सक्दछ। यसरी **स्वयम्भित्र हुनसक्ने सम्भावित गहिरो उत्तेजित नैराश्यको प्रतिक्रियाले कुनै पनि व्यक्तिलाई प्राकृतिक रूपले व्यक्तिगत धरातल भित्र प्रवेश गराउँदछ।** सम्वादमा भाग नलिएर नैराश्यको आगमन भएन भनी खुशी मान्नु एउटा चलाखी बहाना बाहेक अरू केही हुन सक्दैन किनभने कुनै पनि परिवार, समाज, संघ-संस्था तथा देशभित्र भइरहेको घट्नाक्रम तथा व्यवहारले नैराश्यको असीमितता प्रस्तुत गरिराखेको स्पष्ट छ र सम्वाद केवल नैराश्यको मार्गमात्र होइन। सम्वादअन्तर्गत उत्पन्न निराशालाई सम्वाद प्रक्रियाबाट अलग राख्न सकिंदैन र निराशा सम्वाद प्रक्रियाको एउटा आवश्यक उपजको रूपमा लिनुपर्दछ। निराशालाई बुझ्नु वा अवलोकन गर्नुको सट्टा त्यसबाट टाढा जाने प्रवृत्ति हाम्रो संस्कृतिमा विद्यमान रहेको पाइन्छ जसको परिणामस्वरूप नैराश्य पीडाको पूर्ण अनुभूति गर्नबाट बञ्चित भएको पाइन्छ। नैराश्यले सहजकर्ताको माग गर्दैन। निराशाले सम्वादलाई अझ बढी गहिरो अज्ञात क्षेत्रतिर अग्रसर गराई अन्ततः सिर्जनात्मक अन्तर्दृष्टि प्राप्त गराउँदछ।

जो व्यक्तिसँग गम्भीरता र सतर्कता छ उसले जुनसुकै घट्नाक्रमबाट पनि आफूभित्र उत्तेजित भावनाको प्रतिक्रिया सञ्चारित भएको अनुभूति गर्न सक्दछ। **स्वयम्ले स्वयम्का प्रतिक्रियाहरूको अनुभूति सर्वप्रथम स्वयम्द्वारा गर्नुलाई अन्तर्मुखी अन्तरक्रिया भनेर भनिन्छ।** प्रतिक्रिया छैन भने त्यहाँ अन्तर्मुखी अन्तरक्रिया गर्नका लागि केही पनि रहँदैन। यसरी यस अर्थमा सम्वादको काम भन्नु नै यही अन्तर्मुखी अन्तरक्रिया विकासको लागि अवसर प्रदान गर्नु हो।

सम्वाद केवल दुई वा सोभन्दा धेरै व्यक्तिहरूको बीचमा मात्र नभई **कुनै एक व्यक्ति स्वयम्भित्र पनि सम्वाद हुन सक्छ।** सम्वादको स्वभावले शब्द वा वाक्यहरूको अर्थको गतिलाई व्यक्तिहरूद्वारा व्यक्तिहरूबीचमा निष्पक्ष रूपले प्रवाहित गर्नु गराउनु र कुनै नयाँ बुझाइ व्यक्तिहरू स्वयम्मा अनुभूति गर्ने सामर्थ्य ल्याउनुमा रहेको हुन्छ। सम्वादको समयमा धेरै नबोल्ने सहभागीहरू व्यक्तिगत धरातल (स्वयम्भित्र) मा धेरै नै सक्रिय भइरहेका हुन सक्छन्। अन्तर्भिमुख अन्तरक्रियामा व्यस्त भइरहेका व्यक्तिहरूबाट पनि मित्रवत तरिकाले धेरै कुराहरू सिक्न सकिन्छ। हामीले जसरी

विचारले खेलेको विध्वंसकारी खेलको अनभिज्ञता नै अज्ञानता हो।

वस्तुहरूसँग खेल्दा सिकाइको अर्थात् वस्तु सचेतताको विकास हुन्छ त्यसरी नै स्वयम्ले स्वयम्को प्रतिक्रियाहरूसँग खेल्दा स्व-सचेतताको विकासमा परिवर्तन आउँदछ। अर्को शब्दमा **अन्तर्मुखी अन्तरक्रिया भन्नु नै स्व-सचेतताको विकासमा स्वयम्लाई सामर्थ्यवान् बनाउनु हो।** स्व-सचेततासँग धेरै नै स्व-सुधारका कार्यहरू तथा नयाँ समाधानयुक्त सम्भावनाका कार्यहरू पनि खुला रहेका हुन्छन। स्व-सुधार र सम्भावनाका कार्यहरू खुल्न सक्ने गतिशील प्रक्रियाको परिणामस्वरूप जो कसैले पनि म को हुँ ? अर्थात् मेरो अस्तित्व भनेको के हो ? भन्ने प्रश्न स्वयम्ले खडा गर्न पुगी उक्त प्रश्नसँग सम्बन्धित उत्तरको खोजतलासमा अग्रसर गराउँदछ। यसरी क्रमैसँग जो कसैले पनि अस्तित्व वा परिचय एउटा बौद्धिक आविष्कार (जे म सोच्छु र तर्क गर्छु त्यही म हुँ) हो भन्ने अनुभूति गर्न थाल्दछ। जसरी कुनै पनि व्यक्ति अन्य कुनै विचार वा वादलाई आफैंले नै बनाएको आफ्नै वाद हो वा हो कि जस्तै गरेर खेल खेल्ने गर्दछ ठीक त्यसरी नै **म** आफ्नो परिचयसँग खेल खेल्न तत्पर भइरहेको कुरा पत्ता लगाउन पुग्दछ। यसरी मानसिक रूपले विकसित यस्तो खेलको ढाँचाको वास मस्तिष्कमा भएको स्पष्ट अनुभूति हुन जान्छ। परिणामस्वरूप **म** भन्ने कुरा पनि अन्य वादहरू जस्तै एउटा वाद वा धारणा हो जसलाई विभिन्न नामहरू दिएर श्रृङ्गार गरिएको नाटकलाई अनुभूति गर्न पुग्दछ। मको अस्तित्व भन्नु केवल विचार स्वयम्ले निर्माण गरेको प्रतिबिम्ब नै हो। **म** मनोगत रूपमा केही बन्न खोज्नु स्वयम्ले स्वयम्लाई धोका दिनुबाहेक केही होइन भन्ने स्पष्टताले अब **म** लाई केही पनि बन्न नसकिने अवस्थासँग सामना गर्नुपर्ने अन्तर्दृष्टि प्राप्त हुन्छ। त्यस्तै सीमितताको अनुपस्थितिको अर्थ हुन्छ कि म (यहाँ **म** केवल सञ्चार सन्दर्भको लागि मात्र प्रयोग गरिएको हो) असीमित हुँ। जो कोही व्यक्तिले पनि मनोगत सीमितताको **म** लाई विस्फोट गराउनुको अर्थले स्वयम्को मनोवैज्ञानिक परिचयको अस्तित्वलाई त्यागी अब मनोगत रूपमा केही पनि बन्न नसक्ने कुरालाई औंल्याएको हुन्छ। यहाँ **शारीरिक "म" अर्थात् स्व** को अस्तित्वको सार्न्दभिकता र **मनोगतरूपमा विकसित भै रहेको "म" अर्थात् स्वयम्** को असार्न्दभिकतालाई औंल्याउन खोजिएको हो।

स्वयम्लाई अर्थात् मनोवैज्ञानिक **म** लाई त्याग गर्ने कुरा त्यति सजिलो छैन। विशेष चलाखीका साथ मनोगत **म** ले प्राकृतिक स्व-प्रतिरक्षा प्रणालीलाई हतियार बनाई प्रयोगमा ल्याएर प्रतिक्रिया दिनुपर्ने नियम प्रतिपादन गर्न लगाउन सक्छ तर त्यसरी गरिने कुनै पनि प्रतिक्रिया स्वयम्मा वाहियात हुने र त्यस्तो प्रतिक्रियाले मनोगत **म** अर्थात् स्वयम्लाई नै अस्तित्वमा ल्याउने गर्दछ। अर्को शब्दमा, कुनै पनि प्रतिक्रिया गर्नु नपर्ने





कारण पत्ता लगाएर बरु यही मनोगत **म** को प्रतिरक्षा प्रणालीको अस्तित्वले नै व्यक्तिलाई ब्रह्माण्डको धरातलको ढोका खुल्नबाट वञ्चित गराइरहेको तथ्य उद्घाटित हुन पुग्दछ। मनोगत म को प्रतिरक्षा प्रणालीहरूमाथि प्रतिक्रिया नगर्नको लागि चाहिनुपर्ने अति आवश्यक कुरा **तीव्र भावना** हो अन्यथा कुनै पनि व्यक्ति प्रतिक्रियायुक्त चक्रमा प्रवेश हुन पुगी व्यक्तिगत धरातलभित्र कैद भइरहन्छ।

सम्वादरत अवस्थामा तीव्र भावनाको अर्थ सक्रिय काम गर्नु होइन बरु कार्य गर्न दिनु वा दिलाउनु हो। तीव्र भावना उत्तेजित बौद्धिक प्रणालीको निष्क्रयता हो। तीव्र भावनाले स्वयम्को महत्वको अर्थलाई प्रतिक्रियाविना नै अगाडि जान दिई निष्क्रियताको भूमिकालाई अवलोकन गर्न सक्ने सामर्थ्य प्रदान गर्दछ। सीमितताको विलिनको अर्थ उत्तेजित तथा बौद्धिक सीमाहरूको विष्फोट हुनु वा छिन्नभिन्न हुनु हो। जब सीमितता विलीन हुन्छ तब त्यहाँ स्वतन्त्रता आउँदछ। यसरी **यो एउटा यस्तो मार्ग हो जुन सम्वादबाट सुरु भएर अन्तर्मुखी अन्तरक्रिया हुँदै स्व-सचेतता र तीव्र भावनालाई अगाडि बढाउँदै स्वतन्त्रतातिर अग्रसर गराउँदछ।** यसरी स्वतन्त्रतालाई चुकाउनु पर्ने मूल्य नै आखिरमा स्वयम्को विलीनता हो। एउटै समयमा एकै ठाउँमा स्व अर्थात् प्राकृतिक शारीरिक म ***(स्वतन्त्रता)*** र मनोगत म अर्थात् स्वयम् ***(सीमितता)*** को अस्तित्व एकसाथ रहन सक्दैन।

कुनै पनि संगठनअन्तर्गत अस्तित्वमा रहने सजातीय विचारहरूको समूहले एक आपसमा विभाजित हुन सक्ने डरले देखाउने समन्वय, सहनशीलता वा त्यागले न त एकतालाई बुझ्न सक्दछ न त स्वतन्त्रतातिर नै उन्मुख गराउन सक्दछ। जबसम्म स्वतन्त्रता हुँदैन तबसम्म प्रेम र सिर्जनाको अस्तित्व सम्भव हुँदैन। प्राकृतिक प्रज्ञाले स्वतन्त्र कार्य गर्ने कुरा सिर्जनात्मक कार्यको लागि पूर्वसर्त हो। प्राकृतिक प्रज्ञाले स्वतन्त्रतापूर्वक तब काम गर्न सामर्थ्यवान् हुन्छ जब बौद्धिक सीमितताहरूले आ-आफ्नो स्थान-महत्व ग्रहण गरी एकीकृत समग्रतातिर उन्मुख हुन्छन्। त्यस्तै गरेर उत्तेजित रोकावटहरूको अनुपस्थितिले प्राकृतिक भावनाहरूको स्वतन्त्र गतिलाई सहज गराउँदछ र प्रेमको द्वार खोल्दछ। यसरी स्वतन्त्रताले प्रेम र सिर्जनात्मकतातिर डोऱ्याउँदछ। मानिस सामाजिक प्राणीको नाताले सामाजिक दायित्वको भावना पनि हुनु स्वाभाविक मानिन्छ। हामी स्वयम्बाट स्वतन्त्र हुनुपर्ने देखिन्छ ता कि असीमित अन्तर्विवेक सञ्चालनमा आइराखोस्। प्रेमले भरिएको सिर्जनात्मक कार्यले सायद समाजभित्र कुनै न कुनै रूपमा केही काम गरिरहेर सामाजिक दायित्व पनि निभाइरहेको हुन्छ। यदि समाजमा

परिवर्तनशीलताको कुरालाई प्राकृतिक रूपमा लिइएको हुन्छ भने प्रेम र सिर्जनाद्वारा सामाजिक रूपान्तरण ल्याउन सकिन्छ र  कुनै पनि व्यक्ति पुनः सामाजिक धरातलमा सहंजै प्रवेश गर्न सक्दछ।

सम्वादले विचारहरूको उपजमा भन्दा पनि वैचारिक प्रक्रियामा दृष्टि राख्दै त्यस प्रक्रियामा कसैले पनि कसैलाई भोगविलास,चाप्लुसी वा त्यस्तै प्रकारको सन्तुष्टि दिने वा लिने कुरालाई स्थगित गरेमा मात्र सम्वाद-समयको अन्तरालमा सिकाइले महत्वपूर्ण स्थान ग्रहण गर्न पुग्दछ। **सिकाइ**ले समुहको कामलाई सुधार गर्छ नै भन्ने जरुरत भने हुँदैन किनभने समुह  जहिले पनि अज्ञात क्षेत्रभित्र अग्रसर भइरहेको हुन्छ। जे भए तापनि त्यस्तो सिकाइअन्तर्गतको क्रियाकलापहरूमा परिवर्तन गर्न वा हुन सक्ने झुकाव भने रहनुको साथ-साथै सिर्जनशीलता प्रष्फुटित गराउन सक्ने स्वभाव पनि निहित रहेको हुन सक्दछ।

कुनै पनि वक्ताले यदि पक्ष-विपक्षका विचारहरू विरोधाभासयुक्त छन् वा देखिन्छन् भने त्यसलाई एक अर्को पक्षका बीच बाझिन पुगेको कुरालाई स्पष्टसँग राखिदिने र औंल्याइदिने  गर्नुपर्छ ता कि  सबै पक्षले वक्ताले गरेको कामलाई ध्रुवीकरण गरेको आँखाले नहेरी वरु विरोधाभासपूर्ण विचारलाई छर्लङ्ग पारी वुझाउने काम गरी तटस्थ रहनुबाट माथि उठेको भावनाको अभिव्यक्ति सञ्चारित गरेको स्पष्ट होस्। **कुनै पनि सहभागीले धुवीकरणमा लाग्नुको सट्टा बरु ध्रुवीकरणको औचित्य र सीमिततालाई छर्लङ्ग पार्नुपर्दछ।**

यादविवाद, द्वन्दअन्तर्गत सम्झौतालाई समाधानको माध्यम मान्न सकिए तापनि **सम्वाद अन्तर्गत कुनै पनि सम्झौता-समाधान बन्न सक्दैन**। सम्झौता भन्ने कुरा हारभन्दा पनि नराम्रो कुरा हो किनभने सम्झौताअन्तर्गत दुवै पक्षले केही अंश ठगिएको अनुभव गर्दछन्। सम्वाद सम्झौता होइन। यदि सम्वादअन्तर्गत कुनै निर्णय गरिन्छ भने त्यो सम्वादित पक्षहरूबीचमा एक र अन्तिम हुन जान्छ र त्यो निर्णय सर्वमान्य र सर्वबोध हुन्छ र हुनुपर्दछ। सम्वादअन्तर्गत पछ्याउनुपर्ने कुनै पनि औपचारिक नियमको अनुपस्थितिबाट मात्र **सुमधुर मिलन प्रवाह** सम्भव हुन्छ।

स्वतन्त्र रूपमा चलेको सम्वाद प्रक्रियामा स्वभावतः यो मिलन प्रवाह घट्दछ। मिलन भन्ने वित्तिकै **सँग वा साथ** भन्ने साधारण अर्थ बुझिन्छ जसले पूर्णताको दिशातिर लैजान्छ। नियमहरूको पालना गर्नुपर्ने वा कुनै घटना घट्ने वा घटाउने आस लिएर गरिएको प्रभावमूलक सम्वाद वा सहजकर्ताद्वारा निर्देशित सम्वादमा भने त्यस्तो स्वतः

यदि बदल्नु नै छ भने सर्वप्रथम वर्तमान समयमा आफूले आफूलाई बदलौं,संसार स्वतः बदलिनेछ।





घट्ने मिलनको गतिले ठाउँ नपाउन पनि सक्दछ। सम्वादअन्तर्गत कुनै पनि कुरामा प्रकाश पारेर सहमतिमा आउन नसकिने होइन तर त्यस्तो सहमति सम्वादको नियम बन्न जान संक्ने कुरामा भने सतर्क हुनुपर्ने देखिन्छ।

वादविवाद यान्त्रिक हुने भएकोले उद्देश्यविना वादविवादले गति लिन सक्दैन तर सम्वाद प्रक्रियालाई यान्त्रिक शब्दावलीमा व्यक्त गर्न नसकिनु र सम्वाद स्व-चेतना जस्तै स्व-संगठित प्रक्रिया भएको कारणले गर्दा नै यसले कुनै पनि किसिमको औपचारिक पूर्वनिर्धारित उद्देश्यसँग सरोकार राख्दैन किनभने पूर्वनिर्धारित उद्देश्यले स्वतन्त्र अन्वेषणलाई रोकावट सिर्जना गरी एउटा निर्धारित दिशातिर जानुपर्ने बाध्यता सिर्जना गर्दछ। जसरी पानीको कुनै आकार र रङ हुँदैन त्यसरी नै सम्वादलाई कुनै आकार र रङ दिन सकिदैन। पानीलाई कुनै पनि भाँडामा राख्दा स्वतः भाँडाअनुसारको आकारमा परिवर्तन हुन पुगेजस्तै सम्वादले पनि विषयअनुसार आफ्नो आकार लिन सक्ने लोच गुण निहित रहेको हुन्छ। पानीको बहने  स्वभाव भएजस्तै अर्थहरू व्यक्तिहरूबीच बहनु सम्वादको स्वभाव हो। सम्वादले अज्ञानताको सामना गर्छ। अज्ञानतालाई साधारणतः ज्ञानको नकारात्मक पक्षमा लिइन्छ तर वास्तवमा  अज्ञानताले  सिर्जनात्मक कार्यको लागि आवश्यक आत्मनिर्भरताको अभावलाई औंल्याउँदछ।

**विचार** एक किसिमको कर्ता हो जसले नियमहरू बनाउन र लगाउन खोज्दछ परिणामस्वरूप प्राकृतिक मिलन प्रवाहको स्वतः सिर्जना हुन सक्ने सम्भावनालाई दबाएर राख्न पनि सक्दछ। त्यसैले विचारलाई शासक वा कर्ताको रूपमा नभई नोकर वा सहयोगीको रूपमा लिनुपर्दछ। सम्वादमा विचारले गनुपर्ने काम यस्तो हुन्छ कि सम्वादअन्तर्गत नियमविहीनताको परिणामस्वरूप आउन सक्ने उथलपुथललाई प्राकृतिक मिलन प्रवृत्तिले देखाएको नियमको साथमा अगाडि बढाएर लैजाने गर्दछ। त्यसैले सर्वप्रथम विचारले गनुपर्ने काम वा उद्देश्यको बारेमा सचेत भई गर्नुपर्ने सहयोगी सेवालाई दबाव दिने निरंकुश शासकीय कामलाई अन्त्य गर्नुपर्दछ तर विचार त्यस्तो दुर्लभ शासक हो जुन त्यसरी सहजै ऐच्छिक रूपमा स्वभावतः नोकरको मात्र भूमिका खेली सहयोगी खेल खेल्ने बन्नै सक्दैन र जान्दैन पनि। वास्तवमा विचार साध्य नभई केवल साधनमात्र हो। सम्वादमा यदि कुनै उद्देश्य छ भने पनि त्यो वैचारिक प्रक्रियाको अनुसन्धानभन्दा पर रहन सक्दैन। विचारले साधनको रूपमा साध्यको भूमिका खेल्न सक्ने सम्भावित खतराबाट सचेत भई आफ्नो यथास्थान बोध गर्नु पनि विचार कै कार्य हो।

सम्वाद **अनौपचारिक वार्तालाप** हो जुन जीवन र यथार्थताको बारेमा बनेका वा

विचारले खेलेको विध्वंसकारी खेलको अनभिज्ञता नै अज्ञानता हो।

मस्तिष्कसँग वर्तमान समाजको जटिलतासँग कार्य गर्नको लागि आवश्यक इन्द्रिय सचेतता तथा व्यापक दृष्टिको अभाव छ। अझ स्पष्ट रूपमा भन्ने हो भने हाम्रो मानसिक क्षमता आधुनिक समाजको कठिनाइहरूसँग काम गर्न पूर्ण रूपमा अपर्याप्त र असफल भएको छ। सरलतालाई कृत्रिमताले जटिलतामा गाडिदिएको छ।

सम्वादको अवस्थामा हामीले अल्पकालीन तथा नजिकैका समस्या तथा घटनाहरू प्रति गम्भीररूपमा प्रत्युत्तर वा सामना गर्ने गरेको पाउँदछौं जबकि दीर्घकालीन असर पार्ने घटना तर्फ भने साधारण तरिकाले प्रत्युत्तर दिने वा वास्ता नगर्ने बन्ने गरेको पाउँदछौं। हामीले कुनै पनि घटनालाई दिने प्रत्युत्तरको क्षमता तत्कालै त्यो घट्नासँग सामना गरिनुपर्ने आकस्मिकता तथा निर्भरता कति छ अर्थात् घटनाको गम्भीरता र आवश्यकता कति तीव्र छ, त्यसले निर्धारण गर्ने देखिन्छ। तत्काल भन्ने शब्दले बोकेको तीव्रतालाई घटनाहरूसँग सम्बन्धित सूचना वा खबर कुनै पनि सञ्चारका माध्यमहरू ( जस्तै टी.भी.,रडियो,पत्रिका,फोन, इन्टरनेट) बाट देखेर, सुनेर वा पढेर प्राप्त गर्ने कुरामा धेरै थोरै भए पनि भर पर्ने कुरालाई नकार्न सकिदैन। आखिरमा जस्तो सुकै भएपनि घटनासँग सम्बन्धित खबर प्रसारण गर्ने वा नगर्ने,छाप्ने वा नछाप्ने भन्ने कुरा ती सञ्चारका माध्यमहरूलाई नियन्त्रण वा सञ्चालन गर्ने नियम वा व्यक्तिहरूमा रहेको हुन्छ। हाम्रो यथार्थ जीवनमा भने कुनै पार्टी वा सम्पादकको झुकावलाई प्रश्रय दिने खालका कुराहरू मात्र प्रसारण गर्ने र छाप्ने गरेको परिणामस्वरूप तथ्यगत सूचनाबाट मानव बञ्चित हुन पुगेको पाइन्छ। वास्तवमा गहिरो रूपमा प्रभाव पार्ने र देखाउनुपर्ने महत्वपूर्ण कुराहरूलाई भने देखाउन औचित्य नभएको भनी देखाउँदैनन्। यसको अर्थ यो हुन जान्छ कि हामीले वास्तवमा कुनै घटना वा समस्यासँग सम्बन्धित विषयवस्तुबाट प्राप्त गरेका सम्पूर्ण सूचनाहरू अधुरो र अस्पष्ट हुन पुग्छन्। परिणामस्वरूप प्राप्त गरिएको विच्छेदपूर्ण अधुरो सूचनाले अपरिपक्व र अधुरो अनुभूतिको स्थितिमा ल्याउँदछ। वास्तवमा हामीलाई चाहिने प्रत्यक्ष सूचना हो। यस्तो प्रत्यक्ष सूचना वा खबरसँग भिन्दै गुण व्याप्त रहेको हुन्छ अर्थात् त्यस्तो **प्रत्यक्ष सूचनामा व्यक्तिलाई आन्तरिक रूपले स्पर्श गर्न सक्ने गुण हुन्छ।** प्रत्यक्ष सूचनाले व्यक्तिपिच्छे के घटेको छ भन्ने बारेमा मात्र सञ्चार नगरी घट्नाहरू किन र कसरी घटिरहेका छन् भन्ने बारेमा पनि सञ्चार गरेको हुनुपर्दछ।

सम्वादको सन्दर्भमा **उत्तरवायित्व** भन्नाले दायित्वको प्रत्युत्तर क्षमतालाई बुझाउँछ। यदि हामी उत्तरदायी बन्न चाहन्छौं भने हामी प्रत्युत्तर दिन सक्ने हुनुपर्दछ। हाम्रा





मथि सचेत बन्ने उद्देश्यले अग्रसर हुन्छ। हाम्रा बनाइने आफ्ना आधारभूत मान्यताहरूमाथि सचेत बन्ने उद्देश्यले अग्रसर हुन्छ। हाम्रा अधिकांश विचारहरू संस्कृतिका उपजहरू हुन्। हामीले जुन धारणा वा मान्यतालाई आफ्नो विचार भनी संरक्षण गर्न वा बचाउन खोजिरहेका छौं त्यही कारणले गर्दा नै उत्पन्न हुन जाने सीमित क्षमताको अनुभूति सम्वादले गराउँदछ। स्म्वाद प्रक्रियाकै अभ्यासद्वारा विचारको उत्पन्न तथा यसको प्रक्रियाको बारेमा अति सूक्ष्म रूपमा सचेत हुन सकिन्छ। विभिन्न मान्यताहरूले हाम्रो चेतनामा जरो गाडी वास गर्नुभन्दा पहिला नै परिस्थिति वा कार्यअनुसारको तार्किकता ल्याएर विचार वा मान्यताहरूको प्रवेशलाई औचित्यहीन बनाउन सकिन्छ। यसरी सम्वादमा परिवर्तन सम्भव हुने कुरा स्पष्ट हुन्छ। व्यक्तिहरू स्वयम्मा आएको परिवर्तनबाट नै सामाजिक परिवर्तन सम्भव हुन्छ। यसरी सम्वादअन्तर्गत गहिरो पिंधमा पुगी मानवताको पूर्ण सम्बन्धको अनुभूति गर्नुले सम्भावित क्रान्ति उत्पन्न गराउन सक्दछ।

कुनै पनि प्राकृतिक विपत्तिको बेलामा जसरी सबै मानिसहरू देश, जाति, धर्म, सिद्धान्तबाट माथि उठेर एक आपसमा आकस्मिक सहयोग गर्ने गर्दछन्, त्यसरी नै सम्वादअन्तर्गत अचानक सुमधुर मिलन-प्रवाह उत्पन्न हुन्छ। यसको तात्पर्य **साझा समस्या वा खतराले साझा तत्वको अनुभूति गराउँदछ जसद्वारा मानिसहरू एक आपसमा बाँधिन पुग्दछन्।** यही मिलन प्रवृत्तिको अर्थले नै सबैलाई समाजमा बाँधिराखेको हुन्छ जुन प्राकृतिक मानवीय स्वभाव हो। मिलन प्रवृत्ति बाह्य नभई आन्तरिक रूपमा स्वभावतः एक आपसमा आएर एकाकार हुने कार्य हो। यसले कुनै पनि बाह्य वस्तुजस्तै गम वा लिटोमा हुने लिप्तताद्वारा देखिने टँसाइ अर्थात् टाँसिने गुणलाई व्यक्त गर्दैन। मिलन-प्रवृत्ति त्यस्तो प्रवृत्ति हो जसले सबैको साझा अर्थमा रहेको संयोजनलाई जनाउँदछ र समाजको सामाजिकतालाई गहिरो रूपमा प्रतिबिम्बित गराइराखेको हुन्छ। मिलनको गति कसैको बाह्य वा भित्री दबावको परिणाम हुन सक्दैन। यो केवल समुह का व्यक्तिहरूले रुचि वा मज्जा लिंदैमा आउने कुरा होइन र यदि आइहाले तापनि त्यो मिलन-प्रवृत्ति अल्पकालीन स्वभावको हुन्छ। मिलन-प्रवृत्तिले विश्वव्यापी रूपमा कार्य गर्ने गर्दछ। मानिसमा आफ्नो मिलन-प्रवृत्तिलाई नष्ट गर्ने झुकाव हुँदैन। कतिपय अवस्थामा नचाहँदा नचाहँदै पनि मिलन-प्रवृत्ति पार्श्वअसरको रूपमा घट्दछ।

**समाज सम्बन्धको जालो हो जस अन्तर्गत कुनै न कुनै रूपमा एक आपसमा हुने विकास तथा अन्तर्निभरतालाई अस्वीकार गर्न सम्भव छैन।** वर्तमान समाजको जटिल सम्बन्धको ढाँचालाई सहजरूपमा बुझ्न कठिन छ। हाम्रो

नजिकैका घटनाहरूप्रति मात्र नभई टाढाको घटनाको लागि पनि उत्तरदायी हुन सक्नुपर्दछ। हाम्रो जस्तो दुर्बल र प्रदूषित अस्थिर समाजमा हामीलाई कुनै घटनाको बारेमा जानकारी हुनुअगावै असर पारिसक्ने कुरालाई कतिपय घटनाहरूले स्पष्ट गराइसकेको पाइन्छ।

हाम्रो प्रत्युत्तर क्षमता सम्भवतः व्यक्तिगत सञ्चारका माध्यमद्वारा नै सुधार्न वा विकास गर्न सकिन्छ। यसले अझ बढी हाम्रो सचेततालाई विस्तार गर्न सक्दछ। जे भए पनि सञ्चार सम्बन्धमा सबैभन्दा राम्रो कुरा यो हो कि सञ्चारले **अर्थको प्रवाह**लाई सम्भव गराउँदछ। सम्वाद हामीलाई आवश्यक पर्ने सञ्चारको एउटा रूप हो। यस अर्थमा सम्वाद सभालाई अर्थहरूको प्रवाहको माध्यमको रूपमा लिन सकिन्छ। सम्वाद मिलन प्रवाहको अर्थ स्थापित गर्ने र उक्त कुराहरूलाई सहभागीहरूबीच बाँड्ने एउटा बाटो बन्न सक्दछ भन्ने स्पष्टता झल्काउन सकिन्छ। सम्वादमा अरू कसैसँगको धारणासँग सहमति वा सम्झौता गर्नुभन्दा पनि साधारणतया तिनीहरूको धारणा र मान्यताको बारेमा प्रश्न गरी बुझ्नुपर्दछ।

सम्वादमा विचारहरूको आदानप्रदान त प्रारम्भ हो। आदानप्रदान गर्नु भनेको अगाडि बढ्ने साझा बाटो पत्ता लगाउनु हो। एक आपसका कुराहरू सुनिसकेपछि देखिन सक्ने साझा कुराहरूले एक आपसमा सन्तुलनको अवस्था ल्याउँदछ तर त्यत्तिकै अवस्थामा रहँदा गाढा सम्बन्ध स्थापित हुन सक्ने निश्चितता भने हुँदैन बरु सन्तुलित अवस्थाले अगाडि बढ्न सक्ने सम्भाव्यतालाई स्पष्ट बोध भने गराएको हुन्छ। यसरी सम्वादअन्तर्गत एक अर्कोले आफ्ना धारणा राख्ने र त्यसको बारेमा प्रत्येकले थाहा पाउने हुनाले सम्वादमा भाग लिने सहभागीहरूको मस्तिष्कमा विचारहरूको एउटा ठूलो तलाउ सिर्जना भएको हुन्छ। त्यसपछि त्यस विचारको तलाउबाट साझा कुराहरू एक आपसमा बाँड्न सकिने भएकोले उक्त साझा कुरा विरोधाभासपूर्ण धारणा भएका व्यक्तिलगायत अन्य सम्पूर्ण व्यक्तिहरूसँग बाँडिएको हुन्छ। साधारणतया हामीमा गलतलाई अस्वीकृत र सहीलाई स्वीकृत गर्ने झुकाव स्वभावतः हुने भएकोले त्यस्तो साझा कुरा नौलो र नयाँ हुन्छ तर हामीसँग साझा अर्थको तलाउ भए तापनि त्यसलाई नै मिलनको गति भन्न सकिदैन। हामीले बाहिरी रूपले मिलेको देखिए तापनि आन्तरिक रूपमा विभाजित धारणा र हेराइले काम गरिरहेको हुन सक्छ। हामीले साझा अर्थ बाँडे तापनि गम्भीररूपले सु-मधुर मिलनको गतिलाई आत्मसाथ नगरेका पनि हुन सक्दछौं। फलस्वरूप मिलनविन्दु हामीबाट टाढा गइरहेको हुन सक्दछ।

**जसरी नदीको पानीमा समुन्द्रतिर बहने प्राकृतिक स्वभाव हुन्छ त्यस्तै**





**गरेर सम्वादमा पनि अर्थले सुमधुर मिलनको प्रवाहतिर गम्भीररूपमा बहने प्राकृतिक झुकाव भएको हुन्छ।** पृथ्वीको गुरुत्वाकर्षणले यो निश्चितता प्रदान गर्दछ कि पानीलाई कतैबाट नथुनिएको खण्डमा स्वतः समुन्द्रमा पुग्ने कुरालाई स्पष्टसँग देखाउँदछ। त्यस्तै गरेर सम्वादको अर्थले पनि कुनै पनि ठाँउमा रोकावट नगरेमा सुमधुर मिलनको गतिले प्राकृतिक विहार गर्दछ। जब मानिसहरू एक अर्कोलाई सुन्दछन् र प्रत्युत्तर दिन्छन् तब अर्थहरू व्यक्तिहरूबीच स्वाभाविक रूपले सजिलैसँग बहन्छ र यही अर्थको स्वाभाविक प्राकृतिक प्रवाह नै सम्वादको सारतत्व हो। जबसम्म त्यो बहाव अर्थात् बहने कार्य हुन्छ तबसम्म मिलन-प्रवृत्तिको आर्कषणद्वारा नै कुनै पनि कुराहरूको छानविन हुन्छ। यसमा यो कुरा बुझ्नुपर्दछ कि हामी स्वयम्ले यो कार्य गर्न भने सक्दैनौं। मिलन-प्रवृत्ति ल्याउन गरिने कुनै पनि प्रयासले पहिले नै बेमेल गराउने कुरा ल्याइसकेको हुन्छ किनभने हामीले जहिले पनि हाम्रो विचार वा धारणा अर्को व्यक्तिलाई लाद्न खोज्ने वा प्रभाव पार्न खोजिरहेका हुन्छौं जुन जहिले पनि सीमित धरातलमा आफ्नो अस्तित्व बनाइराखेको हुन्छ। केवल मानिसले गर्न सक्ने सकारात्मक कुरा भनेकै अर्थहरूको प्रवाहको बाटोमा अवरोध खडा नगर्नु हो। यसको तात्पर्य यो हो कि यदि मानिसहरूले एक आपसमा अवरोधबिना नै श्रवण गरेर प्रत्युत्तर गर्दछन् भने मिलन-प्रवृत्ति स्वतः आउँदछ-पार्श्वअसरको रूपमा।

सम्वादमा मिलन-प्रवाह स्वयम्को आफ्नै प्राकृतिक आर्कषण हुन्छ किनभने **प्राकृतिक आर्कषण नै सबैभन्दा कम अवरोधको सहज बाटो हो।** त्यही आर्कषणको बाटोले नै मिलन-प्रवृत्ति र अवरोधविहीनताबीचमा प्रत्यक्ष सह-सम्बन्ध हुने देखाउँछ। बेमेल प्रवृत्तिले द्वन्द र अवरोध पैदा गराउँदछ। बेमेल प्रवृत्तिलाई कायम राख्न धेरै नै ऊर्जाको खाँचो पर्दछ। तसर्थ, यदि सम्वाद अर्थयुक्त अभिव्यक्तिहरूको प्रवाह हो भने सम्वाद स्वतन्त्र हुनुपर्दछ। सम्वादलाई कुनै पनि तरिकाले कुनै व्यक्तिहरूद्वारा सीमित, नियन्त्रित वा निर्देशित गरिनु हुँदैन किनभने कुनै पनि किसिमको सहायताले केवल अर्थको प्रवाहलाई हस्तक्षेपमात्र गर्न सक्दछ। मिलन-प्रवृत्ति त्यो कुरा होइन जुन मानिसद्वारा ल्याउन सकिन्छ। त्यसले आफ्नो बाटो आफैले पत्ता लगाउनुपर्दछ। मिलन-प्रवृत्ति अन्तर्गत यदि कसैले मिलन-प्रवृत्ति प्राप्त गर्न केही गर्नेवित्तिकै ऊ पहिल्यै नै गलत कार्य प्रारम्भ गरिसकेको स्पष्ट हुन जान्छ।

मानिसहरूमा मिलनको गतितिर जाने प्राकृतिक गुण हुँदाहुँदै पनि मधुर मिलनले काम नगर्नाको कारण वा मानिसहरू मिलनप्रवाहतिर अग्रसर नहुनाको कारणको हकमा

यो भन्न सकिन्छ कि सम्वादअन्तर्गत कहीं अर्थहरूको प्रवाहमा रोकावट आएको छ वा अर्थलाई कतै कुनै दिशातिर निर्दिष्ट गरिदैंछ भन्ने कुरालाई बोध गर्नुपर्दछ। यस सम्वन्धमा हामीहरूले कसैले कसैलाई सहायता गर्नुको सट्टा वरु हामीले हामीभित्र भएको अवरोधहरूलाई हेरिराख्नुपर्दछ भन्ने कुरा स्पष्ट हुन आउँदछ। सम्वादअन्तर्गत हामीले हाम्रो व्यक्तिगत प्रतिक्रियाहरूमाथि विशेष ध्यान दिनुपर्दछ र यो हेर्नुपर्दछ कि हामी कहिले कहाँ अवरोध खडा गर्न पुग्छौं, त्यस्तै कहिले रिसाउँछौं, कहिले कस्तो चिजलाई संरक्षण दिन खोज्छौं, कहिले कस्तो सोचाइ उत्पन्न गराउन पुग्छौं इत्यादि बारेमा अवलोकन गर्नुपर्दछ।

प्रत्येक प्रतिक्रियाले एउटा रोकावटको उपस्थितिलाई सङ्केत गर्न सक्दछ। हाम्रो मस्तिष्कमा कुनै पनि अवरोधहरू रहनुहुँदैन किनभने ती अवरोधहरूले अर्थको स्वतन्त्र प्रवाहको अतिरिक्त मस्तिष्क स्वयम्को प्राकृतिक प्रज्ञामाथि हस्तक्षेप गर्ने गर्दछ। **अर्थहरूको प्रवाह हामीहरूमाझमा मात्र नभई वरु हामीहरूभित्र रहेर गुज्रिएको हुनुपर्दछ।** हामीहरूले राजनैतिक, धार्मिक, आर्थिक मान्यताहरूको अतिरिक्त कुनै व्यक्तिले के गर्नुपर्दछ वा जीवन आखिरमा के हो ? भन्ने आदि इत्यादि बारेमा धेरै उत्तर र मान्यताहरू विकास गरेका छौं। हाम्रो वर्तमान विचार जुन मस्तिष्कमा बास गरेको छ त्यो विगतको उपज हो। त्यही विगतको उपज, जुन अहिले वर्तमान विचार बन्न पुगेको छ, लाई आफ्नो अस्तित्व वनाएर त्यही विचारलाई नै संरक्षण दिने गरी प्रतिक्रिया दिने गर्दछौं तर त्यस्तो प्रतिक्रियाले कुनै अर्थ झल्काउन सक्दैन किनभने **सही विचारले प्रतिक्रियाको माग गर्दैन र गलत विचारलाई प्रतिक्रियाको जरुरत पर्दैन।**







## सम्वादका केही अनौपचारिक नियमहरु : (Informal Rules of Dialogue)

संक्षेपमा, सम्वाद प्रक्रियालाई सहज र सुगम तरिकाले अगाडि बढाउनको लागि सम्वादअन्तर्गत केही अनौपचारिक व्यावहारिक नियमहरूको आवश्यकता महसुस गर्न गराउन र बनाउन सकिने लोचयुक्त गुण पनि निहित हुन्छ। जस्तैः-

१. प्रत्येक व्यक्तिले सम्पूर्ण सहभागी साथीहरूको कुरालाई श्रवण गर्नुपर्दछ।
२. जति बढी विभिन्न प्रकारका मानिसहरू र धारणाहरू हुन्छन् त्यति नै बढी सम्वाद उपयुक्त र गतिशील हुन सक्दछ।
३. सम्वाद जति बढी वर्तमान घटनाहरूप्रति चासो देखाएर अगाडि बढ्छ त्यति नै उपयुक्त, सम्भव र सहज हुन सक्दछ।
४. प्रत्येक सहभागी आफ्नै तरिकाले दक्ष हुन्छ र सम्वादमा बौद्धिक क्षमताको तुलनात्मक अध्ययन गरेर कसैले पनि कसैलाई गिराउने वा निन्दा गर्ने कार्यलाई असान्दर्भिक मान्दै कुनै पनि घटनाहरूप्रति सबै सहभागीहरूको समान दायित्व बहन गर्नुपर्ने कुरालाई दृष्टिगत गर्नुपर्दछ।
५. सम्वादबाट प्राप्त सुझबुझले कुनै पनि साधारण वार्तालापमा आफ्नो बाटो स्वयम् आफूले पत्ता लगाउन सक्ने भएकोले उक्त सुझबुझलाई सकभर कुनै पनि अवस्था वा सभामा लागू गर्ने प्रयास नगर्नुमा नै सम्वाद उचित, निर्मल र स्वच्छ हुन सक्दछ आदि इत्यादि ...।

सम्वाद सञ्चारको एउटा रूप हो जहाँ खोजतलासले एउटा निश्चित तीव्रता र गहिराइको विन्दुलाई आत्मसाथ गर्नुको साथै वैचारिक स्पर्शविहीनताको गुणलाई अंगिकार गर्न पुगेको हुन्छ। यदि प्रश्नलाई विचारद्वारा स्पर्श नगरी पूर्णरूपमा छोडिन्छ भने तब त्यहाँ त्यस प्रश्नसँग निहित उत्तर प्रष्फुटित हुन पुग्दछ किनभने व्यक्तिको रूपमा विकसित विचारक अर्थात् कर्ता विलीन हुन पुग्दछ। यो विचार र धारणाहरूको द्वन्दात्मक खोजिनीति नभई बरु दुई वा दुईभन्दा बढी स्वस्थ स्पष्ट र गम्भीर मस्तिष्कहरूको अन्वेषण हो। **सम्वाद द्वैतताको अद्वैत अभिव्यक्ति हो।** सम्वाद विभिन्न पारदर्शी पक्षहरूलाई गरिने एउटा न्यानो गम्भीर, विनम्र, अद्वितीय अँगालो हो। सम्वादले वैचारिक धरातलमा भएको, भइरहेको र भइरहन सक्ने बेमेल प्रवृत्तिको अवलोकनलाई विनयपूर्वक स्वागत गर्दछ र त्यसको मिलन विन्दुको खोजीमा अग्रसर भइरहन्छ।

सम्वादअन्तर्गत वास्तवमा हामीहरू समस्याको अंश बन्नुभन्दा पनि पहिले नै समाधानको अंश बन्न पुग्ने कुरालाई उदाहरणसहित बोध गराइनुपर्दछ। प्रायः मानिसहरू आफ्नो भनेपछि जति ठूलो योजना वा समस्या भए पनि उचित, राम्रो र समाधानको गुण निहित भएको देख्ने र अर्काको जतिसुकै सानो समस्या भए पनि असम्भव वा जटिलताको गुण देख्ने गरेको सर्वविदितै छ। यदि त्यसो हो भने अरूलाई नहेरी किन हामी आ-आफ्नो समस्या भित्र निहित समाधानको गुणबाट सुरु नगर्ने त ?

अतः सर्वप्रथम बिना कुनै हिचकिचाहट प्रत्येकले प्रत्येकसँग भएका जीवनका समस्याहरूलाई अगाडि प्रस्तुत गरी सबैले सबैलाई गम्भीर भएर सुनाएर चेतनाको महासागरमा सम्वादको माध्यमबाट पौडी खेल्दै पार लाग्न सकिने वा नसकिने सम्भाव्यताको अन्तर्दृष्टि प्राप्त गर्नुपर्ने वर्तमान मानव जातिको हृदयस्पर्शी गम्भीर आवाजलाई श्रवण गरौं।







## मानव आवाज - समस्या कि समाधान ?

मानव मस्तिष्कले समस्यालाई प्राकृतिक र मानवसिर्जित गरी दुई भागमा विभाजन गरे तापनि मानवसँग सम्बन्धित अहिलेसम्म देखा परेका समस्या-समाधानविधिहरूले समस्यालाई समाधान गर्न नसकिरहेको कुरा मानवसामु स्पष्ट छ तैपनि समस्याको समाधान हुनै सक्दैन भनेर भन्नु चेतनशील प्राणीको लागि उपयुक्त हुने देखिँदैन। अझ भन्ने हो भने यो समस्या मानिसले नै सिर्जना गरेकोले मानिस स्वयम्ले नै समाधान गर्नुपर्दछ र समस्याको समाधान मानिसभन्दा बाहिर नभई मानिसभित्रमा नै निहित रहेको कुरालाई स्पष्टसँग देख्न सकिन्छ। वर्तमान सामाजिक बनोट र संस्कृतिमा आमूल परिवर्तन ल्याउनको लागि एउटा पूर्णरूपमा नयाँ चेतना र नैतिकताको आवश्यकता देखिए तापनि यसबारेमा भने कुनै धार्मिक, राजनैतिक, आर्थिक संघ संस्थाहरूले गम्भीर भएर गहिरो तीव्र दृष्टि र सोचको आवश्यकता महसुस गरेको पाइँदैन। कुनै पनि परिवर्तनसँग सम्बन्धित विश्वास, तन्त्रमन्त्र र आदर्शका कुराहरू विगतको चेतनाको पृष्ठभूमिबाट आउने हुनाले त्यस्ता विश्वास र आदर्शहरूले विभाजन ल्याई रक्तपातपूर्ण हिंसाको कार्यलाई नै निरन्तरता दिइरहेको हाम्रो सामु स्पष्ट छ। पुरानो चेतनाभित्र व्याप्त दुःख, उल्झन र कहालीलाग्दो चिच्याहटको स्व-बोधबिना नै गरेका र गरिने कुनै पनि राजनैतिक, सामाजिक, धार्मिक प्रयासले एक अर्कोबीच द्वन्द र लडाइँ ल्याएर आफ्नै बासस्थान पृथ्वीमा सङ्कट पारिरहेको कुरा स्पष्ट छ तर यस सम्बन्धमा अझ के भन्न पनि सकिन्छ भने **प्रकृतिभन्दा पनि मानव अस्तित्व धेरै नै खतराको मार्गमा बढीरहेको छ भन्ने कुरालाई विशेष गम्भीरतापूर्वक लिनुपर्दछ किनभने प्रकृतिले आफूमाथि उत्पन्न कुनै पनि समस्याको समाधान प्रकृति स्वयम्ले नै स्वतः निकाल्ने गरेको कुरा स्पष्टसँग देख्न सकिन्छ।**

समस्याको समाधानभन्दा पनि सर्वप्रथम समस्यालाई पहिचान गर्ने दृष्टि अति महत्वपूर्ण हुन्छ। यहाँ गैर-मानवीय घटनाक्रमलाई भन्दा पनि एक पटक मानिसले संसारको अस्तव्यस्तताको कारण मानिस स्वयम्भित्रमा नै छ भन्ने महसुस गर्नेबित्तिकै मानवले उचित प्रारम्भिक गतिको सूत्रपात गर्न पुगी अन्य गैर-मानवीय घटनालाई आफ्नो अन्तर्विवेकको धरातलमा समायोजन गर्न पुग्दछ। मानव समस्या तह र तप्कानुसार फरक हुँदैन। धनी, गरीब, काला, गोरा भनी कुनै पनि प्रकारले कुनै पनि व्यक्तिलाई सम्बोधन नगरी बरु भोक, रोग, ईर्ष्या, लोभ, डर इत्यादि सबैका वास्तविक मानवीय साझा समस्याहरूलाई अगाडि राखेर प्रत्येक व्यक्तिले स्वच्छ, गम्भीर, पर्याप्त प्रत्युत्तर दिन सक्ने गरी सम्बोधन गर्नुपर्दछ।

वर्तमान समस्याहरूलाई प्रत्येक व्यक्तिले आफ्नो धारणा र मान्यताअनुसारको व्याख्या र अर्थ नलगाइकन बरु **तथ्यगत समस्याहरूले सम्पूर्ण मानव जातिलाई हेर्न सुन्न र स्व-बोध गर्न** आव्हान गरेको छ तर दुःखको कुरा यो छ कि मानिसले समस्या र समाधानलाई विभाजन गरेर हेर्ने परिपाटी विकसित गरेको कारणले वैचारिक संघर्षको धरातलमा उभिन पुगेको छ। तथ्य स्वयम्ले आफ्नो उत्तर बाहिर नभई स्वयम् तथ्यभित्र निहित रहेको कुरालाई सम्वेदनशील रूपमा सुनेर तथ्यबाट पाठ सिक्न नसक्नु नै मानवको सबैभन्दा ठूलो दुर्दशा हो भन्ने घोषणा गरिरहेको छ। यस्तो अवस्थामा मानवले गर्नुपर्ने सबैभन्दा टड्कारोरूपमा देखिएको आधारभूत कुरा हो- **रक्तविहीन आन्तरिक तत्काल आमूल क्रान्ति।** यस्तो क्रान्ति प्रत्येक व्यक्ति स्वयम्ले आफूबाट सुरु गर्नुपर्दछ। यस सम्बन्धमा सर्वप्रथम व्यक्तिले समस्याबाट धेरै कुराहरू सिक्नुपर्दछ। यदि कुनै पनि व्यक्ति आफ्ना पूर्वअनुमानित वा निर्धारित तार्किक-अतार्किक समाधानहरूको साथमा आएर समस्यासँग सामना गर्दछ भने उसले समस्याबाट केही कुराहरू पनि सिक्न सक्दैन। यदि समस्यालाई हेर्ने र त्यसबाट त्यसैका लागि कुनै पनि कुराहरू सिक्न तयार भएमा मात्र समस्याले धेरै कुराहरू देखाइदिन्छ। यसको लागि विनम्र, शान्त र धैर्य भई आफूलाई केही पनि थाहा नभएको कुरा महसुस गर्ने गरी गम्भीर भएर हेर्ने मानस (Mind) हुनुपर्दछ। तत्पश्चात् समस्या स्वयम्ले आफै आफ्नो चित्र देखाउन थाल्दछ। **तथ्यस्वयम्लाई मौलिकता प्रस्तुत गर्न दिनको लागि आवश्यक पर्ने क्षमता सम्पूर्ण मानव जातिसँग स्वभावतः निहित रहेको हुन्छ।** कुनै पनि समस्याबाट केही कुरा सिक्नु नै क्रिया हो। संसारमा समस्या समाधान गर्नको लागि केन्द्रीय तहका अनुभव,योजना र बौद्धिक मनोरञ्जनका कुराहरू गरेर समस्यालाई आधारभूत धरातलबाट नहेरी उही पुरानै ढंगबाट हेर्ने परिपाटीले गर्दा समस्याले रूप फेर्दै आएको मात्र छ तर समस्याको समाधान कदापि भएको देखिदैन। वास्तवमा समस्या सदा नयाँ हुने भएकोले समस्या समाधानको लागि प्रत्येक व्यक्ति पनि नयाँ स्वच्छ दृष्टिबाट आउनुपर्दछ।

यहाँ मानिसहरू शब्दजालको आसक्तिमा मग्न छन्। शब्दभन्दा पर जानु नै अ-शाब्दिक सञ्चार हो जससँग अन्तर्दृष्टि भइरहेको हुन्छ। समस्या आफ्नै घरको ढोकामा आएमा मात्र सचेत भई श्रवण गर्नुपर्ने सोच विकास गरेको मानवले समस्यालाई आदर्श र कथाको रूपमा लिने गरेको पाइन्छ, परिणामस्वरूप समस्या वास्तवमा जहाँको त्यही रहन पुगेको देखिन्छ। समस्यालाई बहाना गरेर हटाउनेहरू वा समस्यालाई कसरी सामना गर्ने भन्ने बारेमा थाहा नहुनेहरू वा समस्याप्रति बेवास्ता गर्नेहरू - यिनीहरूमध्ये





कसैले पनि समस्या समाधान गर्नमा आतुर छैनन् र गम्भीर पनि देखिँदैनन्। जब मानिसलाई समस्यासँग कसरी व्यवहार गरी समाधान गरूँ भन्ने बारेमा थाहा हुँदैन तब ऊ कि त पूजारी, ज्योतिषी, दार्शनिककहाँ जान्छ कि कुनै किताब पल्टाएर समस्यालाई अनुवाद गर्ने, सम्बोधन गर्ने कोसिस गर्दछ। यो सबैको जड नै मानिसभित्र विकसित डरको कारणले गर्दा भएको हो। यसरी मानिसले विभिन्न व्यक्तिको शरणमा परेर केही भए पनि राहत र सन्तुष्टिको अनुभव प्राप्त गर्नको लागि प्रवचन सुन्न जान्छ तर त्यो वास्तवमा समस्यालाई हटाउने, छोड्ने चलाखी, धूर्त र सतही व्याख्यामात्र हो जसले पूर्ण रूपमा उत्तरदायित्वको बोधलाई पन्छाएको हुन्छ। समस्यालाई हेर्ने पुरानो दृष्टिलाई नकार्नु भनेको सम्पूर्ण समाजभित्र विकसित हेराइलाई नकार्नु हो। वर्तमान समाजमा विकसित सामाजिक कथित नैतिकतालाई नकार्नु वास्तवमा नैतिकता हो किनभने वर्तमानको नैतिकता नातावाद, धर्मवाद,अर्थवाद,पार्टीवाद र आणविक होडवादमा अडिएको छ। त्यसैले संगठित धर्म, पद, पैसा, शक्ति,अधिकार आदि सबैमा सफलताको धारणा निहित रहेको कुरालाई पूर्णरूपमा नकार्नुपर्दछ। नकार्नुले हिंसालाई औल्याउँदैन बरु सफलता र अहमताको प्रक्रियालाई बुझी शक्तिशाली हुने इच्छालाई पूर्ण रूपमा अन्त्य गर्नुलाई जनाउँदछ। नकार्नु व्यापक सतर्कतायुक्त कार्य हो। वर्तमान समयसम्ममा स्थापित सबै धर्महरूले कुनै न कुनै रूपमा स्पष्ट सम्वेदनशील मानव हेराइ र अनुभूति गर्नबाट अन्यौलता सिर्जना गराइरहेको पाइन्छ। कुनै पनि कुरालाई स्पष्ट रूपमा देखिन्छ, हेरिन्छ भने त्यहाँ क्रियाले तत्काल ठाउँ लिन पुग्दछ। अतः हेराइ नै क्रिया बन्ने भएकोले मानिसको मानस कहिल्यै पनि सफलता र असफलताका कुराहरूप्रति फर्कन सक्दैन। खतराको स्पष्ट दृष्टिबोधले पुनरावृत्त सम्बन्धलाई नकार्दछ।

मानिसले धार्मिक, राजनैतिक, सामाजिक, शैक्षिक रूपमा निर्वाचित व्यक्तिहरूमात्र उत्तरदायित्व बोकेका व्यक्तिहरू हुन् भनी निर्वाचित व्यक्तिहरूले हाम्रो लागि काम गर्नुपर्दछ भनेर मानिसहरू स्वयम् आफ्नो दायित्वबोधबाट पन्छिने गरेको पाइन्छ तर आफ्नो दायित्व कुनै अर्को व्यक्तिलाई हस्तान्तरण गर्नु अनुत्तरदायी बन्नु हो। बरु यहाँ **संसार नै व्यक्ति र व्यक्ति नै संसार हो भन्ने तथ्यले** अन्य व्यक्तिभन्दा पनि व्यक्ति स्वयम् उत्तरदायी हुनु पर्ने कुरालाई टड्कारो रूपमा महसुस गर्नु पर्ने कुरालाई स्पष्ट पार्दछ। अन्धकारमय संसारमा स्वयम् आफू आफ्नो लागि आफैद्वारा ज्योतिर्मय हुनुपर्दछ भन्ने कुराको तथ्य घोषित गर्दछ। **वर्तमान असहज परिस्थितिको समाधानको दायित्व हामी प्रत्येकभित्र निहित रहेको कुरालाई बौद्धिक तर्क वितर्क नगरी स्व-बोध गर्नु नै वर्तमानको आवाज हो।**

## मानव-सञ्चार - कति हदसम्म सफल वा असफल ?

वर्तमान समयमा मानव कुनै पनि व्यक्तिको कुरा सुन्न असमर्थ भइरहेको कुरा बढ्दो हिंसाका घटनाक्रमहरूले देखाएको पाइन्छ। मानवले कुनै न कुनै तथाकथित बौद्धिक वा अनुभवी व्यक्तिलाई बोल्नको लागि घच्घच्याइ रहेको पाउँदछौ। जे हाम्रो होइन त्यसलाई हामीले आफ्नो बनाइरहेका छौं। तथाकथित मुक्तिप्राप्त गरेका व्यक्तिहरूको अभिव्यक्तिलाई बारम्बार यान्त्रिकरूपमा घोक्दै घोकाउँदै आ-आफ्नो अनुकूलको अर्थ बनाई धुर्त र पाखण्डी बौद्धिक व्यक्तित्व उत्पादन गर्ने परम्परावादी शिक्षालाई संरक्षणको साथसाथै निरन्तरता दिने कामबाहेक अन्य कुनै विकल्पको काम छैन भनी निर्मल र निर्दोष बालबालिकालाई जिउँदै मार्ने काम पनि हामी गुरुशिक्षकहरूबाट भइरहेको सर्वविदितै छ। **हामी द्वन्दात्मक विवादमा फँसेर वैचारिक जीतहारको खेल खेली जीवन सफल भएको महसुस गर्न र गराउन चाहन्छौं।** हामी कसैको भनाइबाट आफ्नो अनुकूलको अर्थ लगाएर आफूलाई अगाडि सार्न अत्यन्त पोख्त छौं। हामी कसैको अत्यन्त सजीव, वर्तमानोन्मुख,सहज र स्वच्छ भनाइलाई हाम्रो पृष्ठभूमिमा रहेको ज्ञानसँग तुलना गरेर सजीव भनाइलाई मृत बनाई आफ्नो उत्कृष्टता प्रस्तुत गर्नुमा नै जीवन साकार हुने कुरालाई जोड दिइराखेका छौं। **सजीवतालाई यान्त्रिकतातिर ढाल्ने विचारमाथि प्रश्न चिन्ह खडा गर्न असमर्थ भइरहेका छौं।** विचारलाई उद्देश्यमूलक बनाई संगठित गर्न सकिन्छ तर जीवनलाई भने संगठित गर्न सकिदैन भनेर जाने तापनि व्यवहारमा विचारको नै कार्य प्रणाली र क्षेत्र व्यापक बनाइरहेका छौं। जीवनलाई संगठित हुँदैमा बुझ्न सकिने र सफल बनाउन सकिने धारणामाथि पूर्णरूपमा प्रहार गर्न हामी असमर्थ भइरहेका छौं।

सञ्चार भन्नाले केवल शाब्दिक रूपले प्रस्तुत गर्ने कुरालाई मात्र सञ्चार नभनी बरु सँगै बसेर चिन्तन गर्ने, वाडँफाँड गर्ने, सिर्जना गर्ने कुरालाई औंल्याउँदछ। सञ्चारअन्तर्गत श्रवणकलाको ठूलो महत्वपूर्ण भूमिका हुन्छ।

प्रत्येक पलमा अन्तर्दृष्टिको अर्थलाई स्पष्ट गराइराख्ने श्रवणकलामा सतर्कताले गंभीर भूमिका खेलेको हुन्छ। त्यसैले सञ्चारले एउटै धरातल,समय र तीव्रताको साथमा हिंड्दै चिन्तन,अवलोकन र आदानप्रदान गर्ने कुरालाई औंल्याउँदछ। सञ्चारअन्तर्गत शाब्दिक र अशाब्दिक सञ्चारले एउटै समयमा गति लिइरहेका हुन्छन्। गहिरो समस्याहरूलाई मनन गर्ने गंभीरताको अभाव भएको र केवल मनोरन्जन र समय व्यतित गर्ने चाहना राखेर श्रवण गर्ने व्यक्तिहरूले कुनै पनि समस्यालाई पूर्णरूपमा सम्बोधन गर्न सक्दैनन्। जुन व्यक्तिले अति गंभीरताका साथ समस्याहरूलाई हेर्छ,लिन्छ त्यो व्यक्तिले मात्र वास्तवमा जीवन जिउन सक्दछ। केवल दुःख पाएको कारणले हुने गम्भीरता क्षणिक र ओइलाउने हुन्छ। संसारमा बढिरहेको आतङ्क हिंसा र युद्धलाई स्पष्टसँग देख्ने जो कोहीले पनि गम्भीर भएर गहन सम्वाद गर्नुपर्ने आवश्यकतालाई हृदयदेखि नै अपिल गर्दछ। आफूमाथि युद्ध वा आतङ्कले स्पर्श





नगरेसम्म नउठ्ने जनताको यहाँ कमी छैन। समस्याहरूलाई खेलौनाको रूपमा लिएर खेल खेलिराख्ने व्यक्तिले भने गंभीरता चाहँदैन। एउटा कुलत वा पार्टी छाडी अर्को कुलत वा पार्टीमा प्रवेश गरी आफूले आफूलाई बुद्धिमान प्रमाणित गर्ने काल्पनिक सोच भएका बौद्धिक व्यक्तित्वहरूको कमी पनि यहाँ नभएको होइन। कुनै पनि गम्भीरतासँग सम्बन्धित क्रिया तात्कालिक र शीघ्र हुन्छ। यस्तो व्यक्तिले समयको माग गर्दैन। यस्तो एकीकृत उन्मुखता पूर्ण सञ्चार सदा वर्तमानमा सजीव भइरहन्छ। वर्तमान समयमा भएका आतंकित र उराठ जीवनका समस्याहरूप्रति सम्बोधन र प्रत्युत्तर पूर्ण रूपमा हुन सक्दैन भने त्यो प्रत्युत्तर प्रतिक्रिया बन्न जान्छ। **प्रत्युत्तर बन्ने कि प्रतिक्रिया बन्ने कुरा व्यक्ति स्वयम्ले समस्याप्रति दिइने गम्भीर श्रवणमा भर पर्दछ।**

कुनै पनि समस्याबाट बाहिर जाने समाधानको बाटो नदेखे पछि विगतमा भाग्न प्रयोग गरिएका उपाय वा बाटाहरूमाथि गम्भीर अवलोकन सुरू गर्नुपर्दछ। यस्तो गम्भीर अवलोकन र श्रवणमा मोजमस्ती,पूर्वाग्रह र डर तत्वहरू समावेश भएको हुनुहुँदैन। जसरी बच्चाको नामले बच्चाको वास्तविक गुण र कार्यहरूलाई हेर्न र बोध गर्न रोकावट गर्दैन त्यसरी नै विभाजन,एकान्तपन,डर जस्ता शब्दहरूमा नटाँसिकन समस्यालाई हेर्न सक्नुपर्दछ। हेर्नु विश्लेषण गर्नु होइन। विश्लेषणमा त कर्ता र कार्य हुन्छ जसले निष्कर्षतिर डोऱ्याउँदछ। कुनै पनि विद्वान वा शिक्षितको विचार,वाद वा बुद्धिअनुसार जीवनलाई नहेरी बरु प्रत्यक्ष स्वयम्ले आफूलाई हेर्नु पर्दछ। समस्या समाधान गर्ने कुनै पनि योजनाले योजनाकारको धारणानुसार समस्यालाई सम्बोधन गर्ने र प्रत्युत्तर दिने भएकोले योजनाकारले समस्यालाई पूर्ण रूपमा प्रत्युत्तर दिन सक्दैन। तसर्थ समस्यालाई आंशिक रूपमा नहेरी पूर्णरूपमा हेरेर प्रत्युत्तर दिंदा समस्या र अवलोकनकर्ता दुई भिन्दा भिन्दै कुराहरू बन्न सक्दैनन्। जब कर्ताले जे गर्छ त्यो ऊ स्वयम् आफूभन्दा बाहिरको कुरा बन्दैन तब मात्र बौद्धिक र उत्तेजनात्मक रूपमा नभई तथ्यगत रूपमा संसार नै म हुँ र म नै संसार हुँ भन्ने भावना प्रष्फुटन हुन पुग्दछ। यदि मानिसले कुनै पनि समस्यालाई आफ्नो दृष्टिबाट हेरेमा समस्यालाई नहेरी आफ्नो अनुभव,धारणा र निर्णयलाई हेरिरहने हुँदा त्यसले समस्याभन्दा पनि आफ्नो धारणालाई महत्वपूर्ण बनाउन सक्ने सम्भावनालाई गम्भीर भएर स्व-श्रवण गर्नुपर्ने घोषणा गर्दछ।



## इच्छा - नियन्त्रण गर्नुपदर्छ कि बुझ्नुपर्दछ ?

मानिस भयबाट कहिल्यै पनि मुक्त हुन नसक्ने कुरालाई कृत्रिमताको लहरले मानिसमा गहिरो प्रभाव पारेर प्रमाणित गर्न खोजेको पाइन्छ। हामीले डरबिना मोजमस्तीलाई बुझ्न सक्दैनौं तर यथार्थ कुरा पत्ता लगाउन, अन्वेषण गर्नको लागि जो सुकैले पनि अल्पकालीन विभाजन गर्नुपर्ने हुन्छ। यहाँ डर बिनाको मोजमस्ती हुन सक्दैन। मोजमस्ती नभएको भए डर अस्तित्वमा आउने नै थिएन। मोजमस्ती आवश्यक छ कि छैन भन्ने कुरा बुझ्नुभन्दा पहिला इच्छालाई दबाउने, नियन्त्रण गर्ने वा इच्छाबाट स्वतन्त्र हुनुपर्छ भन्ने जस्ता कुनै पनि धारणालाई पूर्णरूपमा हटाएर निष्पक्ष र पूर्वाग्रहरहीत भएर इच्छालाई स्व-बोध गर्नुपर्दछ।

विश्व-व्यापारीकरण, फेशन, उपभोक्तावाद र प्रचारवादले कुनै पनि कुराको स्वामित्व भएमा नै अति तीब्र उत्तेजित इच्छाले निरन्तरता पाउने कुरा अभिव्यक्त गरिरहेको हाम्रो सामु स्पष्ट छ। मानिसहरूमा कहिले सांसारिक भौतिक वस्तुमा कत्ति पनि लालायित नहुने र कहिले अधिक लालायित हुने प्रवृत्ति हावी भएर गएको सर्वविदितै छ। फेशनले दिइराखेको अति उत्तेजित मोजमस्तीले इच्छालाई झन् उत्तेजित गराई मन परी हिड्ने कुरालाई जोड दिन थालेको पाइन्छ। यदि इच्छालाई तत्काल पूरा नगरिएमा त्यसले नैराश्य ल्याउने हुनाले जसरी भए पनि पैसा, नाम कमाएर इच्छालाई पूरा गर्नुपर्ने कुरामा जोड दिएको पाइन्छ। अझ नैराश्यभित्र पनि सफलता रहने भनि नैराश्यलाई पनि उत्तेजकको रूपमा प्रयोग गरेको पाइन्छ तर नैराश्य स्वयम्सँग त्यस्तो कुनै स्वभाव नै हुँदैन। **भोक लाग्नु प्राकृतिक इच्छा हो तर गाडी, सम्पत्ति, महल देखेर त्यो प्राप्तिको भोक लाग्नु अर्को कुरा हो।** चलाखी र तार्किक कुराहरू गरेर अर्काको मनलाई तान्ने र जित्ने बौद्धिक भोक र संभोगलाई समाधि बनाउने इच्छा बोकेका भोका मानिसहरू पनि यहाँ नभएका होइनन्। त्यस्तै गरेर यहाँ संगठित धर्महरूले पनि मानिसहरूको लागि एउटा भोक सिर्जना गरिरहेका छन् जसको तृप्ततालाई मन्त्र, पूजापाठ, सङ्केत, फूल, सुगन्धित धुप र प्रतिस्पर्धात्मक दानको होडबाजीको माध्यमद्वारा तृप्त गराउन सक्ने कुरालाई प्राथमिकता दिइएको पाइन्छ। यहाँ गीता, रामायण, वाइवल, त्रिपिटक, कुरानका कुराहरू गरेर वर्तमानमा घटेका घटनाहरूलाई अपहेलित गर्दै वर्तमानका घटनाहरूलाई परम्पराका कथा काहानीहरूसँग जोडेर समाधान खोज्ने व्यावसायिक प्रयास गरिरहेको पाइन्छ। प्राप्त गरिने बस्तुहरू मानिसहरू पिच्छे फरक फरक भए तापनि इच्छा भन्ने कुरा सबैमा लागू भएको पाइन्छ। एउटालाई आध्यात्मिक त अर्कोलाई सांसारिक नशा





लाग्न सके तापनि यी सबै कुराहरूको प्राप्ति पछाडि इच्छाले तीब्र रूपमा भूमिका खेलिरहेको हुन्छ। यसरी व्यक्तिद्वारा इच्छाइएको बस्तु व्यक्तिको झुकाव, धारणा र वातावरणअनुसार फरक फरक हुने हुनाले संक्षेपमा इच्छाको उत्पत्तिको प्रक्रियाअन्तर्गत सर्वप्रथम हेराइ हुने त्यसपछि इन्द्रियानुभूति हुने तत्पश्चात् सम्बन्ध स्थापित हुने र त्यस सम्बन्धमा विचारको प्रवेशले इच्छा उत्पन्न हुन जाने कुरालाई स्पष्ट पार्न सकिन्छ।

समाजमा सकभर मानिसलाई इच्छा नगर, नसके इच्छालाई नियन्त्रण गर भनेर भनिन्छ तर नियन्त्रण पनि गर्न नसकेको खण्डमा इच्छालाई ईश्वर, सत्य, मुक्ति वा त्यस्तै कुनै तथाकथित महान कुराप्रति समर्पण गर भनेर भन्ने कुरा गरे पनि अन्त्यमा त्यो पनि इच्छा नै हो भन्ने कुरा बोध गर्नु अति आवश्यक छ। संक्षेपमा इच्छा नगर्नु पनि एउटा इच्छा हो। अनुशासन पनि इच्छालाई दबाउने वा नियन्त्रण गर्ने एउटा रूप हो। यसरी नियन्त्रणले स्वतन्त्र प्रवाहको शक्तिलाई साँघुरो बनाउँदछ। यो गर् र त्यो नगर् भन्ने आधिकारिक भनाइले आपराधिक कार्यलाई औंल्याउँदछ। मानिसहरू स्वयम्ले आफूलाई र अरूहरूलाई पनि कुनै पनि धारणा, सङ्केत र वादको नाममा अति तनाव र कठोर सजायँ दिइराखेको पाइन्छ। जब विचारले इन्द्रियानुभूतिहरूबाट प्रतिबिम्ब सिर्जना गर्दछ तब इच्छाका सम्पूर्ण जटिलताहरू उदय हुन्छन्। **इच्छा भन्नु सुखानुभूतिको रस र परिणाममुखी कार्य हो भने विचार इच्छाको गति हो।**

कोही पनि व्यक्तिसँग कुनै पनि वादले आफूलाई सम्मोहित गराइरहेको कुरा स्वीकार गर्ने साहासभन्दा पनि त्यस्तो सम्मोहित गर्ने वादलाई हेर्ने स्पष्ट हेराइको आवश्यकता परेको देखिन्छ। बच्चालाई सधै पुरस्कार दिएर हुर्काउनुपर्ने मनोविद्हरूको धारणा भए तापनि जबसम्म मानिसले डरलाई बुझ्दैन, डरको सत्यतालाई देखेर पर जान सक्दैन, मोजमस्तीलाई बुझ्दैन तबसम्म जुनसुकै जनावरसँग गरेको प्रयोगात्मक परीक्षणको निष्कर्षले मानिसलाई सहयोग गर्न नसक्ने कुरा मानव जीवनले घोषणा गर्दछ। मानिसले तीब्र इच्छा-शक्ति राखेपछि मात्र अझसम्म अनुभव नगरिएको मोजमस्ती प्राप्त गर्न सकिन्छ भनेर पाठ सिक्ने सिकाउने प्रथा कायम राख्न खोजिएको स्पष्ट छ। यहाँ मोजमस्ती भन्ने कुरालाई ठीक वा गलत भनेर प्रमाणित गर्न खोजेको होइन बरु किन मोजमस्ती जीवनको असाधारण महत्वको विषय बन्न पुगेको छ भन्ने बारेमा बुझ्न खोजिएको हो। समाधि, सम्भोग, स्वामित्व, ज्ञान, शक्ति, स्वर्ग आदि मस्तीका विषयलाई चिरफार गरेर हेर्न खोजिएको हो। जबसम्म शरीर रहन्छ तबसम्म शारीरिक इच्छाको उदयलाई नकार्नु मूर्खता मानिन्छ तर धारणा, वाद, सत्ताप्राप्तिले उन्मत्त भएको वैचारिक

उत्तेजित इच्छाले भने मानव जातिको नरसंहार गर्न पछाडि नपरेको कुरा हाम्रो सामु स्पष्ट छ। मोजमस्तीमा जहिले पनि विभाजित अवस्था हुन्छ भने आनन्द अविभाजित अवस्था हो जहाँ स्वच्छ, पवित्रता र शुद्धताले बास गरेको हुन्छ। निष्कपट, निर्दोषिता, सरलता बिनाको अनुभव गर्नु भनेको इच्छालाई प्रबल बनाउनु हो।







## प्रेम - इन्द्रीय भोग-विलास हो कि होइन ?

वर्तमान समयमा प्रेम भन्नु मोजमस्ती र भोगको बस्तु सावित भएको छ। मानिसलाई ईश्वरको बारेमा बौद्धिक ज्ञान भए तापनि आफूलाई ईश्वरको प्रेमपूजारी प्रमाणित गर्न अति लालायित भएर ईश्वरको खोजमा भौंतारिरहेको पाइन्छ र सांसारिक मस्तीका कुराहरू र सम्भोगलाई हामीले अझ माथिल्लो तहमा स्थानान्तरण गरेर संभोगबाट समाधि प्राप्त गर्न सकिने तन्त्र, मन्त्र र यन्त्रका साधनहरू आविष्कार गर्न पुगेको पाइन्छ। सम्झना, इन्द्रियभोगविलास र आसक्ति जहिले पनि विगतको हुन्छ। इन्द्रियले प्राकृतिक कार्य गरिरहँदा आसक्ति भन्ने कुरा आउँदैन र हुँदैन पनि तर जब त्यसलाई सम्झिन्छ तब मात्र इन्द्रियभोग विलास र आसक्ति अस्तित्वमा आउँदछ। सम्पूर्ण इन्द्रियभोग विलासलाई निराकरण गर्नु भन्नु नै प्रेममय सागरमा पौडी खेल्न तत्पर हुनु हो। इन्द्रियभोग-विलास करुणा होइन। जबसम्म व्यक्तिहरूले विभिन्न कपडा र रंगको आर्कषणले दिलाउने कामुकतामा रमाएर विभिन्न आसनमा संभोग गर्ने सोचमा डुबेर मग्न हुन्छन् तबसम्म तिनीहरूले मस्तिष्कलाई नष्ट बनाइरहेका हुन्छन्। यस्तो बिग्रेको मस्तिष्कले इन्द्रिय आसक्ति र सुखलाई प्राथमिकता दिएजस्तै डर र रिसजस्ता कुराहरूमा पनि त्यस्तै अनुभूति गर्ने गर्दछ तर जब बिग्रेको मस्तिष्कलाई अन्तर्दृष्टि प्राप्त हुन्छ तब तुरुन्त उपचार भई स्वस्थता पुनःप्राप्त गर्न सक्दछ। मानिसहरूले रिस र घृणा भन्ने कुरा बिग्रेको मस्तिष्कको उपज हुन् भनेर बोध गरे तापनि इन्द्रियभोग विलासलाई पनि बिग्रेकै मस्तिष्कको उपज हो भनी देख्न कठिन सावित भएको पाइन्छ।

वर्तमान समयमा प्रेमलाई कामुकता र सम्भोगकार्यसँग समरूप गरिएको पाइन्छ। **वास्तवमा जहाँ घृणा हुन्छ त्यहाँ प्रेमले केवल कामवासना र इन्द्रीयभोग-विलासको रूप लिन जान्छ। कहिल्यै पनि प्रेमको विपरीत घृणा हुन सक्दैन। वास्तवमा दुःखको अन्त्य नै प्रेम हो।** प्रेमको अर्थलाई केवल सम्भोगसँग जोड्नु वास्तवमा प्रेमलाई मोजमस्तीको अर्थ दिनु हो। सम्भोग व्यवसायको रूपमा फस्टाएको छ र फस्टाइरहने सङ्केत संभोगको बारेमा हजारौ किताबहरू छापेर धमाधम बिक्री भइरहेको र माग बढिरहेको कुराबाट स्पष्ट देख्न सकिन्छ। सम्भोगलाई ईश्वर प्राप्तिको साधन बनाइएको पनि देखिन्छ। जुन व्यक्ति दबाव, तनाव, आक्रमण र महत्वाकाक्षांद्वारा उच्च ओहदामा पुगेको हुन्छ, त्यसले प्रेम भनेको के हो महसुस गर्न सक्दैन। ईश्वरको नजिक पुग्न अति लालायित महत्वाकांक्षी पूजारी, पादरीहरूले उच्च

तहको ईश्वर प्राप्तिको लागि निम्न तहलाई वास्ता गर्नुहुँदैन भनी जातपात लगायत अन्य कुराहरूको विभाजित अवस्थाको नैतिक नियम स्थापना गर्ने भएकोले वर्तमान समाज र यसले बनाएको नैतिक बनोट अनैतिक छ। अर्कोलाई प्रेम र सेवा गर्ने नाउँमा आफ्नो स्वार्थपूर्ति गरी अगाडि बढ्ने पाखण्डी नैतिकताले यो समाजमा जरो गाडेको छ। एक तर्फी एक देशबाट अर्को देशमा गरिने चेलीबेटी बेचविखन र यौन व्यापारले मानव सम्बन्धको उपहास गरिरहेको हाम्रो सामु स्पष्ट छ भने अर्कोतर्फ कतिपय मानिस, पूजारी, भिक्षु, ब्रम्हचारीहरूले सम्भोगलाई अस्वीकृत गरी महिलालाई समेत हेर्न नहुने कुरा गरी ईश्वरप्राप्तिको नाउँमा जलिरहेको काम वासनालाई दबाइरहेको पाइन्छ। संभोगकार्यमा सहभागी पक्षहरूले केही क्षण भए पनि स्वतन्त्रताको महसुस गर्ने भएकोले संभोग कार्यले यति ठूलो स्थान पाएको जस्तो देखिन्छ। संभोगबाहेक अन्य क्षेत्रमा त्यस्तो मुक्ति र मस्ती पाउन नसक्ने भएकोले सायद सम्भोगलाई ठूलो स्थान दिइएको हो भनेर भन्न पनि सकिन्छ। आखिरमा जुनसुकै कार्यहरूले पनि द्वन्द र विभाजनलाई कायम राख्नमा तल्लीन भइरहेको कुरा राजनैतिक,धार्मिक र सामाजिक पार्टी र संघसंस्थाहरूले विभिन्न तरिकाले प्रमाणित गराइरहेको कुरा स्पष्ट छ।

जब पीडाको तुलनामा मोजमस्ती बढी प्राप्त गदर्छन् तब कुनै काम गर्नुपर्ने आवश्यकता देख्दैनन् तर जब मोजमस्तीभन्दा पीडाको अंश धेरै हुन थाल्दछ तब कुनै न कुनै कार्यको आव्हान वा माग गरी हाल्दछन्। असन्तुष्टि एउटा ज्वाला हो जसलाई पीडाको प्रतिक्रियाको रूपमा प्रयोग नगरी बरु चम्किलो रूपमा बलिराखेको ज्योतिको रूपमा लिनुपर्दछ। असन्तुष्टि जब अस्वीकृत गरिन्छ तबमात्र पीडादायक हुन्छ। प्रत्येक जन्मिएका कुरा पीडादायक छन्। पीडालाई स्वयम् फक्रन दिइएमा त्यसबैाट स्व-बोध प्रष्फुटन हुन्छ। प्रतिक्रियाविहीन सचेततामा मात्र दुःख स्वयम् नै सिर्जनात्मक बुझाइको ज्वाला बन्न पुगदछ। प्राकृतिक अवस्थामा रहेको व्यक्तिले कसैको (चाहे त्यो चिनेको नातेदार होस् वा नचिनेको कुनै व्यक्ति होस्।) पनि पीडाको महसुस स्वयम्को नै हुने वा हुनपुग्ने महसुस गर्दछ। असन्तुष्टिको पूरा महत्वको सुझबुझ बिना केवल सन्तुष्टि हुने मान्छे केवल सुतेको मात्र हुन्छ। सन्तुष्टि एउटा नशा हो र यो पत्ता लगाउन तुलनात्मक रूपमा सजिलो हुन्छ तर असन्तुष्टिको सम्पूर्ण महत्वलाई बुझ्नको लागि निश्चितताको खोजीलाई अन्त्य गर्नुपर्दछ। असन्तुष्टिको पीडाबाट स्वतन्त्र हुन सन्तुष्टिको खोजीलाई अन्त्य गर्नुपर्दछ।







## ज्ञान (ज्ञात) - स्वतन्त्रता दिन्छ कि दिदैन ?

विगतले नै वर्तमान निर्धारण गर्दछ भनी वर्तमानभित्र विद्यमान स्वतन्त्रतालाई अर्थहीन गराउन चेष्टा गर्ने व्यक्तिहरूले आजबाट हिजो हेर्नुभन्दा हिजोबाट आज हेर्ने परम्परालाई विभिन्न बहाना गरी निरन्तरता दिने गरेको पाइन्छ। विगत भन्नु नै म,तिमी,हामीको रूपमा विकसित सङ्ग्रहित ज्ञान हो। कर्ता भनेको ज्ञानको रूपमा विचारद्वारा निर्मित बस्तु हो। कर्ताले आफ्नो संभ्रमनामा, पृष्ठभूमिमा रहेको ज्ञानको माध्यमद्वारा हेर्ने भएकोले कर्ता र दृश्य बस्तुबीचमा विभाजन ल्याउँदछ। कर्ताले कुनै पनि व्यक्तिलाई पूर्ण रूपमा अवलोकन गर्न सक्दैन किनभने कर्ताले आफूलाई हिन्दू,बौद्ध वा क्रिश्चियन बनेर सोच्नेबित्तिकै उसले अरूलाई अलग्याइहाल्दछ र अर्को कुनै संज्ञा दिन पुगिसकेको हुन्छ। अन्यौलतालाई थोरै थोरै गरेर हटाउन खोज्नु समयको माग गर्नु हो जसले कुनै विधिलाई अनुसरण गर्ने अभिप्राय बोकेको हुन्छ।

सिर्जना भन्ने शब्दले लेख, निबन्ध, चित्र, संगीत, नृत्यजस्ता आंशिक सिर्जना गर्ने कुरालाई नऔंल्याई पूर्ण रूपमा नयाँ कुराको जन्मलाई औंल्याउँदछ किनभने आंशिक सिर्जनाहरूमा ज्ञातबाट स्वतन्त्र हुन नसक्ने तत्व विद्यमान हुने भएकोले त्यसले केवल ज्ञातलाई संशोधन वा पुनर्निमाण गर्ने कार्य गर्दछन्। ज्ञातबाट स्वतन्त्र हुनु भन्नुको मतलब ज्ञातलाई नर्कानु वा अस्वीकृत गर्नु होइन बरु ज्ञातलाई स्व-बोध गरी स्वतन्त्रताको रस अर्थात् प्राकृत प्रज्ञा,तीक्ष्ण विवेक वा अन्तर्विवेक(INTELLIGENCE)लाई जन्म दिन पुग्नु हो।

सिर्जनाले पूर्व अनभिज्ञ चिजलाई ज्ञात गर्ने,मस्तिष्कमाथि तनाव स्थापना गरी सतर्कता जन्माउने र कुनै कुरा निकाल्ने अभिप्रायलाई पनि औंल्याउँदैन। जबसम्म कुनै नयाँपन भावीत गरिँदैन तबसम्म कुनै नयाँ कुराको सिर्जना गर्न सकिँदैन। सिर्जनात्मकतामा विगतको निरन्तरता रहँदैन। त्यसैले सिर्जनशीलतासँग सरोकार राख्ने स्वतन्त्रता एउटा कुरा हो भने ज्ञान अर्कै कुरा हो। ज्ञान भाषा बोल्न,यात्रा गर्न,लेख्न र दिशाबोध गर्नको लागि आवश्यक हुन्छ। ज्ञान कार्यगतरूपमा आवश्यक भए तापनि वर्तमान समयमा मानिसले विभिन्न तरिकाले प्राप्त गरेको ज्ञानले म अर्थात् अहंकारी र स्वार्थी मानवको आविष्कार गरी मानवीय सम्बन्धमा द्वन्द र विभाजन खडा गरी बिनाशकारी मार्गमा गमन गरिरहेको पाइन्छ।

हाम्रो वर्तमान सम्बन्ध यान्त्रिकता र व्यावसायिकताको सम्बन्ध हो जसले शोषण गर्नु गराउनुमा नै मानव अस्तित्वको सुरक्षा सम्भव हुने र शोषण,अपराध वा त्यस्तै कुनै समस्या नै नरहे वा नभए जीवन नै निरर्थक रहने धूर्त तर्क अगाडि सारेर वर्गीय सम्बन्धको शोषण र द्वन्दलाई निरन्तरता दिन व्यस्त भएकोले नै मानिससँग

सम्पत्ति,नाम,शक्ति आदि भए तापनि जीवन वास्तवमा निरस र उराठलाग्दो बन्न पुगेको छ। मानिस जहाँसुकै जे जस्तो बनेर बसे तापनि विगतसँगको नाता तोड्न सक्दैन भने सम्बन्धको जालोबाट सिर्जना हुने समाजमा ज्ञानको कस्तो स्थान रहन्छ त ? भन्ने बारेमा स्पष्ट हुनु अति आवश्यक देखिन्छ। मस्तिष्कमा निहित रहने निश्चित ज्ञान(विचार)मा व्यक्तिगतता हुँदैन। ज्ञान वास्तवमा सबैको साझा सम्पत्ति हो। मानिसले खोज गरेर प्राप्त गरे तापनि त्यो आफ्नै मानसकै अनुमान र कल्पनाबाट बन्न जाने कुरा प्राप्त गर्ने भएकोले उक्त कुराको स्व-बोध गर्ने बित्तिकै खोजको अन्त्य हुन्छ किनभने जान्नु भनेको पहिचान हो र पहिचान गर्नु विगत अर्थात् ज्ञानको कार्य हो।

**सम्बन्ध नै सम्पूर्ण अस्तित्वको उद्गम विन्दु हो र त्यही सम्बन्ध नै जीवन हो।** यही सम्बन्धले गर्दा नै हामी नै संसार हौं र संसार भनेको नै हामी हो भनेर भन्न सकिएको छ। एकतर्फ घरमा जानु,अफिसमा जानु,गाडी चलाउनु,नृत्य गर्नु,भावुकताका शब्दले साहित्यको श्रृंगार गरेर उपन्यास लेख्नु आदि जीवनका कार्यहरू गर्न ज्ञानको अर्थात् समयको आवश्यकता पर्दछ भने अर्कोतर्फ ज्ञानबाट स्वतन्त्र हुनु पनि आवश्यक देखिन्छ। मानवीय सम्बन्धअन्तर्गत स्वतन्त्रता र ज्ञानको सुमधुर मेल हुनुपर्ने आवश्यकता देखिएतापनि यथार्थतामा ज्ञानको बाहुल्यताले सम्बन्धभित्र विभाजन र द्वन्द स्थापना गरिरहेको कुरालाई स्वीकार गर्नुपर्ने अवस्था आएको छ। यहाँ ज्ञानलाई राम्रो र नराम्रो भनेर विभाजन नगरी केवल ज्ञानको अस्तित्वलाई लिइएको छ। सरलता स्वयम्ले पूर्ण रूपमा कर्ताको अस्वीकृत गर्दैन अर्थात् स्वतन्त्रता ल्याउँदैन बरु स्वतन्त्रताले आन्तरिक सरलतालाई जन्म दिन्छ। **जे हामी हौं त्यही बन्न** कुनै पनि हालतमा समयको आवश्यकता नपर्ने हुनाले त्यो कार्य सबैभन्दा सजिलो कार्य हो तर अफसोच यो छ कि उल्लेखित कुराहरूलाई जटिलतामा बल्झाएर मानिस न त स्वीकार न त अस्वीकार गर्ने पक्षमा उभिन पुगेको छ।

ज्ञानको क्षेत्रमा कार्य-स्वतन्त्रताभन्दा मानवीय सम्बन्धको क्षेत्रमा कार्य-स्वतन्त्रताको महत्व सबैभन्दा ठूलो हुन्छ। कुनै एक व्यक्तिलाई आफ्नो सफलता, सम्पत्ति, महत्वाकांक्षा र इर्ष्यासँग चासो राख्छ भने अरूलाई पनि त्यस्तै प्रकारले सफलताको अत्यन्त अभिलाषा रहेको पाइन्छ। कुनै पनि हालतमा मानिसहरू सम्बन्धको आधारमा एक अर्कोवाट अलगिगन नसक्ने अभिव्यक्तिलाई लिएर जतिसुकै एकताको भाषण दिएर दर्शन र बन्दुकको आवाज निकाले तापनि अविभाज्य मानवीय सम्बन्धलाई अनुभूति गर्न सकिरहेका छैनौं र भविष्यमा सक्ने पनि छैनौं किनभने प्रत्येक व्यक्ति धार्मिक, राजनैतिक, शैक्षिक रूपले आफैंमा विभाजित छ। कुनै पनि व्यक्तिले मानिसहरू विभाजित भएको कुरालाई तर्क दिएर आफूभित्र संग्रहित एकोहोरो ज्ञानको सहायताले

यदि बदल्नु नै छ भने सर्वप्रथम वर्तमान समयमा आफूले आफूलाई बदलौं,संसार स्वतः बदलिनेछ।





धारणा र सिद्धान्तमा परिवर्तन गराएर मानिसलाई पुनः त्यस्तै खालका संशोधित धारणाअनुसार बाँच्न र बचाउन खोजिरहेका मानिसहरू यहाँ प्रशस्त छन्। जब धारणानुसार बाँचिन्छ तब यथार्थलाई अपहेलना गरिन्छ र विभाजनलाई निमन्त्रणा गरी सम्बन्धलाई बिनाशको बाटोतिर विकसित गर्न पुगिन्छ। हामीले एकताको कुरा गर्नुभन्दा पनि विभाजनको बनोट र स्वभावलाई स्व-बोध गर्नु अति आवश्यक छ।

**देश,जाति,धर्म आदिको विभाजनको अन्त्यले स्वतः एकताको अस्तित्वलाई आत्मसाथ गरेको हुन्छ।** जब विभाजनको अन्त्य हुन्छ तब ऊ मानव बन्दछ र मानवीय समस्याहरूलाई कुनै जात धर्म र देशअनुसार नहेरी अविभाज्य मानवीय नाताले हेर्दछ। यसरी मानसले कर्ताको रूपमा स्वतन्त्र भएर अस्तित्वमा आउन पूर्ण रूपमा व्यावहारिक,गहिरो अनुभूति र अन्तर्विवेकको माग गर्दछ,अन्यथा सम्पूर्ण कुराहरू केवल नेताले दिने अवसरवादी भाषणजस्तो बन्न पुग्दछ। तथ्यबाट हामी डराउँदैनौं बरु तथ्यको आशातीत असरबाट डराउने भएकोले मानस (Mind)ले अनुमान वा पूर्वदृष्टि लगाएर डर उत्पन्न गराउँदछ। **जब कुनै घटित घट्नाको बारेमा डर लाग्छ तब उक्त घट्नालाई भविष्यमा घट्न सक्ने घटनाको रूपमा हेर्न पुगिने हुनाले त्यो डर वास्तवमा तथ्य हुँदैन। वास्तवमा मानस अज्ञात्भन्दा पनि ज्ञात्सँगको सम्बन्ध टुट्छ, बिलाउँछ कि भनेर डराउँदछ।**

**यथार्थताको धरातलमा उभिएर तथ्यलाई निष्पक्ष सामना गर्नु नै स्वतन्त्रता हो।** पूर्ण रूपमा प्राकृत नियममा बस्नु नै सद्गुण हो। सद्गुण भनेको मृत चीज होइन। सद्गुण, सिर्जनशील, सजीव र गतिशील कुरा हो जसको क्रिया हुन्छ तर प्रतिक्रिया र पुनरावृत्ति हुँदैन। सिर्जनशीलताले अंश र विभाजनको आधार लिएर गति लिन सक्दैन। सिर्जना पूर्णतासँग सम्बन्धित हुन्छ। कुनै पनि हालतमा अंश पूर्ण बन्न सक्दैन तर मानव जीवन अंश र विभाजनलाई अँगालेर जीवनको पूर्णतालाई स्पर्श गर्न व्यर्थै प्रयास गरिरहेको छ। जब कर्ताको रूपमा विचारले कुनै अर्को बाटो देख्दैन तब त्यो अन्तर्दृष्टिले पूर्णता ल्याउँदछ भन्नुभन्दा पनि सानै उमेरबाट बच्चाहरूलाई हिन्दू,बौद्ध,अंग्रेज,नेपाली भनेर सोच्न र हेर्न नसिकाउनुमा नै अविभाज्य मानवीय सम्बन्धको प्रष्फुटन प्रारम्भ हुन सक्दछ। कुनै पनि व्यक्तिको मानसले साधारणतः हेर्छ र त्यसप्रति कुनै पनि प्रतिक्रिया गर्दैन भने त्यहाँ कर्ता हुँदैन र जहाँ कर्ता हुँदैन त्यहाँ विभाजन पनि हुँदैन। कर्ताको तत्वले गर्दा सम्बन्ध स्थापनामा अवरोध खडा गर्दछ। द्वैदता र विरोधाभासपूर्ण वातावरणमा हुर्केको मानसले कर्ताविहीन भएर अवलोकन गर्न सकेमा मात्र नयाँ जन्म लिन सक्छ तर यी सम्पूर्ण कुराहरूलाई मानिस श्रवण गर्न चाहँदैन। यदि सुनिहाले तापनि आफ्नो निर्णय,व्याख्या र प्रभावको आधारमा फाइदा बेफाइदाको हिसाब

विचारले खेलेको विध्वंसकारी खेलको अनभिज्ञता नै अज्ञानता हो।

गर्दै केही हदसम्म सुन्दछन् र आफ्नो बाटो लाग्दछन्। त्यसैले श्रवण गर्ने कार्यले खेल्ने विशेष भूमिकालाई गम्भीरतापूर्वक लिनुपर्ने हुन्छ। कुनै पनि व्यक्तिले पूर्वाग्रह र फाइदा बेफाइदाको दृष्टिलाई पन्छाएर हेर्नु नै गम्भीरता हो। हामी गम्भीर भएर नसुन्ने भएको कारणले गर्दा नै हामीलाई परेशान र दिक्क बनाउँदछ। यदि कुनै पनि व्यक्तिले सजीव बस्तुलाई हेर्न र श्रवण गर्न सक्दैन भने त्यो व्यक्ति मरेतुल्य हुने सम्भावना रहन्छ। जीवन र मरणको सवालमा उत्पन्न हुन जाने गम्भीरताले मात्र श्रवण र हेराइको कलालाई बोध गर्न सक्दछ।

यदि घर जलिरहेको छ भने पक्कै पनि केही न केही काम तत्काल नगरीकन हेरेर बस्न सकिदैन। घर कस्तो जात,धर्म,देश र पार्टीसँग सम्बन्धित मानिसले जलाएको भन्ने कुरा पत्ता लगाउनु र यदि मानौं यस्तो घटना नघटिदिएको भए घर जल्ने नै थिएन भन्नेजस्ता कपोल-कल्पित कुराहरू गर्नुको सट्टा मानिसले दन्किरहेको आगो निभाउनतिर लाग्नुपर्ने कुराको गम्भीरतालाई अनुभूति गरिने भएकोले नै आगो तत्काल निभाउन वा मानिस बचाउनतिर लागिन्छ। के हामीले घर जलिरहेकोजस्तै वर्तमान समयमा मानिस, समाज र देश द्वन्द, युद्ध र हिंसामा जकडिरहेको,जलिरहेको अनुभूति गंभीर रूपमा गर्न सक्छौं त ? यहाँ संसारको जुनसुकै कुनामा भए पनि रोग, भोक, युद्ध र आतङ्कले मानिस पिल्सिरहेको कुरा सबैका सामु स्पष्ट भए तापनि प्रत्येक मानिसले एकअर्का पार्टी, धर्म वा व्यक्तिलाई दोष दिएर,कुनै बहाना बनाएर मानव अस्तित्वको गम्भीर खतरालाई महसुस गर्न सकिरहेको पाइँदैन। **जबसम्म आफू सुरक्षित रहेको हुन्छ तबसम्म चुपचाप बसिरहने र जब अरूलाई परेको त्यही समस्या आफूमाथि आइलाग्छ तब सहयोग र मानवताको गम्भीर आवश्यकताको अनुभूति गर्ने हामीलाई बानी परेको छ र यही नै हाम्रो संस्कार पनि हो।** यसरी मानवीय सम्बन्ध, स्वतन्त्रता र ज्ञानमा देखिएका समस्याहरूमाथि पूर्ण सतर्कताका साथ ध्यानाकर्षण गर्नुपर्ने गहन आवश्यकतालाई वास्तवमा गम्भीर भएर चासो राख्ने व्यक्तिले मात्र देख्न सक्दछ। जबसम्म हाम्रो मानसभित्र विकसित बेनियमले निरन्तर अभ्यास र वैचारिक दवावको महसुस गरी परिवर्तनको चेष्टा गर्दछ तबसम्म त्यो बेनियम कहिल्यै परिवर्तन हुन सक्दैन। यहाँ प्रगतिको नाउँमा अपहरण, लुटपात, मारकाट, गोलीबारुद बम क्षेप्यास्त्रले क्रमशः ठाउँ लिदै गइरहेको यो संसारमा मर्ने र मार्ने कलामा विकास गरेर क्षणभरमा नै विश्वलाई ध्वस्त बनाउने नयाँ विध्वंशात्मक कुराहरूमा प्रगति भइरहेको छ। यसरी बेनियमभित्रको वातावरणमा उत्पादित नयाँ वस्तुहरूले मानवीय सम्बन्धलाई बिनाश गर्ने शत्प्रतिशत सुनिश्चित छ। ज्ञातबाट स्वतन्त्र तब सम्भव छ जब ज्ञात स्वयम्ले जीवनमा खेल्ने सीमित अपरिहार्यताको स्व-बोध गर्न पुग्दछ।





## विचार - नियम हो कि बेनियम ?

प्रकृति कसरी चल्दछ भन्ने कुरा प्रकृतिभित्र निहालेर हेरेपछि मात्र यसको आफ्नै नियम (ORDER) भएको कुरा अनुभूति गर्न संकिन्छ। मानिसहरूले प्रकृतिको नियम कस्तो छ भनेर देख्न सक्दछन्। यहाँ नियम भन्नाले स्व-चालित प्राकृतिक अनुक्रमलाई बोध गर्नुपर्दछ जुन कहिल्यै पनि सापेक्षिक हुँदैन। **कुनै पनि नियम आफैंमा पूर्ण हुन्छ तर विचारद्वारा प्रतिपादित नियम सापेक्षिक हुन्छ** किनभने जब विचारले साध्यको निरूपण गर्न थाल्दछ तब त्यो सीमित र विरोधाभाषपूर्ण बन्न जान्छ। तर यो ठूलो ब्रहमाण्ड स्व-चालित प्राकृतः नियममा आधारित छ र यो प्रकृति पनि ब्रहमाण्डभित्रको पूर्ण नियम हो। स्व-चालित प्राकृतः नियमले प्रकृतिबाट उत्पन्न सम्पूर्ण बनस्पति र प्राणीलाई अगाँल्नुको साथ-साथै ब्रहमाण्डको अनुक्रम र हामी मानव प्राणीको मानसलाई पनि अँगालेको छ।

गणितअनुसार नियम लाई अनुक्रमहरूको पनि अनुक्रम हो भनेर भनिन्छ। गणितीयरूपमा जब नियमलाई व्यक्त गरिन्छ तब त्यो सीमित हुन जान्छ। घटना घटनु स्वयम् सँग नियम हुन्छ तर घटनालाई शुभ र अशुभको दर्जा दिन भने स्वस्थ अन्तर्दृष्टिबाट मात्र सम्भव हुन्छ। यस बारेमा स्पष्टता हासिल गर्नको लागि हामीले कुनै व्यक्तिलाई लागिरहेको क्यान्सर रोगसँग तुलना गरेर अन्तर्दृष्टि प्राप्त गर्न सक्दछौं। **क्यान्सर रोग स्वयम् आफूमा एक पूर्ण नियम भएकोले नै त्यो अस्तित्वमा आएको हो तर यदि क्यान्सर रोगलाई शारीरिक नियमसँग मिलाउन खोज्ने हो भने शारीरिक नियम धराशायी हुन्छ अर्थात् मर्दछ।** यसको मतलब क्यान्सर रोगअन्तर्गत विकसित नियमले शारीरिक स्वस्थतासँगको पूर्ण नियमसँग तालमेल मिलाउन सक्दैन। तसर्थ क्यान्सर रोगको अनुक्रमले शरीरको नियमलाई आघात् पुऱ्याएर अशक्त बनाउदै जाने हुनाले अन्त्यमा शरीरको नियम सदाको लागि नष्ट हुन पुग्दछ। यसरी क्यान्सर रोगको नियमले शरीरलाई आघात पारेर नष्ट गरे तापनि प्रकृतिको नियमलाई भने उल्लङ्घन गरेको पाइँदैन। **हामीभित्र क्यान्सर रोगजस्तै विचारको रोग विकसित भइरहेकोले नै पीडित छौं, दुखी छौं तर पनि त्यो रोग लाग्दैमा हामीले प्रकृतिलाई असर पार्न सक्दैनौं किनभने प्रकृतिसँग स्व-स्फूर्त समायोजन र संयोजनको अनुक्रम छ जसलाई हामीले परिवर्तन गर्न सक्दैनौ** तर यदि प्रकृतिलाई परिवर्तन गर्ने चेष्टा गरिएमा त्यसले हाम्रो अस्तित्वलाई नै खतरामा पार्ने अनौठा परिवर्तनहरूले मानिसलाई सङ्केत दिइरहेका छन्। क्यान्सर रोग स्वयम्मा पूर्ण नियम भए तापनि

क्यान्सर रोग शरीरको लागि बेनियम सावित हुने कुरा निश्चित छ। हाम्रो मानसमा विचार भन्ने कुराले क्यान्सर रोगले शरीरभित्र गरेजस्तै कार्य गरिरहेको छ जसले स्वस्थताभन्दा अस्वस्थताको मार्गलाई अवलम्बन गरिरहेको छ। त्यसो हो भने नियम भनेको के हो त ?भनेर प्रश्नको उत्तर दिनको लागि सर्वप्रथम मस्तिष्कको विभाजित र विरोधाभासपूर्ण अवस्थाले अशक्त बनाइरहेको कुरालाई स्पष्ट पार्नुपर्दछ। पीडायुक्त, द्वन्दयुक्त मस्तिष्क भए तापनि आखिरमा मस्तिष्कले अपनाउन वा लिन खोज्ने नियम कस्तो हुन्छ त ? भन्ने बारेमा स्पष्ट हुनु जो कसैलाई पनि वर्तमान समयमा अति आवश्यक देखिन्छ। संक्षेपमा बेनियमको स्व-बोध नै नियमको प्रारम्भ हो।

मानिसले आजसम्मको इतिहासमा विभिन्न नियमहरू विभिन्न क्षेत्रमा स्थापित गरेका छन्। यस्ता नियमहरू स्थापित गर्नाको कारण सुरक्षा प्राप्त गर्नको लागि हो। त्यस्तै गरेर मानिसको मस्तिष्कले पनि सुरक्षित हुन चाहन्छ र मस्तिष्कले कुनै दुःख, चोट,पीडाको अनुभूति गर्न चाहँदैन। जसरी गणितको नियम आफैंमा स्वच्छ र सु-संगठित छ त्यसरी नै मानव मस्तिष्क सुरक्षित र स्वच्छ हुन चाहे तापनि मस्तिष्क विभाजन र द्वन्दले आक्रान्त भई जगतको प्राकृत नियमसँग सुमधुर मेल राख्न सकिरहेको छैन। यस प्रश्नको बारेमा मन्थन गरी तथ्य कुरा स्व-बोध हुनु अति आवश्यक छ। क्यान्सर रोगले शारीरिक तहमा गर्ने बिनाशले मानव मस्तिष्कमा पूर्ण स्वतन्त्रता र स्वस्थता ल्याउन कदापि सक्दैन। मानिसले बनाएको संगठित नियमले मस्तिष्कलाई विरोधाभासपूर्ण र अलोचदार बनाई स्वतन्त्र बनाउन नसकेको कुरा स्पष्ट रूपमा पूर्वाग्रहयुक्त धारणा बोकेका वा पार्टी परिवर्तन र पार्टी विभाजन गरी उत्पन्न गराइएका उत्तेजनाहरू र खोक्रो आदर्शहरूले छर्लङ्ग्याइदिएको छ। यसरी स्वतन्त्रताको नाउँमा पूर्वाग्रही बनाउँदै मस्तिष्कमाथि चोट पारिरहेको पाइन्छ। मानिसहरूले आजसम्म यसरी नै कुनै न कुनै धारणा वा वादलाई क्यान्सरजस्तै रोगको रूपमा मस्तिष्कभित्र विकसित गराइरहेका छौं। यो बेनियमबाट जबसम्म मानिस स्वतन्त्र हुन सक्दैन तबसम्म यो आफैंमा युद्ध गरिरहन्छ। अर्को शब्दमा, संघ-संगठन र सेवा गर्ने विचारहरूको नाउँमा पार्टीबाट विस्तारित हुँदै देश-देशहरूबीच युद्ध चर्किंदै जाने कुरा निश्चित छ किनभने यो बेनियमबाट स्वतन्त्रता प्राप्त गर्न कसैको दबाव र लोभलालसाबाट सम्भव छैन। विचारले मापन गरिराखेको प्रभावबाट मुक्त हुनु नै स्वतन्त्रताको द्वार खोल्नु हो। वैचारिक स्वतन्त्रता केवल आदर्शको स्वतन्त्रतामात्र हो। यदि हाम्रो मस्तिष्कले शताब्दीऔंबाट चल्दै आइरहेको बेनियमलाई संशोधन गरेर पूर्ण नियमको संज्ञा दिइ आत्मसाथ गरेर हिंडेमा त्यो केवल खोक्रो अव्यावहारिक वैचारिक स्वतन्त्रताको अर्थ बन्न पुग्दछ। तर,





मानव मस्तिष्क स्वयम्भित्र सुरक्षा गर्न सक्ने कुरा निहित भए तापनि त्यो सुरक्षाको अनुभूति भने हामी स्वयम् आफैंले आफ्नै मस्तिष्कभित्र अन्तर्दृष्टि लगाएरमात्र प्राप्त गर्न सक्दछौं।

हाम्रो बेनियमको स्रोत के हो ? यो बेनियम कहाँबाट आएको छ ? यो हाम्रो मस्तिष्कमा क्यान्सर रोगजस्तै बेनियमको विकास कसरी भइरहेको छ ? यस्तो अस्वस्थ बेनियमलाई कसरी मस्तिष्कको स्वस्थतासँग मिलाउन सकिन्छ ? किन यो मस्तिष्क पुरानो ढाँचा र संस्कृतितिर टाँसिन्छ र संस्कृतिलाई अगाँलो हाल्दछ ? जस्ता प्रश्नहरूको उत्खनन् गर्न मानिससँग समय नभएको वा ती नचाहिंदा दार्शनिक प्रश्नहरू हुन भनी पन्छाएको पाइन्छ।

मानिसको मस्तिष्क कुनै पनि पुरानो कुरालाई त्याग्दा हुन जाने खालीपन, एकान्तपन र आउने नयाँपनसँग डराउँदछ किनभने पुरानो परम्परा र संस्कृतिमा मस्तिष्कले शरणार्थीको अर्थात् सुरक्षाको ठाउँ पत्ता लगाउँदछ र शरणार्थी भएर बस्दा अवश्य नै केही न केही मस्तिष्कले राहत पाएको महसुस गर्दछ तर वास्तवमा के मानिसले खोजेको सुरक्षा मानिसको वरिपरि पुलिस र सैनिक राखेर प्राप्त हुन सकेको छ ?के सुरक्षा केही सीमित माथिल्लो दर्जाका मानिसहरूलाई मात्र प्रदान गरिने कुरा हो ?के पुलिस र सिपाहीको उपस्थितिले सुरक्षाको अर्थ दर्शाएको हुन्छ ?

मानिस एक आपसमा त्रसित भएर बाँचिरहेको छ र मानिसले जीवनलाई भन्दा आफ्नो बुद्धिलाई सर्वश्रेष्ठ दर्जा दिएर त्यही दर्जा र सम्मानले नै शरणार्थी शिविर खडा गरेर मानिसलाई शरणार्थीको रूपमा आमन्त्रित गरिरहेको छ र सुरक्षाको प्रत्याभूति दिने चेष्टा गरिरहेको छ। हामीलाई वास्तवमा पूर्ण सुरक्षाको अनुभूति चाहिए तापनि दुर्भाग्यवशः वर्तमान समयमा यो मस्तिष्क स्वयम्ले अरूलाई चोट, पीडा दिएर आनन्द मान्ने अर्थात् परपीडानन्दको विगुल फुक्ने वैचारिक ढाँचाको विकास गर्न पुगेको छ। **स्वयम् प्रकृतिको उपज हुँदाहुँदै पनि स्वयम्को आदर्श तथा तर्कको अहंकारले गर्दा स्वयम्ले आफ्नै बासस्थानमा अस्वस्थता तथा बेनियम सिर्जना गरिरहेको यो मानव प्राणीले विचार जन्माएको छ,उक्त विचारले कुनै एक आदर्श उन्मुख वास्तविकता जन्माएको छ र त्यो वास्तविकताले युद्ध निम्त्याएको छ। परिणामस्वरूप मानवले मानवसँग गर्न नहुने अमानवीय लज्जास्पद घृणित व्यवहार गरिरहेको छ।** मानवले जे कुरालाई स्थायी छ भनेर सोच्ने सोचाई बाहेक यहाँ अन्य सम्पूर्ण कुराहरू अस्थायी छन्। मानवले यन्त्र बनाउँदै स्वयम् आफू पनि यान्त्रिक बन्दैछ र मानवलाई मानवले नै बनाएको यन्त्रले विस्थापित गराउँदैछ। जब

मानव निर्मित यन्त्रले मानवलाई नै निर्देशन, नियन्त्रण र दवाव दिने खालको अवस्था सिर्जना हुन थाल्दछ त्यो नै मानवको लागि मानव नै नरसंहारकारी युद्धको रचयिता हुने कुरा स्पष्ट हुनेछ।

यहाँ युद्ध, मारकाट झगडाजस्ता हिंसात्मक गतिविधिले मानिसलाई नै सुरक्षा प्राप्त गर्नलाई भएका छन् र हुनुपर्छ भन्ने आश्वासन र नाराहरूद्वारा हाम्रो मस्तिष्क यसरी जकडिन पुगेको छ कि यो मस्तिष्कले बाहिर जाने बाटोसम्म पनि देख्न सकिरहेको छैन किनभने दिमागमा एउटा वैचारिक स्थिर क्रमबद्धता वा नियमले नियमित रूपमा सधैं ठाउँ लिएर दिन प्रतिदिन भद्दा र यान्त्रिक बन्दै गइरहेको छ। यही यान्त्रिक स्वभावको कार्यले निम्त्याउने आलस्यतामा मस्तिष्कले शरण लिन पुगी आफूले आफूलाई कथा र आदर्शमा सहानुभूति र सान्त्वना खोज्दै अगाडि बढ्नुपर्ने विचारको पूजा गरिरहेको छ। **यही विचारको पूजारी नै बेनियमको भाग हो।** यसरी विचार स्वयम्मा विरोधाभासपूर्ण र विभाज्य छ र यसले सुरक्षा प्रदान गर्ने आश दिलाएर क्यान्सरजस्तै खतरामूलक वैचारिक बेनियम बनाउन सफल भएको छ भनेर जबसम्म मस्तिष्क स्वयम्ले तुरुन्त यस्तो बेनियमको अस्तित्वलाई पूर्ण परिवर्तन गर्नुपर्ने कुरालाई तत्काल देख्दैन तबसम्म त्यही बेनियमलाई नै विभिन्न तरिकाहरूबाट संशोधन गर्दै निरन्तरता दिनेबाहेक अरू केही पनि काम गर्न नसक्ने देखिन्छ। त्यसो हो भने यो बेनियमलाई हटाउन वा परिवर्तन गर्न कसरी सम्भव छ ?

**अन्तर्विवेक प्राकृतिक नियमसँग सम्बन्धित हुन्छ। अन्तर्विवेकले वैज्ञानिक तरिकाले नियमको अनुभूति गर्ने कुराको माग गर्दछ।** अर्को शब्दमा अन्तर्विवेक कुनै विरोध र विभाजन बिना नै हेर्नुपर्ने नियमको अनुभूति गर्नुपर्ने माग गर्दछ तर हामी आफैंले यो विरोधबिनाको नियम सिर्जना गर्न सक्दैसक्दैनौं किनभने त्यो स्वतःस्फुर्त स्वभाविक र प्राकृतिक हुन्छ। जसरी प्रकृतिको नियम ब्रह्माण्डको नियमभित्र स्वस्थरूपले चलिराखेको छ त्यसरी नै मानिसभित्रको मस्तिष्कमा पनि स्वःस्फुर्त सिर्जना हुने विरोधाभासविहीन नियम स्वभावतः आएको हुनुपर्दछ। यस्तो नियम कसैले पनि दिएर,प्रयास गरेर नियन्त्रणमा राखेर डर धम्कीबाट आउँदैन। मानिसले वैचारिक समयलाई नै आफ्नो पूर्ण अस्तित्व ठानी बेनियम सिर्जना गरिरहेको छ। मानिसले भविष्यको बारेमा जतिसुकै सोचेर तीव्ररूपमा काम गरे तापनि विगतलाई त्याग्न नसक्नाको कारणले नै कल्पनामा बहने र रमाउने प्रवृत्ति विकसित गर्न पुग्दछ। यस्तो प्रवृत्ति कुनै पनि वादहरूमा बल्भनेहरूमा पाइन्छ जसले वर्तमानलाई नष्ट गरेर भविष्य साकार





बनाउने सपना देखेका हुन्छन्। कुनै पनि नयाँ सपनालाई पूरा गर्न नसक्नु नै उक्त सपना विगतबाट सिर्जित गरिने भएकोले हो जसले आफ्नै यान्त्रिक संस्कारलाई आत्मसाथ गरिराखेको हुन्छ। विगतमा शरण लिने कोसिस गर्नुहुँदैन भनी गरिने कुनै पनि प्रयासले झन् विगतलाई नै सजीव बनाउने हुनाले विगतलाई मानिसले जे जस्तो प्रयास गरे पनि विगतमा नै झन् टाँसिन पुगिने कुरा स्पष्ट हुन आउँदछ। के हामीले विगतबाट उपयोगी कुराहरूलाई मात्र राखेर मनोगत द्वन्द उत्पन्न गराउने कुराहरूलाई छोड्न सकिदैन र ? भनेर प्रश्न गर्नु पनि भविष्यतिर उन्मुख हुन खोजेको देखिन्छ। हाम्रो चिन्तन विचारहरू सबै विगतको जराहरूबाट उत्पन्न हुन्छन्। विगत मरिसकेको लाश भएकोले विगतमा आश्रय लिएर विचारले नयाँपन दिन खोज्नु भनेको मरेको मानिससँग कुरा गर्न खोज्नुजस्तै हो। विगतले नियम बनाउन सक्दैन किनभने विगत बेनियमले व्याप्त हुन्छ। विगत अपरिवर्तनशील हुने भएकोले विगतलाई आधार मानेर वर्तमानको परिवेशमा काम गराउन खोज्नु मानिसको दृष्टिभ्रम हो। अझ मानिसले कुनै पनि वर्तमान कुराहरूलाई हेर्नु परेमा विगतमा आश्रित नभई हेर्न खोज्नुपर्दछ भनेर हेर्न खोजे तापनि विगतमै गएर टुङ्गिन पुग्दछ किनभने मानिसको ज्ञान, अनुभव र अस्तित्व भन्नु नै विगत अर्थात् समय हो। यदि कुनै नयाँ कुरा महसुस हुन्छ भने पनि त्यो नयाँपनको उदय विगतको आधारमा उत्पन्न हुने भएकोले मानिसले कुनै पनि हालतमा वर्तमानमा रहेर हेर्न सक्दैन। यस्तो अवस्थामा मानिसले पूर्ण शून्यतालाई सामना गर्नु बाहेक अन्य कुनै बाटो रहदैन र हुँदैन पनि। मानिसले विगतलाई कुनै सजायँ वा पुरस्कार बिना नै स्वतः जाने अनुमति दिनुपर्छ तब मात्र मस्तिष्कले नियन्त्रित इन्द्रियवासना र दबाव बिना नै यो असाधारण र पूर्ण रूपमा शून्यताभित्रको भयानक नयाँ अस्तित्वको अवस्थालाई सामना गर्न पुग्दछ। यहाँ यी प्रयोग गरिएका शब्दहरू पनि विगतसँग सम्बन्ध जोडिएका भए तापनि हामीले शब्द कहिल्यै पनि तथ्य बन्न नसक्ने कुरालाई बोध गर्नुपर्दछ। **तर्कमात्र गरेर व्यवहारमा नउतार्नु विचारलाई सर्वश्रेष्ठ सम्मान प्रदान गर्नु हो।** विचार सत्य होइन,वास्तविकता होइन। सत्यता व्यवहारमा तुरुन्त लागू हुन्छ। सत्यता जब देखिन्छ, बुझिन्छ तब स्वतः प्रकाशमय हुन्छ। दिमागले सम्पूर्ण कुराहरू जान्दछ भनेर भन्नु भ्रम हो र यही भ्रमले गर्दा नै दिमागमा दाग लागेको हुन्छ, शरणार्थी शिविर खडा गरेको हुन्छ तर दाग नलागेको दिमागले विगतलाई सजिलैसँग जाने अनुमति दिइराख्दछ।

परम्परागत संस्कारमा शरण पर्ने बानी बसिसकेको मस्तिष्कका कोषहरूमा बेनियम स्थापित भएको हेर्ने सबैभन्दा सबल प्रमाणको रूपमा स्वयम्ले अरूप्रति र

आफूप्रति गरिने सचेतताअन्तर्गत प्रस्तुत गरिएका घृणा, रिस, इर्ष्या, घमण्ड र स्वार्थयुक्त वैचारिक प्रक्रियाले मानिस-मानिसबीच भिन्नता र विभाजन ल्याएको कुराबाट स्पष्ट गराउनुको साथै स्व-बोध गर्न पनि सकिन्छ । मानिसले अधिकांश शक्ति पैसा कमाउन, मनोरन्जन गर्न, इज्जत कमाउन आदि कुराहरूमा प्रवाहित गरेकोले नै हामीमा अन्तर्दृष्टिको लागि आवश्यक शक्ति छैन भनेर सोच्दछौं तर यदि हामीहरू गम्भीर रूपले आमूल परिवर्तन गर्न अग्रसर हुने हो भने अवश्य नै प्रत्येक व्यक्तिसँग अन्तर्दृष्टि प्राप्त गर्ने शक्ति छ । **इर्ष्या, घृणा र अहंकारले व्याप्त मस्तिष्क स्वयम्ले वैचारिक विभाजनको खेल बुझ्ने संस्कारले प्रदुषित मस्तिष्कका अस्वस्थकोषहरूलाई बोध गर्नेबित्तिकै व्यक्तिमा नौलो क्रान्तिकारी परिवर्तन आउँदछ ।** मस्तिष्कका कोषहरूमा स्वस्थताको प्रारम्भ हुन्छ । मानिसले इतिहास पढेर होसियारीपूर्वक सोच्दै रिस, युद्ध, घृणालाई अति गहिरो तहबाट अध्ययन गरी उक्त हिंसा र रिसको उत्तेजनाले मस्तिष्कमा पार्न सक्ने आघात्लाई हेर्ने बित्तिकै अकस्मात् उद्भव हुन जाने अन्तर्दृष्टिबाट तत्काल कोषहरूमा परिवर्तन हुन जान्छ र तत्काल समायोजनले अग्रगति लिइहाल्दछ किनकि यस्तो परिवर्तनले समय र विचारको माग गर्दैन । अन्तर्दृष्टिले कोषहरूबीचको गलत सम्बन्धको जोडाइलाई अर्थात् अन्त्य गरी उचित सुमधुर सम्बन्धको गति स्थापना गर्दछ । **प्राकृत नियमको प्रारम्भ अन्तर्दृष्टिबाट उदय हुन्छ ।** सत्यतालाई झुटको सहाराले पत्ता लगाउन सकिदैन । त्यसैले अन्तर्दृष्टि प्राप्त हुनेबित्तिकै स्व-ज्योतिले आफ्नो शक्ति उत्पन्न गरी ठूलो छलाङ्गलाई सम्भव बनाउँदछ । अन्तर्दृष्टिमा विचारको मनोगत गति हुँदैन तर त्यहाँ तथ्यगत ज्ञानको स्थान स्वतः रहेको हुन्छ । जबसम्म कुनै व्यक्तिको मानसभित्र स्वयम् शून्यता सिर्जना हुँदैन, सत्यताको दर्शन हुँदैन तबसम्म कसैले पनि कसैलाई दवाव, शिक्षा, लोभ आदिद्वारा शून्यता, सत्यता सिर्जना गर्न-गराउन सक्दैन र शून्यता कसैले दिएर आउने कुरा पनि होइन । विगतलाई आधार लिएर केही बन्न खोज्नु वर्तमानलाई भविष्य बनाउनु हो । पूर्णरूपमा समस्याको उत्तर वर्तमानमा रहेर वर्तमानमा नै हेर्नुपर्दछ तर विगत वा भविष्यबाट हेरेर समाधान गर्ने कोसिस गरेमा आंशिकरूपमा समाधान भएजस्तो देखिन्छ तर समस्याको जरो भने यथावत रहिरहेको हुन्छ । विगतको कुनै सानो अंश पनि अस्तित्वमा आएमा त्यसले मानसमा भ्रम उत्पन्न गराउँदछ । मानस भ्रमबाट पूर्णरूपमा स्वतन्त्र हुनुपर्दछ । इच्छा, सुरक्षा, आसक्ति तथा ईश्वरप्राप्ति जस्ता कामनाद्वारा निर्मित भ्रमबाट मानस स्वतन्त्र हुनुपर्दछ । जब मानसलाई खाली गरिन्छ तब स्वतः ढोका उघारिन्छ, अन्यथा जीवनको यान्त्रिक कार्य ढाँचामा दौडेर प्रभावित पेसागत घोकन्ते





शिक्षा ग्रहण गरी पैसा कमाउनु, विवाह गर्नु, सन्तान जन्माउनु र उनीहरूलाई पनि त्यही शैक्षिक ढाँचामा शिक्षित बनाई मृत्युको मुखमा धकेल्नुजस्ता कामहरू गर्न पुगिन्छ । जब सत्यताको ढोका स्वतः उघारिन्छ तब त्यहाँ विगत स्वतः आफ्नो ठाउँमा स्थान ग्रहण गर्न पुग्दछ । त्यो विगत मेसिनको जस्तो सदा एउटै ढाँचामा नहिँडी सिर्जनशील र गतिशील भएर हिड्दछ । **त्यही सिर्जनशील गति नै नियम हो ।**

मानवीय ज्ञानको उचाइमा आज पूर्ण र सत्य मानिएको कुरा भोलि गएर त्यो ज्ञानको सीमा र उचाइ तोडेर अगाडि बढ्दा अपूर्ण सावित हुने कुरालाई विज्ञानले स्पष्ट पारि सकेको छ र उक्त कुरालाई बोध गर्न कुनै पनि व्यक्तिले वैज्ञानिकहरूले गरेको खोजबाट मात्र नभई आफ्नै मन-मस्तिष्कको गतिबाट पनि दर्शन गर्न सकिन्छ । विगतमा हेरिने र बुझिने जुन आधारहरू थिए आज त्यो आधारभन्दा फरक आधारबाट अध्ययन गरेपश्चात्को बोधले हिजोको यथार्थ अधुरो र अपूर्ण रहेको स्पष्ट गराउँदछ । विज्ञानले अहिले जति पनि मानिसलाई भौतिक ज्ञान उपलब्ध गराउन सक्षम भएको छ त्यो कुनै पनि हालतमा अन्तिम र पूर्ण छैन र हुन पनि सक्दैन । वास्तवमा ज्ञान जहिले पनि अपूर्ण हुन्छ । सूर्य उदय र अस्तबाट सुरू भएर हिजोबाट आज, आजबाट भोलि हुँदै हप्ता, महिना, वर्ष र शताब्दीऔंबाट अनुभूति गरिने एक प्रकारको भौतिक समय पनि एउटै हुँदैन किनभने कुनै एउटा स्थान (पृथ्वी)मा रहनेहरूका लागि दिन र रातले जुन समय मापन गरी अभिव्यक्त गर्न पुगेको हुन्छ त्यो चन्द्रमा, बुध वा अन्य ग्रहमा रहनेहरूका लागि पृथ्वीको जस्तै एउटै समय मापन हुन कदापि सक्दैन किनकि पृथ्वीको गतिमा आधारित समय र अन्य ग्रहहरूको गतिमा आधारित समय फरकफरक हुन्छ । यसरी समयलाई गतिले जन्म दिइरहेको हुनाले समय पनि गति सापेक्ष हुन्छ । अहिले पृथ्वीको एक दिन र एकरातलाई २४ घण्टामा मापन गरिएको कुरालाई करौडौं वर्षपहिले २१ घण्टामा मापन गर्ने गरिन्थ्यो भन्ने कुरा वैज्ञानिकहरूले पत्ता लगाइसकेको पाइन्छ । विज्ञानले जुनसुकै गतिमा चलेका अवलोकनकर्ताहरूको लागि पनि प्रकाशको गति (१ सेकेण्ड बराबर ३ लाख कि.मी.) एउटै हुने र तीव्र गतिमा रहेको व्यक्तिको समय कम गतिमा रहेको व्यक्तिको समयको तुलनामा ढिलो चलेको अनुभूति हुने कुरा पनि प्रमाणित गरिसकेको छ । वैज्ञानिक रूपमा दृष्टि लगाउँदा ब्रह्मण्डमा हरेक बस्तु समय र स्थानमा मात्र गतिशील नभई समय आफैं पनि वस्तुको गति स्थानअनुसार बढी वा कम गतिशील हुने गरेको पाइन्छ । समय निरपेक्ष कुरा होइन र समय वस्तुको गति-स्थान सापेक्ष कुरा हो । यसरी भौतिक समय पूर्णत स्वतन्त्र नभई अन्तरिक्षसित मिलेर

अन्तरिक्ष-समयको धरातल बनाउँदै अन्तरिक्षलाई चेप्टो नबनाई घुमाउरो बनाएको पाइन्छ। वैज्ञानिक रूपले विश्व-समयमा आधारित नभए तापनि साधारतया मस्तिष्क समयमा विकसित भएको भनेर भन्छन् तर त्यसरी भन्नुभन्दा बरु मस्तिष्कले समयमा टाँसिने प्रवृत्ति निर्माण गरेर मस्तिष्क आफैंले समयको दास बन्न लालायित भएको जस्तो देखिन्छ। मस्तिष्कले समयलाई दिनुपर्नेभन्दा बढी महत्व दिएर समयलाई नै एउटा र अन्तिम सत्य मान्न पुगी सम्पूर्ण समस्याहरूको समाधान निकाल्न सक्दछ भनी समयलाई पूजा गर्ने गरेको पाइन्छ तर वास्तवमा समय कुनै पनि हालतमा निरपेक्ष कुरा होइन भन्ने वैज्ञानिक तथ्यले पनि समयलाई त्यस्तो पूजा गर्ने परिपाटीमाथि प्रश्न गर्नुपर्ने आवश्यकता औंल्याएको पाइन्छ। मस्तिष्क ब्रह्माण्डको एक भाग भए तापनि यथार्थतामा विचारले मस्तिष्कलाई समयभित्र बल्झाइदिएको पाइन्छ। त्यो बल्झिएको गाँठोलाई फुकाएर मानसले ब्रह्माण्डमा ठूलो छलाङ्ग मार्न सक्ने शक्ति प्रत्येक मानिसमा ब्याप्त छ। सूर्य चन्द्रले ब्रह्माण्डको नियम पुरा गर्न समय चाहिए तापनि केवल समयले मात्र समस्या समाधान गर्ने एउटा र अन्तिम आधार हुन सक्दैन। मस्तिष्कको विकासक्रमले समयको माग गरे तापनि मानस(विचार, भावना, तर्क, अनुभूति, शरीर इत्यादि = Mind) मस्तिष्क (विचार = Brain) माथि भर पर्न सक्दैन र यदि ब्रह्माण्ड समयको उपज होइन भने मानसले गर्न सक्ने स्वत: आफ्नो सिर्जना र विकासका मानवीय गुण प्रदर्शन गरी ब्रह्माण्डमा लीन हुन पुग्दछ। त्यही नै नियम हो र ध्यान पनि। मानस अर्थात् जीवन भौतिक समयको उपजको सीमाभित्र कैद हुने कुरा होइन।







## उत्तरदायित्व – कसको कहाँ र कतिसम्म ?

उत्तरदायित्वले उचित प्रत्युत्तर दिनसक्ने क्षमतालाई जनाउँदछ। यहाँ उचित प्रत्युत्तर भन्ने शब्दले कुनै व्यक्ति विशेषलाई मात्र नलिई आफूले गर्ने कामको साथसाथै वरिपरिको वातावरण र घटनाहरूप्रति पनि प्रत्युत्तर दिन सक्ने कुरालाई औंल्याएको पाइन्छ। यस्तो समग्रतामाथि दिइने प्रत्युत्तरको क्षमता अति गहन र तीव्र हुन्छ। श्रवणकर्ताको प्रचण्ड पहलबिना केवल वक्ताले चेतनाका वास्तविकताहरूलाई देखाउने काम फिका हुन पुग्दछ। वक्ताका कुराहरूलाई वैचारिक व्याख्याको रूपमा लिई बौद्धिक मनोरञ्जनको साधन बनाई शाब्दिक धरातलभन्दा पर जान नसकिएमा त्यसले केवल धारणाको रूपमात्र लिन पुग्दछ तर यदि वक्ताको सहायताद्वारा श्रवणकर्ता स्वयम्ले आफ्नो मानसको वास्तविक अवस्था र चेतनाभित्र सङ्ग्रहित सूचीलाई अनुभूति गर्न सक्दछ भने वक्ताले बोलेका शब्दहरूले कुनै एक हदसम्म एउटा निश्चित महत्व बोकी काम गरिरहेको अनुभूति गर्न सकिन्छ तर हामीले वक्ताका कुराहरूभन्दा पनि आफ्नै चेतनाभित्र अस्तित्वमा रहेका कुराहरूको श्रवणलाई बढी महत्व दिइरहनु पर्ने आवश्यकता मनन गर्नुपर्ने देखिन्छ। सबैभन्दा महत्वपूर्ण त वक्ता र वक्ताको शब्दभन्दा पनि स्वयम्ले स्वयम्लाई हेर्नु हो। यसरी स्वच्छ शान्त पूर्वाग्रहविहीन हेराइ र सुनाइले पक्कै पनि हामीलाई केही कुराहरू सिकाइराख्दछ। वास्तवमा आफूले आफैलाई हेरिरहेको हेराइमा नै पूर्ण स्वतन्त्रताको प्रादुर्भाव हुन्छ र त्यो पूर्ण स्वतन्त्रताभित्र मात्र सम्पूर्ण मानसले कार्य गर्न सक्दछ। जब सबैलाई समेट्नेकाम हुन्छ तब त्यहाँ समग्रता र अनुक्रम अर्थात् नियम हुन्छ। त्यसपछि मात्र त्यहाँ अनादिकालको पवित्रताले बास गर्दछ। **फुर्सद भन्नु नै सिकाइले पूर्ण रूपमा स्थान लिन सक्ने असिमित अवलोकनको स्वतन्त्रता हो।** नजान्नु स्वीकार गर्नु ज्ञानको यान्त्रिक प्रक्रिया को स्थगन हो तर जसले मलाई थाहा छैन भनेर केही कुरा पत्ता लगाउन समयलाई नै इंगित गरिरहन्छ भने त्यसले केवल संकलन मात्र गर्दछ तर सिक्न भने सक्दैन। मलाई थाहा छैन भनेर थाहा पाउनको लागि बाहिर खोज नगरी हिड्नेले सधैं बिना संग्रह सिक्ने अवस्थामा रहिरहन्छ। सिक्नको लागि स्वतन्त्रता हुनुपर्दछ तर यहाँ त........स्कूलमा अध्ययन गर्न आउने विद्यार्थीलाई कुनै पार्टी, संघ वा संगठनमा आबद्ध गराई विद्यार्थीको मौलिकतालाई प्रष्फुटन हुन नपाउँदै जिउँदै मार्ने काम गरेर क्रान्तिकारी शिक्षाको निर्लज्ज नारादिने र सानै उमेर देखि बन्दुक र आणविक शस्त्रअस्त्रको पाठ सिकाउने तथाकथित मानव सेवाका राष्ट्रिय तथा अन्तराष्ट्रिय व्यापारिक ठेकेदारहरूले यस संसारमा हुकुमी शासन गरेको सर्वविदितै छ।

यस संसारमा अधिकांश मानिसहरू कुनै न कुनै रूपमा सम्पत्ति, शक्ति र सम्मानका भोका भएका देखिन्छन्। जो व्यक्ति यो तीनवटा 'स' को भोकलाई स्व-बोध गरी अग्रगमन गर्दछ त्यसले प्राकृतः जीवनको मौलिकतालाई अवलम्बन गरीराखेको हुन्छ तर दुःखको कुरा यी तीन कुरा बिनाको जीवन जीवन नै नरहने अर्थको बोध गराउन सफल भएको छ – हाम्रो संस्कृति, समाज र शैक्षिक प्रणाली।

जसलाई जुन **स** को उपलब्धताको महसुरा हुन्छ त्यसको प्रयोग गरेर उपलब्ध हुन नसकेको **स** प्राप्त गर्न कुनै न कुनै रूपमा लागेको पाइन्छ। सम्पत्ति र सम्मान भएपनि शक्तिको भोका भएकोले सत्ता प्राप्त गर्न खोज्नमा तल्लिन हुने नेता, सम्पत्ति र शक्ति भएपनि कसैबाट आदर सम्मान प्राप्त गर्न नसकेको नेता र शक्ति र सम्मान भएपनि आफ्नो सम्पत्तिको बन्दोबस्त गर्न नसकेर घुस खाने नेताको चलखेल राजनीति क्षेत्रमा प्रशस्त पाइन्छ। कुनै पनि व्यक्तिलाई यी तीनैवटा कुराको प्राप्त हुन प्रायः सम्भव हुँदैन। धेरै जसो मानिसले आफ्नो कुनै पनि अभावलाई परिपूर्ति गर्नको लागि दबाव र आत्मग्लानीलाई सहर्ष स्वीकार गरेर पढेका र नपढेका सबैले आफ्नो हृदयको विपरित काम गर्ने गरेको पाइन्छ – चाहे यो कुरा विदेशमा होस् वा स्वदेशमा। परिवार मानिसको पहिलो पाठशाला हो भनेर भने तापनि स्कूलमा दिइने औपचारिक शिक्षाले भने विशेष चलाखी भुमिका खेल्न सिकाएको पाइन्छ।

धेरै जसो विद्यार्थीहरू कुनै शिक्षक वा व्यक्तिबाट आफ्नो बारेमा प्रशंसाको बोली सुन्न चाहान्छन्। विद्यार्थीले कुनै न कुनै आधारमा अगाडि बढ्नको लागि उत्प्रेरणा दिने व्यक्तिको अपेक्षा गरिरहेको हुन्छ। त्यस्तै कसैले आएर अल्छी भएर बसेको बेलामा स्फूर्ति जगाइदिएहुन्थ्यो वा बेरोजगार भएको बेला कसैले रोजगार दिलाइदिए हुन्थ्यो भन्ने जस्तो कुराले गुप्तरूपमा एक व्यक्तिले अर्को व्यक्तिमाथि अधिकार स्थापित गर्ने कुरालाई सायद अस्वीकृत गर्न मिल्दैन होला। हामीहरू स्वयम् आफूले कुनै काम गर्नुपर्दछ भन्ने दायित्व बोधको भावना भन्दा पनि हामीलाई कसैले आएर आज्ञा नदिएसम्म हामीले आफूले गर्नुपर्ने काम गर्न पनि चाहँदैनौं। अझ भन्ने हो भने हामीले गर्नुपर्ने आफ्नो काम अरू कसैले गरिदिएमा भाग्यमानी वा शक्तिशालीको महसुस गर्न पनि पछि पर्दैनौं। यसैले गर्दा नै हो कि सायद हामीलाई आज्ञा दिने आधिकारिक व्यक्तिहरू हामी स्वयम्ले नै स्थापित गर्न चाहान्छौ। हामी चाहान्छौ कि कसैले आएर हामीलाई केही गर्नको लागि झकझकाइ देओस्, प्रोत्साहन गरिदेओस्, कुनै पद, पैसा वा अन्य केही कुराले प्रलोभन देखाओस वा ग्यारेन्टी देओस्। यही कारणले गर्दा होला





सायद हामीलाई धार्मिक गुरुको पनि आवश्यकता महसुस भएको हुन सक्छ। तथ्य त यो हो कि हामी आफैंले आफूलाई विश्वास गर्नको लागि हेर्नसक्ने क्षमता नै छैन भन्ने सोचको विकास गर्नाले त्यस्तै सोचको पक्षधरका पाखण्डी व्यक्तिहरूलाई समाजमा राज गर्न दिइरहेका छौं र राज गरिरहेका पनि छन्।

**यदि गुरुसँग चेला आइदिएन भने गुरुको अस्तित्व नै नरहने भयले गर्दा स्वयम् गुरुले चेला बन्नुपर्ने परिस्थिति सिर्जना गरी तन्त्र-मन्त्र उच्चारण गर्ने व्यापारिक वस्तु तथा विधिहरू निर्माण गर्दै आफ्नो गुरु-स्वामीको व्यवसाय लाई निरन्तरता दिइरहेको कुरा स्पष्ट छ।** यहाँ जो कोही चेलाले पनि आफ्नो गुरुले दिएको उत्तरप्रति प्रश्नचिन्ह खडा गर्ने साहास गर्ने वित्तिकै उसको अस्तित्व नै संकटमा पर्न जाने निश्चित देखिन्छ। त्यसैले त गुरुवाद, स्वामीवाद, नेतावादलाई स्वतः स्वीकार गरी आफूलाई संरक्षण गर्ने बाहेक अन्य कुनै मार्ग भएको देखिदैन। यसरी अधिकांश व्यक्ति आज्ञा शिरोपर गर्न अति लालायित भएकोले नै मानिस स्वयम्भित्र निहित प्राकृत अन्तर्विवेकमा खिया लागेको छ, कृत्रिमताले राज गरेको छ। स्कूलमा अध्ययनरत विद्यार्थी स्वयम्ले गर्नुपर्ने कुराहरूलाई औंल्याउँदै विद्यार्थीस्वयम्भित्रको अन्तर्विवेकलाई जगाइ आधिकारिकताविहीन वातावरण सिर्जना गराउन प्रत्येक विद्यार्थी र शिक्षकले स्व-उत्तरदायित्वको बोध हुनु अति आवश्यक छ।

विद्यार्थी स्वयम्का लागि अति उच्च क्षमतामा शक्ति जागृत गराइराख्नको लागि प्रत्येक विद्यार्थी सामर्थ्यवान त हुन्छन् नै तर उनीहरूले त्यसो गर्दैनन् किनकि स्कूलमा उपस्थित विद्यार्थीहरू र शिक्षकहरू बीचको उचित सम्बन्धको अभावले गर्दा आएको उल्झन र अबुझपनले गर्दा त्यस्तो विज अंकुराउन नपाएको हुन्छ। यो अबुझपन र उल्झनलाई हटाउनको लागि सम्बन्धभित्र ममता निहितभएको हुनुपर्दछ तर ममता र भावुकता भनेका भिन्दाभिन्दै कुराहरू हुन्। भावुकता भनेको तर्कभन्दा पनि बढी उत्तेजनाले प्रभावित धारणा हो जसलाई आवश्यक भन्दा बढी बढाइचढाइ गरिएको हुन्छ। भावुकतामा मैले यो गर्नुपर्छ, म ठूलो मान्छे हो भन्ने काल्पनिक भाव हुन्छ तर प्रेम ममतामा भने अरूलाई चोट पार्न नहुने भाव व्याप्त हुन्छ। भावुकता कहिलेकाहीं उचित बनेतापनि निर्दयी हुन्छ। होशियार विहीन अशुद्ध भावुकतामा यान्त्रिकरूपको प्रतिक्रिया निहित हुन्छ। आदर्शवाद पनि भावुकता भएकोले यसले पाखण्डीपन उत्पादन गर्दछ। भावुकता दोस्रो दर्जाको उत्तेजना हो, मौलिकतामाथि छोपिएको मुकुण्डो हो। फूल सुन्दर छ र सुन्दरता महसुस गर्नुपर्छ भन्ने सोच आउने वित्तिकै भावुकताले जन्म लिइहाल्दछ।

फिल्म र टेली श्रृङ्गलाहरू हेर्दा आँशु झर्ने तर घरको यथार्थतालाई वेवास्ता गरी विभाजन र झगडा सिर्जना गर्ने बनाउनु पनि भावुकताकै अचम्मको खेल हो। आसक्ति हुनु नै भावुकताको जन्म हो। उत्तरदायी भावनाले शिक्षक विद्यार्थी बीचको सम्बन्ध अन्तर्गत एकले अर्कोलाई एकोहोरो सिकाउने नभइ दुवैपक्ष बीच सिक्ने र सिकाउने काम प्रार्दुभाव गराएको हुन्छ। असल सम्बन्ध अन्तर्गत विद्यार्थीले शिक्षकलाई पनि सिकाउन सक्दछ। जब दुवै पक्ष बीच सिक्ने कुराले ठाउँ लिने वित्तिकै त्यहाँ विभाजन रहदैन। त्यस्तो सम्बन्धले मित्रता र बाँडफाँड जस्ता कुराहरूलाई अगाडि सार्दछ। यो त्यस्तो अध्यापन हुन्छ जून सदा सिक्दछ र सिकाइरहन्छ। विद्यार्थीहरूले गरिरहेको अध्ययन र सतर्कताको कार्य बीचको सम्बन्धको बारेमा शिक्षक उत्तरदायी हुनुपर्दछ। शिक्षकले विद्यार्थीलाई केवल किताबी सुचना हस्तान्तरण गरी तालिम दिने चेष्टा नगरीकन जीवनको जटिलता र अपरिहार्यतालाई पनि बोध गनुपर्ने कुरालाई समेटेर अगाडि बढेको छ भने विद्यार्थी र शिक्षक बीच असल सम्बन्ध स्थापना हुन्छ। यसरी शिक्षकले समग्रता र पवित्रताको अध्ययन-अध्यापन गर्नु गराउनु आवश्यक देखिन्छ। सिकाइले मानिसलाई यान्त्रिकता बन्नुबाट जोगाउँछ। स्मरण गर्नु वा घोक्नुमा यान्त्रिकता हुन्छ तर सिर्जनात्मकता हुँदैन। जहाँ निरन्तर रूपले एउटै कार्यलाई दोहोऱ्याइन्छ त्यहाँ सिर्जना हुँदैन। बच्चालाई खेल्ने, हेर्ने र सुन्ने कलाको सिकाइ गर्ने समयमा किताबहरूको ठेली झोलामा बोकाएर अंग्रेजी भाषामा पोख्त बनाउने आमाबाबुको सपना सपना नै रहने कुरा बच्चासँग गम्भीर भएर स्नेहपूर्वक सम्वाद गर्न सकेमा सजिलैसित पत्ता लगाउन सकिन्छ। संग्रह बिनाको सिकाइले सदा सिक्दछ। कुनै पनि कुराको सिकाइले आफ्नै नियम माग गरेको हुन्छ। पूर्वाग्रहविहीन अवलोकन र श्रवणबाट नै अनुक्रम(नियम) पत्ता लगाउन सकिन्छ। जसरी स्वतन्त्रता बिना कुनै पनि चरा उड्न सक्दैन त्यसरी नै प्रत्येक जीवित प्राणीले स्वतन्त्रता बिना केही कुरा सिक्न सक्दैन। अनुक्रम (नियम) बिना स्वतन्त्रता हुँदैन। प्राकृतिक अनुक्रम अनुशासनबाट भिन्न हुन्छ। नियम भनेको जे छ त्यसलाई सामना गर्नु हो।

सिकाइ सीमितताको हुन्छ तर असीमितलाई हामी सिक्न सक्दैनौं। असीमितको सीमितसँग सम्बन्ध हुन्छ यद्यपि सञ्चार सधैं विभाजित र साँगुरो हुने भएकोले सीमितको असीमितसँग सम्भवतः कुनै हदसम्म सम्बन्ध राखी केही कुराको सञ्चार हुन सक्ला तर सञ्चार साधनले असीमितसँग पूर्ण सम्बन्ध भने राख्न सक्दैन।

सिकाइ नै समय हो तर हेराइसँग समय हुँदैन। हेर्नु र सुन्नु ठूला कला हुन्। बिनाकुनै कर्ता,प्रतिक्रिया र अवरोधबाट किताबमा भन्दा धेरै कुराहरू सिक्न सकिन्छ।





किताब आवश्यक भए तापनि हेराइ र सुनाइले इन्द्रियहरूलाई तिखो र खारिएको बनाउँदछ। इन्द्रियहरूको जागृति उच्च रूपमा गराइएमा मात्र वास्तवमा हेर्न,सुन्न र सिक्न सक्दछौ। अनुभवको अभाव र अनुभवको स्वतन्त्रता नै निर्दोषिता हो। नम्रता भन्नु ज्ञान अर्थात् केही प्राप्तिको घमण्ड होइन। मरिराखेको कुरा (जस्तैः अनुभव) प्रति अनभिज्ञता नै नम्रता हो।

खेल्नुमा नै सिकाइ निहित हुन्छ। सिकाइ संग्रहको कुरा होइन। जुन क्षणमा संग्रह सुरू हुन्छ तब सिक्न छोडिन्छ। **आत्मअनुशासन भन्नु कुनै आदर्श वा विचार वा विश्वासमा बाँधिएर बस्नु भन्ने बुझिन्छ। त्यस्तो मानस त्यही विश्वास वा विचारभित्र मात्र स्वतन्त्र अनुभव गर्न सक्छ तर वास्तवमा त्यो कैदखाना हो भनेर ढोका खोल्ने काम गर्नु स्कूलको काम हो।**

जबसम्म स्वयम् शिक्षक र आमाबाबुले नै प्रभावी र परम्परागत ज्ञानलाई बुझ्दैनन् र स्वतन्त्र हुँदैनन् तबसम्म विद्यार्थी र बच्चाहरूलाई आफ्नो प्रभावी ज्ञान स्थापित गर्न पछाडि पर्ने देखिदैनन्। कुनै बच्चाले झुटो बोल्दछ भने उसलाई झुट बोल्न नहुने आदर्श देखाएर झुटलाई पन्छाउनुको सट्टा झुट बोल्नाको कारण पत्ता लगाउनुपर्दछ र जसको लागि बच्चाको अवलोकन र अध्ययन प्रेमपूर्ण र धीरताका साथ गर्नुपर्दछ। आदर्शले बच्चालाई बुझ्नमा र बच्चा स्वयम्ले आफूलाई बुझ्नमा रोकावट ल्याएको छ। हामीले जे सोच्छौं त्यहीं नै बच्चाहरू बन्नुपर्छ वा हुनुपर्छ भन्ने आदर्श नबनाई बरु बच्चाको अध्ययन र बुझाईमा नै उचित शिक्षाको संलग्नता रहने कुरालाई गम्भीर रूपमा लिनुपर्दछ। बच्चाहरूलाई पनि कुनै निश्चित ढाँचामा विकसित गराउनुपर्ने र बच्चाहरू पनि शिक्षक र ठूलाबडाहरूको ढाँचाभित्र आबद्ध भई बुढापाका र शिक्षकहरूलाई खुशी बनाएको हेर्न चाहानु पर्ने तथ्यबाट शिक्षाले परम्परागत खास्टो ओडेको कुरा स्पष्ट हुन्छ। यदि शिक्षकको अन्तर्विवेकले विद्यार्थीलाई भन्दा पहिला शिक्षण विधिलाई प्राथमिक महत्वको कुरा बनाउँदछ भने विद्यार्थीलाई उक्त विधिमा समायोजन गर्ने कुरालाई बढी जोड दिन पुगी विद्यार्थीको प्राकृतिक स्वभावको ठाउँमा यान्त्रिकता स्थापित गर्न पुग्दछ। **कुनै पनि प्रणालीहरू वा वादहरू मानव मस्तिष्कका उपजहरू भएकोले आमूल क्रान्तिको प्रचण्डता सर्वप्रथम मस्तिष्कका उपजहरूभित्र खोज्नुभन्दा पनि मानव मस्तिष्कभित्रको वैचारिक प्रक्रियाभित्र प्रकाश पार्नु शिक्षाको एक प्रमुख कार्य हो।**

अधिकांश व्यक्तिहरू युवावस्थामा भावुक हुँदैनन् तर जब उमेर बढ्दै जान्छ तब

बाध्यता र तनावको कारणले सौर्न्दयलाई महसुस गर्ने भावुकताले व्यापकता लिँदै जान्छ र कृत्रिमताको बोलीले बास लिन पुग्दछ ।

ममता भनेको अरूहरूप्रतिको अग्रसर गति हो । कुनै पनि अबुझपनलाई हटाउन सर्वप्रथम अबुझपनप्रति अग्रसरता देखाएको हुनुपर्दछ तर त्यो अग्रसरता र गति कुनै व्यक्तिद्वारा प्रभावीत भई उत्पन्न भएको हो भने त्यो यान्त्रिक बन्न पुग्दछ र भावुकतालाई जन्म दिन्छ । प्रेम भावुकता होइन, पाखण्ड होइन । दबाब र बाध्यताको भावनाबाट स्वतन्त्र भएको वातावरणले व्याप्त स्कूलमा मात्र विद्यार्थीहरू स्वयम्ले जीवन जिउने गहन भावना र सजीवता सिर्जना गर्ने उत्तरदायित्व महसुस गर्न सक्दछन् । मैले मात्र काम गरेर यहाँ उपयुक्त वातावरण सिर्जना गर्न सकिदैन भनेर आफूले आफूलाई अरूहरूबाट पृथक बनाएर सोच्ने सोचाइले भावुकता, क्रुरता र हेलचक्र्याइँको भावना विकसित गर्दछ । ममता कुनै बस्तु होइन जसलाई यान्त्रिक तबरले उत्पादन गर्न सकियोस् । ममता कहिले आउने र कहिले जाने हुँदैन । हामी ममताको महसुस गर्दछौं तर हामी ममतालाई निरन्तरता दिने कुराले गर्दा भावुक बन्न पुग्दछौं । भावुकता ओइलाउने कुरा हो भने ममता होइन । यदि कसैप्रति वास्तवमा साँच्चिकै ममता छ भने त्यसलाई दबाएर राख्न सकिदैन । ममता कसैलाई जबरजस्ती प्रयोग गरेर, उत्तेजनामा ल्याएर, कसैको नक्कल गरेर नआई प्राकृतिक रूपमा त्यो भावना आउनुपर्दछ । प्रेम बाध्यता होइन, प्रेम त्यसलाई गर्छु यसलाई गर्दिन भनेर गरिने प्रेम प्रेम नभई आसक्ति हो, अभिलाषा हो जसले मोजमस्ती र दुःख दुवैलाई आमन्त्रण गर्दछ । कुनै पनि व्यक्तिले आफूभित्र ममता नभइकन ममतालाई के के कुराले अवरोध खडा गर्दछ भनेर पत्ता लगाउन सक्दैन । ममता तथ्य कुरा हो भने त्यसलाई कसैले पनि नष्ट र विकृत गराउन सक्दैन । ममता भन्ने कुरा राम्रो कार्य गरेर प्राप्त गर्छु भनेर सोच्दैमा आउने कुरा होइन । कुनै पनि व्यक्ति बिरामीलाई भेट्न भएर ममता भएको कुरा प्रमाणित गराउन पनि खोज्ने गर्दछन् । त्यो त ममताको नाउँमा विकसित गर्न खोजेको भावुकताले भरिएको पाखण्ड हो । धेरैजसो मानिस अरूलाई देखाउनकै लागि र अरूहरूबाट प्रशंसा प्राप्त गर्नको लागि काम गरिरहेको पाउँदछौं । यिनीहरूले कामलाई प्रेम नगरी प्रशंसा र देखावटीलाई प्रेम गरिरहेका हुन्छन् । ममता प्राप्त गर्ने उद्देश्यले गरिने उत्प्रेरित कार्यले ममताको प्रष्फुटनमा अवरोध खडा गर्दछ । कैदखानामा पाउने स्वतन्त्रता सीमित र अरूहरूको आधिकारिकता अडेको हुन्छ । दबाब र डर बिना सिकाइ असम्भव छ भन्ने मानसिकताका शिक्षकहरू भएसम्म स्कूल कहिले पनि घरको रूपमा स्थापित हुन सक्दैन । **कुनै पनि घर**





**वास्तवमा घर तब बन्दछ जब त्यहाँ कसैले पनि कसैलाई बिना डर आफ्ना कुराहरू स्वतन्त्रपूर्वक राख्न सक्ने वातावरण स्थापित भएको हुन्छ ।** त्यस्तै प्रत्येक सदस्यभित्र आफ्नो कार्यले वरपरको वातावरणमा पार्न सक्ने प्रभावप्रति पूर्णरूपमा सचेत भई घरको यथार्थताप्रति गम्भीर भएर अवलोकन गर्न सक्ने भावनाले बास गरेको हुन्छ । यदि कोही घरायसी भावनाले ओतप्रोत भएको छ भने उसमा उत्तरदायित्वको भावना प्राकृतिक रूपमा जुनसुकै ठाउँमा पनि आइरहेको परिणामस्वरूप ममताले स्वभाविक ठाउँ लिइसकेको हुन्छ । घर भावुकताले सिर्जना गर्दैन । वास्तवमा घर तथ्यको सिर्जना हो, ममताले परिपूर्ण भएको स्थान हो । यथार्थताप्रति उन्मुख घरमा भइरहेको स्वच्छ भावनाले पूर्ण उत्तरदायित्वलाई बोध गराउँदछ अन्यथा घर कल्पना र भावुकताको आदर्श बन्न पुग्दछ ।

अपहरण, भ्रष्टाचार, ठगी, विद्रोह, पीडा, आतङ्क र भयानक संक्रमण रोगहरूले आक्रान्त भइरहेको यो संसारमा बसोबास गरिरहेका कतिपय मानिसहरूको समस्याहरूको गम्भीरता र सचेततासँग वास्तवमा शिक्षाले कुनै वास्ता गरेको देखिदैन । **समस्याको गम्भीरतालाई औंल्याउने प्रमुख काम शिक्षाको हो ।** शिक्षा जीवनको ज्योति हो भनेर भनेतापनि यहाँको शिक्षा जीवनोन्मुख नभई जागिर उन्मुख, आर्थिक उर्पाजन उन्मुख भएको सर्वविदितै छ किनभने जागिर भएमा, पैसा भएमा नै जीवन सफल, सुखदायी र शान्तिप्रिय हुन जाने धारणाले हावी हुँदै गएको छ - हाम्रो समाज । यहाँको शिक्षा स्वयम् नै भ्रष्ट र आतङ्कलाई गतिदिनको लागि अग्रसर भइरहेको देखिन्छ । यहाँ बाँच्नको लागि समन्वय र सहयोग नभई संघर्ष आवश्यक छ, युद्ध आवश्यक छ, भन्ने सोचले निरन्तरता पाइरहेको छ । संघर्षको लागि एक अर्कोलाई मार्नुपर्ने प्रतिस्पर्धात्मक खेल स्वभाविक बन्न पुगेको छ तर संघर्ष त त्यहाँ हुन्छ जहाँ विभाजन हुन्छ । यहाँ धर्म, राजनीति, जातिवादले स्वयम् जीवनलाई विभाजित गराएकोले नै संघर्षको वीजारोपण भएको छ । समन्वय, सहयोग, एकता भनेको के हो भन्ने कुरा वास्तवमा हामीलाई थाहै छैन । जे जति थाहा छ त्यो सबै विभाजनको कारणले निम्त्याएको पाठ मात्र थाहा छ । विभाजनको कारण ले नै एकताको शुत्रपात गरेको देखिन्छ । प्रायःजसो हामी सर्वप्रथम सुन्दछौं, श्रवण पश्चात् एउटा धारणा वा सोच विकसित गर्दछौं र त्यसपछि त्यो धारणालाई व्यवहारमा उर्तान खोज्दछौं तर वास्तवमा श्रवण गर्ने वित्तिकै व्यवहारमा उतारेमा धारणाले ठाँउ नै पाउँदैन । धारणालाई उपयोग गरी व्यवहारमा उर्तानुले समयको माग गर्दछ ।

कुनै पनि व्यक्तिले धारणाविहीन, अबरोधविहीन भएर अझसम्म नगरेको कुरा सुनिरहेको हुन्छ भने उसले व्यावहारिक धरातलमा गमन गर्ने अग्रसरता देखाइसकेको हुन्छ तर यदि श्रवण पश्चात् कुनै विचार उत्पन्न गर्दछ भने त्यो श्रवण भित्र निहित व्यावहारिक तीव्रतालाई नकार्न प्रारम्भ गरिसकेको हुन्छ। यो कुरा समन्वय,सहायतामा पनि लागू हुन्छ। विद्यार्थीले यो कुरा पत्ता लगाउनु पर्दछ कि शिक्षकले सही शिक्षा दिइरहेको छ कि छैन भन्ने कुरा सर्वप्रथम श्रवण गरेको शिक्षालाई धारणामा रूपान्तरित नगरी बरु व्यावहारीक धरातलमा हेर्नुपर्दछ। कस्तो तरिकाले श्रवण गरेको छ भन्ने कुराले जीवन कसरी चलिरहेको छ भन्ने कुरालाई औंल्याइरहेको हुन्छ। कुनै कुराको तत्काल गरिने श्रवणकलाले उचित बसाई,लवाई र खुवाइलाई तुरुन्त आव्हान गरिहाल्दछ। श्रवणकला वक्ताबाट सिक्ने कुरा होइन। आफूलाई केही थाहा नभएकोले कुनै पनि कुरालाई वक्ताले गलत भन्न पनि सक्ने हुनाले सत्य र झुट पत्ता लगाउनको लागि सर्वप्रथम प्रभावहीन श्रवण गर्नुपर्दछ, सम्वेदनशील हुनुपर्दछ। सबैभन्दा महत्वपूर्ण कुरा भनेको श्रवणकला हो। यदि शिक्षक स्वयम्ले श्रवणकलाको महत्वलाई स्व-बोध गरेको खण्डमा अध्यापन गर्ने क्रममा विद्यार्थीलगायत शिक्षकले पनि एकअर्काबाट सिकिराखेको हुन्छ।

गुरु र शिक्षकले दिने शिक्षादीक्षाले जबसम्म वैचारिक प्रक्रियाको विष्फोटनतिर अग्रसर गराउँदैन तबसम्म गुरु-शिष्यको मनोगत शोषणको खेलले मुकुण्डो फेर्दै निरन्तरता पाइराख्ने कुरा स्पष्ट छ। गुरु कस्तो चाहिन्छ भन्नुभन्दा पनि किन गुरु आवश्यक छ त्यो महत्वपूर्ण कुरा हो। जब एउटा सानो अंशमा पनि स्व-ज्ञान छ भने **गुरु** अर्थहीन हुन जान्छ किनभने स्व-बोध अन्य कुनै पनि बाहिरी कुराले ल्याउन सक्दै सक्दैन। **सच्चा र असल गुरुले कहिल्यै पनि मलाइ बुझ नभनी बरु तिमी आफैंले** आफूलाई **बुझ भनेर भन्नुपर्दछ।**

श्रवणको लागि शान्त रहनु पूर्ण रूपमा आवश्यक हुन्छ जसबाट आन्तरिक र वाह्य गति फरक-फरक नभई एउटै गति हुने कुरालाई स्व-बोध गर्न सकिन्छ। पुरानो गुरु स्वामी र शिक्षकको ठाउँमा नयाँ व्यक्तिको चयन खोज्दै हिंड्ने मानिसहरूले स्वयम् निर्देशन वा पथ-प्रदर्शकको आवश्यकतामाथि प्रश्न उठाउने साहस गर्न सक्दैनन्। स्व-ज्ञान वा प्रत्येक पलको स्व-सिकाइबाट आन्तरिक रूपले नयाँ मानस प्रादुर्भाव हुन्छ किनभने पुरानो मानसको अस्तित्व रहेसम्म नयाँ मानसको प्रारम्भ असम्भव हुन्छ। यदि पुरानोको कारणले नयाँ स्थापित भएको हो भने त्यो पुरानै हुन पुग्दछ। वास्तवमा नयाँ स्वयम्ले पुरानोसँग कुनै सम्बन्ध राख्दैन।





## ज्योति - दियो कि सूर्य ?

यदि कुनै पनि व्यक्ति कुनै पनि निर्णय, परम्परा र अधिकारको छत्रछायाँ भित्र हुर्केको छ वा हुर्कने चाहना गर्दछ भने ऊ आफू स्वयम्को लागि ज्योति कदापी बन्न सक्दैन। त्यस्तो व्यक्ति अन्त्यमा गएर केही गर्न सक्यो भने पनि दियोले गर्ने कामबाहेक अरू केही गर्न सक्दैन किनभने दियो स्वयम्भित्र बलिरहने गुण निहित नहुने भएकोले अर्को दोस्रो व्यक्तिले नबालेसम्म बल्दैन र यदि बाली हाले तापनि त्यस्तो ज्योति दिगो कदापि हुन सक्दैन किनभने मागेको र अरूले बालेको दियो वा ज्ञान क्षणिक हुन्छ र सजिलै कुनैपनि हावाको झोकाले निभ्न पुग्दछ। त्यस्तै गरेर दियोको ठीक मुन्तिर सदा अध्याँरो रहिरहन्छ जसले पूर्णताको अर्थ कदापी झल्काउन सक्दैन तर दियोको ठीक विपरीत सूर्यको न त आफ्नो कुनै छायाँ हुन्छ न त कसैले बाल्नु पर्ने आवश्यकता पर्दछ,न त कुनै हावाको झोकाले निभाउन नै सक्दछ। त्यसैले **यहाँ सम्पूर्ण संगठित धर्म र पार्टीहरूले जे गर्न खोजिरहेका छन् त्यो केवल सूर्यको नाउँमा दियोले गर्ने काम अर्थात् विचारले गर्ने कार्यगत कामभन्दा पनि तुच्छ काम गरी उल्टै त्रासदीपूर्ण वातावरण कायम राख्न सफल भइरहेका छन्।**

जब व्यक्ति स्वयम्को लागि ज्योतिर्मय बन्दछ तब स्वतन्त्रता भन्ने कुरा भावुकता र वैचारिक उपज बन्न सक्दैन। **वैचारिक बनावटबाट स्वतन्त्र हुनु नै स्व-ज्योतिर्मय हुनु अर्थात् सूर्य बन्नु हो।** जहाँ सम्पूर्ण कार्यहरू अर्थात् जीवनको समग्रताले ठाउँ लिन्छ त्यहाँ कहिल्यै विरोधाभास हुँदैन। विरोधाभास जब कर्ता र क्रियामा विभाजन हुन्छ तब मात्र अस्तित्वमा आउँदछ। स्व-ज्योतिर्मय र विचार भन्ने कुरा एक साथ रहन सक्दैनन्। जहाँ विचारले निर्माण गरेको कर्ता वा वादको आगमन हुन्छ त्यहाँ स्वतन्त्रता हुँदैन। स्व-प्रकाशमयसँग कसरी भन्ने कुरालाई स्पष्ट पार्नको लागि न त कुनै प्रणाली हुन्छ न त अभ्यास नै। त्यहाँ केवल हेराइ हुन्छ र त्यो हेराइ नै कार्य हुन्छ। अर्को शब्दमा, हेर्नु नै कार्य गर्नु हो। यो हेराइ अर्काको आँखाले नभई आफ्नै आँखाले हेर्नुपर्ने हेराइ हो। **यो स्व-रूप ज्योति कसैको पेवा हुन सक्दैन।** यही स्व-ज्योति नै प्रेम हो। मानव स्वयम्ले कुनै पनि शाश्वत र पवित्र कुराको अस्तित्व छ भन्ने कुरा पत्ता लगाउनको लागि सर्वप्रथम सम्पूर्ण धारणा,वाद,सिद्धान्तहरूलाई पूर्णरूपमा हटाउन सक्नुपर्दछ। सत्य के हो भनेर पत्ता लगाउन मानवले विशेषतः धार्मिक अधिकारको अर्थात् गुरु-शिष्यको खेललाई पूर्णरूपमा अस्वीकृत गर्नुपर्दछ किनभने अधिकार भन्ने शब्दले कुनै न कुनै व्यक्तिको आज्ञा वा तरिकालाई शिरोपर गरी आधिकारिक

हुन्छ। कुनै पनि व्यक्तिको उत्तरलाई प्रतिप्रश्न गर्न नमिल्ने कुराले प्रभाव जमाइराखेको हुन्छ। कुनै पनि व्यक्तिले प्रतिपादन गरेको कुनै पनि ध्यानविधि र अधिकारलाई पूर्णरूपमा पन्छाएर हेर्न र अगाडि बढ्न सक्नु नै ध्यानको उचित प्रारम्भिक बिन्दु हो।

कुनै पनि मौलिक कुरा पत्ता लगाउनको लागि बैराग्य, वियोग र बैमनुष्यताले प्रभावहीन स्व-निर्भरता आवश्यक हुन्छ। जीवनको कुनै एक अंश वा पक्षलाई मात्र नभई जीवनसँग सम्बद्ध सम्पूर्ण पक्षहरूसँग सरोकार राख्नु नै जीवनको माग हो। मानिसले क्रमिक संशोधन गरी प्रगति र विकास गर्ने चिन्तनको बानी विकास गरेको छ। मानिसहरू मनोवैज्ञानिक विकासमा विश्वास गर्दछन् तर वास्तवमा विचारले प्रतिपादित मनोगत म वास्तवमा अस्तित्वमा हुन्छ त ? भन्ने कुरा पत्ता लगाउनको लागि सर्वप्रथम मानिसले मानस (MIND) लाई पूर्णरूपमा शान्त बनाउनको लागि विचारलाई नियन्त्रण गर्न र दबाव दिन सकिन्छ कि सक्दैन भन्ने प्रश्न गरी स्व-बोध गर्नु आवश्यक देखिन्छ। यदि कुनै व्यक्तिले कसैलाई प्रश्न गर्ने बित्तिकै आफूलाई प्रश्नबाट पृथक बनाएर नियन्त्रक र नियन्त्रितको कथा सुरू गर्न पुग्दछ। यहाँ वास्तवमा प्रश्न गर्नुपर्ने कुनै ठाउँ नै छैन। छ त – केवल उत्तरहरू मात्र। तर व्यवहारमा मानिसले समस्याहरूलाई हेरेर म के गरुँ ? भन्ने प्रश्न गर्ने निर्णयले विभाजन ल्याई समस्यालाई ओझेलमा पार्दछ। नियन्त्रणको कार्यले जहिले पनि नियन्त्रक र नियन्त्रितको अर्थ दिन्छ। नियन्त्रक विचारले नै स्थापित अंश भएकोले नियन्त्रक नै नियन्त्रित हो। त्यस्तै गरेर द्रष्टा र दृश्य, अनुभव कर्ता र अनुभव गरिने वस्तु एउटै कुरा हुन् भन्ने सत्यता स्पष्ट हुन्छ। विचारक र विचार, नियन्त्रक र नियन्त्रित भन्ने जस्ता दुई भिन्न कुराहरूको अस्तित्व रहँदैन भन्ने स्व-बोध हुने बित्तिकै नियन्त्रणको आवश्यकता पर्दैन। जबसम्म नियन्त्रक र नियन्त्रित भन्ने विभाजन रहन्छ तवसम्म द्वन्द रहिरहने हुनाले शरीरको शक्ति क्षण हुन्छ। त्यसैले जसले विचारलाई नियन्त्रण गर्छ, अनुशासनमा राख्ने प्रयास गर्दछ त्यो पनि विचारकै विभाजित अंश हुने भएकोले विचारले गर्ने कुनै पनि कामले विभाजनतर्फ अग्रसर गराउँदछ। जब यो सत्यतालाई देखिन्छ तब दबाब, नियन्त्रण र तुलनाद्वारा क्षण भएको शक्ति पुनः प्राप्त हुन्छ। बाहिरीरूपले तुलना गर्नु सान्दर्भिक र आवश्यक देखिए तापनि आन्तरिकरूपले कसैसँग मानसिक तुलना गरेर यदि जीवन जिउन खोजिन्छ भने सम्पूर्ण समस्याहरूको सिर्जना गर्न पुगिन्छ। त्यसैले तुलनाबिना नै जिउने जीवनले अनावश्यक बोझलाई फालेर खेर गइरहेको शक्तिलाई पुनः प्राप्त गर्दछ। यदि मानिसले आफ्नो धारणा र झुकावलाई आधार बनाएर सुन्दछ भने त्यसलाई सतर्कता भनिंदैन। जब मानिसले सम्पूर्ण





तन, मन, विवेकले गम्भीर भएर श्रवण गर्दछ, हेर्दछ तब त्यहाँ कुनै म भन्ने केन्द्रको स्थापना हुँदैन जसले गर्दा मैले सुनिरहेको छु भन्ने कुरा अनुपस्थिति भई केवल सतर्कता हुन्छ। वास्तविक श्रवणको कार्यमा सतर्कताको चमत्कार अन्तर्निहित हुन्छ। यस्तो सतर्कताभित्र कुनै अवरोध, बन्धन नहुने हुनाले निर्देशविहीन दिशा हुन्छ। गम्भीर सतर्कताभित्र द्वैतताको अन्त्य हुन्छ तर यहाँ वर्तमान समयमा मानवलाई कुनै निर्धारित दिशातिर हिँडाउनको लागि विश्वास, धारणा र सूत्रहरूद्वारा निर्मित यथार्थ प्राप्तिको लक्ष्य निर्धारण गराइएको छ। जब कुनै दिशानिर्देश अस्तित्वमा आउँदछ तब त्यहाँ खाली ठाउँ रहदैन। ध्यानको अर्थले पूर्ण रूपमा शान्त, दिशाविहीन चलायमान मानसअवस्थालाई औंल्याउँदछ। गुण भन्नु नै बेनियमभित्र अन्तर्दृष्टि प्राप्त गरी आउने सजीव नियम वा अनुक्रम हो। मानव जीवन द्वन्दपीडित शोषणको खेल र कुनै वादको आदर्शले निम्त्याइएको नरसंहार खेलमा जकडिएको तथ्य कल्पना होइन, यथार्थता हो। **प्राकृत अनुक्रम(नियम) भन्नु नै तथ्यको सामना गर्नु हो।** तथ्यको पूर्ण सामना तब हुन्छ जब मानस शान्त हुन्छ र वास्तवमा शान्ति र आनन्दको सम्बन्ध ध्यान गर्ने कलासँग महत्वपूर्ण रहेको हुन्छ। कला भन्नाले दैनिक जीवनका सम्पूर्ण कुराहरूलाई स्वाभाविक स्थानमा राखेर उल्झन र अन्यौललाई हटाउनुलाई जनाउँदछ। मानवले गरिरहेको कार्य र सोचप्रति पूर्णरूपले सतर्क हुनु पनि ध्यानको एक भाग हो। ध्यान कुनै पनि हालतमा जीवनबाट भाग्ने बहाना हुन सक्दैन। ध्यानबाट नै पवित्र र स्वच्छ जीवन आगमन गर्ने हुनाले जीवनले सम्पूर्ण कुराहरूलाई पवित्र रूपमा लिने र व्यवहारमा उतार्ने गर्दछ।

**यथार्थता अर्थात् वास्तविकता के हो भनी पत्ता लगाउनु नै मानिसको एउटैमात्र स्वाभाविक र प्राकृतिक पेसा हो।** त्यसको खोजी गर्ने क्रममा कोही पनि व्यक्ति कहिल्यै पनि एक अर्कोको विरुद्धमा उभिन सक्दैन। विभिन्न व्यक्तिले त्यो सत्यता विभिन्न तरिकाले अभिव्यक्त गरे पनि मानिसहरू एक आपसमा प्रतिस्पर्धी बन्न सक्दैनन्। जबसम्म मानिसले आफ्नो त्यो प्राकृत पेसा पत्ता लगाउँदैनन् तबसम्म मानिस एक अर्काको विरुद्ध उभिएर जीवन-ज्योतिको नाउँमा झन् अधोगतिले अस्तव्यस्त बनाउने काममा अगाडि बढिरहने छ।



## शून्यताको गति – अविरल कि क्षणिक ?

प्रत्येक क्रियाको प्रतिक्रिया हुन्छ । कारण र असर पनि भौतिक प्रक्रिया हो। पदार्थसँग क्रिया प्रतिक्रियामात्र नभई सिर्जनशील गति पनि हुन सक्दछ । पदार्थले भौतिक प्रक्रियाद्वारा नयाँ रूपहरू सिर्जना गरे पनि त्यो त्यही भौतिक क्षेत्रभित्रको अस्तित्वमा रहन्छ । विचार भौतिक प्रक्रिया हो किनकि जब अनुभव र घटना घट्दछ तब त्यसलाई मस्तिष्कमा संग्रह गरी ज्ञान बन्दछ र त्यही ज्ञानबाट विचार जन्मिएर कार्य गर्न थाल्दछ। जबसम्म विचार भन्ने कुरा पदार्थको सूक्ष्म गतिको क्षेत्रमा रहेको हुन्छ त्यो अवश्य नै पदार्थको गति हुन जान्छ। विचारलाई सुरू र अन्त्य गर्न सकिन्छ । म बन्छु,बन्दिन,नियन्त्रण गर्छु,गर्दिन आदि सबै स्थिर क्रिया-प्रतिक्रिया हो । यो कहिल्यै अन्त नहुने पुनरावृत्ति गति हो जुन मेसिनजस्तै नियमित प्रतिक्रिया दिइराख्दछ । कुनै कुनै क्षणमा मेसिनको जस्तै तरिकाले प्रतिक्रिया नदिएको जस्तो देखिनु त्यो प्रतिक्रिया नभई शक्तिको गति हो किनभने त्यहाँ भौतिक बस्तुहरूको जस्तो एक आपसमा प्रतिक्रियाको गति हुँदैन। **संसारका सबै बस्तुहरू नै क्रिया र प्रतिक्रियाले बन्ने भएकोले यो एक किसिमको गति हो भने भौतिक प्रतिक्रियाविहीनताको गति अर्कै गति हो जसमा भौतिकताको गुण नहुने हुँदा त्यो समयको गति हुँदैन अर्थात् समय भन्दा पर हुन्छ। विचारमा प्रतिक्रियाको रूपमा भौतिकताको गति हुन्छ जुन क्षणिक हुन्छ तर शून्यता भौतिक पदार्थको प्रतिक्रिया होइन। त्यस्तो शून्यतामा प्रतिक्रिया नहुने हुँदा मनोगत 'म' को केन्द्र स्थापना हुन सक्दैन र त्यहाँ त अनन्त अनादि शक्तिको अविरल गति हुन्छ।**

प्राप्तिका सम्पूर्ण इच्छाहरू, धारणाहरू र अनुभवहरूको अन्त्य भएको शून्य मानस जुन जे छ, हो वा गरिरहेछतिर पूर्ण सतर्क र सचेत अवस्थामा रहिरहेर प्रत्येक पल मृत्युलाई आत्मसाथ गरी बाँचिरहन्छ र प्रत्येक पल नयाँ र निर्मल बन्दछ, ले मात्र सत्य शुभारम्भ गराइरहन्छ।

समय केवल भौतिक प्रक्रियाभित्र मात्र आउन सक्छ तर अनादि शक्ति चलायमान् हुन्छ, त्यहाँ विगतबाट वर्तमान र वर्तमानबाट भविष्य नभई केवल वर्तमानमात्र हुन्छ। जब मानस पूर्ण स्थिरतामा आउँदछ त्यही पूर्णताबाट गति उत्पन्न हुन्छ। अर्को शब्दमा, यही शून्यता र शान्तपनबाट ब्रह्माण्डको नियम अर्थात् अनुक्रम उत्पन्न हुन्छ। त्यसभित्र बिनाश र सिर्जना जुन भए तापनि अनादि शून्यताभित्रको नियमलाई असर पार्दैन। भूकम्प र ज्वालामुखीको विष्फोटन पनि ब्रह्माण्ड कै नियम हो। यसको अर्थ हो- **बिनारोकावटको अविभाजित मानस र ब्रह्माण्ड पूर्ण छन्, दुवै एउटै हुन्।** हामीले **जेलाई मानस भन्दछौं** त्यो शरीरभन्दा भिन्न कुरा होइन। हाम्रो दैनिक जीवनमा नियम **हुनुपर्दछ तर विचारको** नियम भने होइन किनभने विचारसँग सीमित नियम हुन्छ र त्यो **सापेक्षिक हुन्छ।** त्यहाँ त्यस्तो नियम हुनुपर्छ जुन सीमितताबाट स्वतन्त्र होस्। **बिवादरहीत,विरोधाभासविहीन** नियमबाट मात्र पूर्णता, मानवता, करुणा र एकता **स्थापित हुन सक्दछ।** विचार स्वयम्को सीमित तार्किकताको नियमले विरोधाभासको **सिर्जना गर्दछ।** स्वतन्त्रता प्रतिक्रिया होइन। शून्यतालाई बुझ्नुभन्दा पहिला हामी समयको **गति,विचारको** सीमितता र प्रतिक्रियाबाट स्वतन्त्र हुनुपर्दछ। शून्यताको गति अविरल **हुन्छ तर शून्यताबाट** परिस्थितिअनुकुल निस्कने गति प्रतिक्रियायुक्त क्षणिक हुन्छ।



## सिर्जनात्मक शक्ति – पूर्ण कि आंशिक ?

आंशिक सिर्जनात्मक शक्ति र अन्तर्दृष्टि प्रायजसो सबै व्यक्तिहरूमा निहित हुन्छ र उक्त शक्तिको अभिव्यक्ति मानव जातिले विभिन्न कलाहरू जस्तैः साहित्य, कविता, संगीत, गीत, चित्र, मूर्ति इत्यादिद्वारा व्यक्त गरिरहेको पाइन्छ जसले जीवनको कुनै एक पक्षलाई मात्र प्रभाव पारेको पाइन्छ जब कि अनादि शून्यताको शक्तिले सम्पूर्ण जीवनलाई नै प्रभाव पार्दछ। यस्तो अनन्त सिर्जनाको मूल स्रोतले क्षमता र ज्ञानलाई प्रयोग गरे तापनि वास्तवमा सिर्जनाले ती कुरासँग आधारभूत सम्बन्ध राख्दैन। यो मूल शक्तिको स्रोतको अति गहिराइमा यो सिर्जना अप्रदूषित विचारद्वारा प्रष्फुटन भइरहन्छ तर यो भौतिक संसारमा सिर्जनालाई खास गरेर यसले प्रदान गर्ने उपयोगिता, सौन्दर्य वा लोकाचार अनुरूपको अभिव्यक्ति प्रस्तुत गरेमा मात्र नाम र मूल्य दिने र रहने कुरालाई स्वीकृति दिएर सिर्जनात्मक अभिव्यक्तिलाई अपहेलित गरेको पाइन्छ। यदि कुनै पनि अभिव्यक्तिलाई अस्थायी अस्तित्वमा रहनु भन्दा बढी सम्मान र मूल्य दिइएको खण्डमा सांसारिक खेलमा अल्भिइरहने कुरा निश्चित छ। पवित्र सिर्जनात्मक अभिव्यक्ति पूर्ण रूपमा वैचारिक प्रभावरहित स्वःस्फूर्त हुन्छ। यदि कुनै कला वा काम प्रयासको परिणाम बन्नेबित्तिकै त्यसले व्यावसायिकताको खास्टो ओडी सिर्जनशील मार्गलाई शंकालु, इर्ष्यालु र प्रतिस्पर्धी बनाउँदछ।

यथार्थता त्यही हो जे छ र जुन सदा चलायमान हुन्छ त्यही नै सिर्जनाको गति हो। यो सिर्जनाले न त कवि, कविता वा लेखकलाई औंल्याउँदछ न त गायक, मूर्तिकार वा विचारकलाई नै औंल्याउँदछ। यो दक्षता, सीप, सम्भना र ज्ञानले चलिरहने सिर्जनालाई व्यक्त गरेको हुँदैन। जब मानस पूर्ण शान्त हुन्छ तब त्यस शान्तपनबाट सदा नयाँ सिर्जनाको गति बहिरहन्छ। त्यो क्षणमा सिर्जनाको अभिव्यक्ति पहिला विचारको माध्यमबाट प्रष्फुटित हुन्छ र त्यस विचारले जे छ त्यही नै कुराको अभिव्यक्त गर्न पुग्दछ। यही शान्त गति, जसको अनादि नयाँपन हुन्छ नै ब्रह्माण्डको पूर्ण नियम हो।

वास्तवमा ध्यानको विशुद्ध रूपले स्वतः स्वयम् सिर्जनशील प्रक्रियालाई प्रतिनिधित्व गर्दछ। **सत्य-सिर्जनाको रूपमा ध्यानको चमत्कार यो हो कि ध्यानलाई प्रत्येक पटक श्वास लिँदा जन्म लिने र श्वास छोड्दा मर्ने रूपमा अनुभव गरिन्छ।** ध्यानमा परिपक्वता भन्नु ज्ञानबाट मानसलाई स्वतन्त्र राख्नु हो किनभने ज्ञानले नै सम्पूर्ण अनुभवलाई नियन्त्रण र आकार दिन्छ। ध्यान भन्नु ज्ञानको संसारमा भौतारिँदै ज्ञातबाट स्वतन्त्र भई अज्ञातमा प्रवेश गर्नु र हुनु हो। ध्यान अति गहन शुद्ध,





निष्कलंकयुक्त, विपरितार्थकविहीन, छायाँविहीन खेल हो जुन पूर्णरूपमा प्रज्वलित भइरहन्छ तर यही स्पष्टताको अभावले गर्दा नै विभिन्न रूपले धार्मिक कुराहरूको अभ्यास गरी स्वार्थलाई नै कपटीयुक्त बनाउने कुरा हावी भएर गएको छ। तालिम सधैं भविष्यतिर उन्मुख हुन्छ। तालिमको अर्थले लगातार धैर्यको प्रयासले भावी समयमा इच्छाइएको परिणाम प्राप्त गर्न सकिन्छ भनेर भन्दछ। जे होस् वर्तमानमा हेर्न र गर्न सकिने कुरालाई पन्छाएर भावी कार्यक्रम निर्धारण गर्न र परिणाम निकाल्नमा महत्वपूर्ण जोड दिन लगाउने हाम्रा राम्रा भनाउँदा धार्मिक तालिमका शिविर र विधिहरू प्रशस्त छन्। अब यसरी भविष्यमा उद्देश्य निर्धारण गरेर, कल्पना र आदर्शमाथि दृष्टि लगाइराख्नेले यथार्थमा दृष्टि लगाउनबाट टाढा राखी अहिले यहाँ र तत्काल को वास्तविकतालाई अपहेलित गर्दछ। कुनै पनि पूर्वअनुमानित ध्यान उचित शुभारम्भ हुन सक्दैन। केवल कुनै पनि वैचारिक प्रारम्भको पूर्ण अनुपस्थितिमा नै उचित शुभारम्भ हुन्छ।

सिर्जनशीलता केही प्राप्ति गर्ने वा केही बन्ने प्रक्रिया नभई अस्तित्वको त्यस्तो अवस्था हो जहाँ पूर्णरूपमा म लाई खोज्ने प्रयासहरूको अनुपस्थिति हुन्छ। पहिला कहिल्यै अस्तित्वमा नआएको कुरालाई नै नयाँ भनिन्छ। यस ब्रह्माण्डमा विचारबाहेक अन्य सम्पूर्ण कुराहरूमा सिर्जनात्मक गतिशीलता छ जसको अनुपमता विचारद्वारा व्यक्त गर्न सकिँदैन। यदि मानस परिस्थितिहरूको सुभबुभद्वारा स्वयम्लाई स्वतन्त्र राख्न सक्छ र तसर्थ कुनै कार्य गर्दछ भने त्यो वास्तविक कार्य नै सिर्जनात्मक चिन्तन हो। चिन्तनको तरिका नभई केवल तिक्ष्ण विवेकको स्वःस्फूर्त सिर्जनात्मक कार्य छ जुन भावना, कार्य र तर्कको संमेल हो। सिर्जनात्मक रूपले चिन्तन गर्नु भनेको मानस, मन र क्रियाबीच सुमधुर मिलन ल्याउनु हो। चिन्तन भन्नु नै स्वयम् भावना र क्रिया हो जसको गतिमा यदि कुनै बाधा, दवाव, विगतको धारणा, परम्परा वा बानीबाट आउने कार्यले रोकावट गर्दैनन् भने मात्र तब त्यो गति सिर्जनात्मक हुन्छ। पलपलमा हुने मृत्युले नयाँ कुराको सिर्जना गर्न सक्दछ। सुगन्ध (पवित्र व्यबहारिक गुण) कहिल्यै पनि फूल (जीवन) बाट अलग हुने कुरा होइन। वास्तवमा फूल (जीवन) भन्नु नै उसको सुगन्ध (सिर्जना) हो। सुगन्धको रस नै फूल हो।



## प्राकृत प्रज्ञा,तीक्ष्ण विवेक वा अन्तर्विवेक - बुद्धि हो कि होइन ?

कसैले कसैको भनाइको तात्पर्य बुझ्दछु भन्नु वास्तवमा त्यो भनाइलाई नभई स्वयम्ले स्वयम्को विचारलाई स्वयम्द्वारा बुझिरहेको हुन्छ। मस्तिष्कको वास्तविक क्रियाकलाप नै मस्तिष्क स्वयम्को सुझबुझ गर्नमा एउटा ठूलो रोकावट बन्न पुगेको छ। वैचारिक प्रक्रियाको अन्त्यमा नै स्व-बोधको उदय हुन्छ। अन्तरसम्बन्ध स्व-बोधको प्रवाहमा देख्न सकिन्छ। सुझबुझ बौद्धिक उत्तेजना ल्याउने र बिलाउने कुरा होइन, बरु यो त्यस्तो कुरा हो जुन व्यवहारको साथमा उदय हुने भएकोले पूर्ण हुन पुग्दछ। **जे तयारी वस्तुहरूको बारेमा जानिन्छ त्यो ज्ञान हो भने सुझबुझ कच्चापदार्थको प्रत्यक्ष सचेतता हो।**

सुझबुझ तब आउँछ जब पूर्ण रूपमा मानव शारीरिक र मानसिक संभाव्यताको सीमाहरूको बारेमा सचेत हुन्छ। परिस्थितिको शुद्ध अनुभूतिको बोधमा सीमित र प्रभावीत प्रतिक्रिया हुन सक्दैन। बुझाइ नै विवेक हो जसले तत्काल कार्यको माग गर्दछ। आफूले आफैंलाई बुझ्नको लागि क्षमताको जरुरत पर्दैन। स्व-ज्ञानको साथमा उचित सोचाइ आउँदछ। स्व-सोधपुछबाट आएको सुझबुझ लाई स्व-सचेतता भनिन्छ। स्व-ज्ञान भन्नु नै स्वयम्को पूर्ण मनोगत प्रक्रियाको सचेतता हो।

**ज्ञान तथ्य हुन सक्दैन तर तथ्य ज्ञान हुन सक्दछ।** धारणा, सिद्धान्त र आदर्शहरू माथिको चिन्तन भन्दा वर्तमान तथ्य कुरा वा घटनामाथिको चिन्तनले अन्तर्विवेकलाई जगाउँदछ।

अन्तर्विवेकको अर्थले एक अर्कोलाई बुझ्नेमात्र नभई नियम, स्वतन्त्रता र सहयोगलाई पनि बोध गर्नुपर्ने कुरालाई औंल्याउँदछ। कसैले पनि कुनै व्यक्तिलाई आरोपित र प्रभावित नगरी सर्वप्रथम स्वयम्ले आफ्नो उत्तरदायित्वलाई बोध गर्नुपर्दछ। स्वतन्त्रता बोल्नेलाई मात्र नभई श्रवणकर्तालाई पनि उत्तिकै आवश्यक पर्ने कुराले अधिकारको अस्तित्वलाई पूर्णरूपमा अस्वीकृत गर्दछ, हटाउँदछ। म रिसाउँछु,म मूर्ख छु भनेर सचेत हुनु अन्तर्विवेकको एउटा अंश हो। जब म सचेत हुन्छु तब म होसियार भई सम्वेदनशील भई आफ्नो व्यवहार र बोलीलाई अवलोकन गर्दछु। यसरी समन्वय,सहयोग गर्नु नै अन्तर्विवेकको बोध हो। यदि म पूर्वाग्रहको कारणले छनौट गर्दछु भने त्यो अन्तर्विवेक होइन। बरु त्यो त बुद्धिले खेल्ने विभाजित खेल हो जसले सदा तुलना गरी सापेक्षिक ज्ञानको वकालत गर्दछ। अन्तर्विवेकले स्वतन्त्रतामात्र नभई स्व-आलोचनात्मक सचेतताको माग गर्दछ। आफूले गरेको कार्य र परिणामको बारेमा





सचेत भई सिकिरहनुपर्दछ,अन्यथा सिकाइ बन्द हुन पुग्दछ र सम्बन्ध पनि रहँदैन र यदि म कुनै धारणामा अडिग भएमा सिकाइले ठाउँ लिन सक्दैन। आफ्नो धारणा,निर्णय र विश्वासप्रति सचेत र होसियार हुनुपर्दछ भन्ने कुराको स्व-बोध हुनु अति आवश्यक छ। संसारका अधिकांश मानिसहरू धारणा,निर्णय र विश्वासमा अडिरहेको हुनाले संसारले कहिल्यै पनि सिकिरहेको छैन,इतिहास विभत्स तरिकाले दोहोरिरहेको छ र त्यही विश्वास र धारणालाई तथाकथित नयाँपनले निरन्तरता दिइरहेको स्पष्ट छ। अन्तर्विवेकको प्रष्फुटनले समस्याको उचित समाधान गर्दछ। यदि हामी आफ्नो अन्तर्विवेक नगुमाएर स्वतन्त्रताको साथमा चलिरहेका छौं भने हामी सबै ले कस्तो कामहरू किन गरिरहेका छौं भन्नेबारेमा पनि जानकारी राखिराख्नुपर्ने आवश्यक हुन्छ। केवल शब्दमा मात्र सीमित नभई सफा र स्पष्ट भएर व्यावहारिक धरातलमा आउनुपर्दछ।

**इन्द्रियहरूको समन्वयतामा मिलेर काम गरिरहँदा कुनै इच्छा, कामवासनाको माग नहुनुलाई अन्तर्विवेक भनिन्छ।** अर्न्तविवेक पूर्णतालाई अनुभूति गर्ने क्षमता हो। स्वस्थताभित्र नै अन्तर्विवेक हुन्छ। अचेतलाई सचेतमा ल्याउनु नै अन्तर्विवेकको पहिलो फल हो। अन्तर्विवेकको रस प्रत्येक पल ज्ञातबाट स्वतन्त्र हुनुमा छ। अन्तर्विवेकको प्रारम्भिक स्वभाव नै सम्वेदनशीलता हो। **अन्तर्विवेक स्कूल जानुमा वा किताव पढ्नुमा छैन।** जब तिमी स्वयम्भित्र मानवीय दुःखको अन्त्य हुन्छ तब त्यसबाट विवेक आउँदछ। सीमिततालाई स्वीकार गर्नु तीक्ष्ण विवेक हो। जब चेतनालाई सम्पूर्ण मानवताको अध्ययनमा लगाइन्छ तब अविभाजनीय रूपमा मस्तिष्क र हृदयको मिलनद्वारा तीक्ष्ण विवेकको जन्म हुन्छ। तीक्ष्ण विवेक शाब्दिक सीमालाई पार गर्दै प्रत्येक पल ज्ञातबाट स्वतन्त्र भइरहन्छ। तीक्ष्ण विवेकको वैचारिक बुद्धिसँग कुनै सरोकार हुँदैन। तीक्ष्ण विवेकी व्यक्तिले इच्छा र द्वन्दको महत्वलाई दृष्टिगत गर्दै आफूलाई इच्छा भएको काम गर्दछ।



## सम्वेदनशीलता – विभाजित कि अविभाजित अवस्था ?

महत्वाकांक्षा, विश्वास, शक्ति-प्राप्ति इच्छा, देवी देवताको पूजाआजा आदि खेलौनाहरू हटाइदिएमा मानव अस्तब्यस्त हुने र हराएको अनुभव गर्ने भएकोले ती सबै खेलौना व्याकुलताका जननी हुन्। सतर्कतालाई बुझ्न हामी मानसले प्रतिपादित खेलौनाहरूमा चासो नदेखाई प्रत्यक्ष मानससँग सरोकार राख्नुपर्दछ। मानिसको मानसलाई भुलाउने, भुलाउने खेलौनाहरू, जस्तै- गुरु, चित्र, पार्टी, लागू पदार्थ वा अन्य मानवनिर्मित प्रतिबिम्ब केही पनि कुरा हुन सक्छ। त्यस्ता खेलौनाद्वारा मानसको रुचिलाई एकोहोरो बनाएर टाँसी राख्ने क्रियालाई एकाग्रता भनिन्छ जसले समग्रतालाई कहिल्यै देख्न सक्दैन।

चेतना मस्तिष्कको त्यो भाग हो जुन सतर्कतामा केन्द्रित हुन्छ। चेतना कसैको पेवा होइन,व्यक्तिगत सम्पत्ति होइन। प्रोत्साहित भएको कारणले हुने सीमित सतर्कता बाहेक त्यहाँ सचेतताको व्यापक शक्ति छ। मानसको सचेतताले सम्भावित चेतना बनाउँदछ जस अन्तर्गत अनुभूति, सम्झना, भावना, धारणा आदि रहेको हुन्छ। **अनुभवको आधारभूत जग नै सचेतता हो। मानिसलाई आज्ञा वा निर्देशनको बदला जागरणको आवश्यकता छ।** सचेत हुनु भनेको परिचयबिना नै अवलोकन गर्नु हो। सचेतता विभाजित अवस्था होइन। सचेतता त साधारणतः मस्तिष्कको कार्य हो। सचेतता उत्तेजित र मानसिक अर्थबोधबाट स्वतन्त्र विचाररहीत चेतनयुक्त अवस्था हो। **सम्वेदनशीलताविना स्नेह हुँदैन। व्यक्तिगत प्रतिक्रियाले सम्वेदनशीलतालाई इंगीत गर्दैन।** मानवले आफ्नो परिवार, प्राप्ति, तह क्षमताको बारेमा हुने सम्वेदनशीलता प्रतिक्रिया हो र यो सीमित हुन्छ। व्यक्तिगत प्रतिक्रियाबाट स्वतन्त्रता नै सुन्दरताको सचेतता हो। गम्भीरता आफू वा आफ्नो परिवारका सदस्यमाथि आइपर्ने जुनसुकै घटनाले पनि कमजोर बनाइ पूर्ण विराम नलगाउने क्षमता हो। कुनै पनि परिणामको पर्वाह नगरी अन्त्यसम्ममा सत्य पत्ता लगाउनमा अग्रसर अन्तर्निहित क्षमता नै गंभीरता हो। प्रेम सुन्दरताको सम्वेदनशील सचेततामा हुन्छ। प्रकृतिको सम्वेदनशील सचेतता नै स्नेह हो। स्नेहको सारतत्व नै सम्वेदनशीलता हो। जब सम्पूर्ण मानस सक्रिय हुन्छ तब पूर्ण सतर्कता हुन्छ। साधारण, इमानदार, विकल्परहित सचेतताले सतर्कतातिर डोऱ्याउँदछ।

जहाँ सतर्कता हुँदैन त्यहाँ बानीले जन्म लिन्छ। सतर्कतासँग कुनै उद्देश्य,खेलौना,संघर्ष,शाब्दिकता हुँदैन। आफ्नो कोठामा सर्प रहदाँको अवस्थामा कसैले पनि उसलाई कसरी तीव्र सचेत र संवेदशील भइरहनु पर्दछ भन्ने पाठ सिकाउनुपर्ने





आवश्यकता पर्दैन। सतर्कताले यथार्थताको द्वार खोल्दछ। असल जीवनले जीविकोपार्जनको लागि चाहिने पेसागत बुद्धिभन्दा छुट्टै तीक्ष्ण विवेकको माग गर्दछ। उचित सिर्जनात्मक चिन्तन असल जीवनको लागि आवश्यक छ। उचित विचार स्थिर हुन्छ र यो निश्चित धारणाहरूलाई एक साथ समुहमा ल्याउने प्रक्रिया हो जसलाई आदर्श भनिन्छ जब कि उचित चिन्तन, विद्रोह, स्वीकृति, नक्कल वा ढाँचाअनुकूल गर्ने कार्यको पूर्ण सचेतता हो। उचित सिर्जनात्मक चिन्तन प्राप्त गनुपर्ने चीज होइन बरु यो स्व-ज्ञानको साथमा स्व-स्फूर्तः उठदछ, बढ्दछ र जसले अहमताका तरङ्गहरू वा गतिहरूको अनुभूति पनि गर्दछ। उचित चिन्तन किताबबाट वा अन्य व्यक्तिहरूबाट सिकेर प्राप्त गर्न सकिदैन। यो त सम्बन्धको क्रियाभित्र हुने स्वयम् मानसको सचेतताद्वारा आउँदछ तर यो कार्यलाई तबसम्म बुझिँदैन जबसम्म मानस विश्लेषण गर्ने गर्दछ। तसर्थ उचित चिन्तनले मानसका विरोधभास र द्वन्द ल्याउने आधारभूत गिरावटका कारणहरूलाई हटाउँदछ। सचेततामा अनुशासन हुँदैन। पूर्ण सचेतता भन्नु पूर्णरूपमा वर्तमान अवस्थालाई बिकल्परहीत, अविभाजनीय प्रत्युत्तर दिनु हो। सतर्कताले विगतलाई विचारक र विचारबीचको विभाजनलाई पूर्णरूपमा नकार्दछ। प्रत्यक्ष अनुभूति गरिरहनु उद्देश्य बिनाको सतर्कता हो। **अनुमान र कल्पना सतर्कताका बाधकहरू हुन्।**



## परिवर्तन केलाई भन्ने - संशोधन, विद्रोह वा क्रान्ति ?

पाप वा दुःख भनेको केवल अज्ञानता वा नबुझ्नु हो। कुनै पनि परिस्थितिलाई हामीले बुझ्न सक्छौं किनभने त्यो हामी आफैंले सिर्जना गरेका हौं। प्रत्येक पुरुष तथा नारीभित्रको व्यक्तिगत अस्तव्यस्ततालाई अन्त्य नगरी सामाजिक बेमेललाई पूर्ण समाधान गर्न सकिँदैन। प्रत्येक व्यक्तिले आफ्नै तरिकाले समाजको प्रतिबिम्ब बनाएको हुन्छ र उक्त प्रतिबिम्ब वाह्य विद्रोह र क्रान्तिद्वारा परिवर्तन गर्न सकिँदैन। यो केवल व्यक्ति स्वयम्ले परिवर्तन गर्नुपर्ने आवश्यकता अनुभूति गरेमा मात्र सम्भव छ। जे परिवर्तन हुन्छ त्यो मानवीय अवस्था हो। **परिवर्तन सचेतताबाट सुरू हुन्छ। परिवर्तन सम्पूर्ण वस्तुहरू तथा परिस्थितिहरूमा स्व-निहित प्राकृतिक स्वभाव हो।**

जीवन दुःखमय बनाइएको छ तर दुःखका कारणहरू हटाउनुमा नै क्रान्तिको अर्थ रहन्छ। दुःखका कारणहरूको खोजी गर्न शत्रु र मित्रबीच भेद नगर्ने स्पष्ट अविभेद हेराइ आवश्यक पर्दछ तर पीडित र दुःखी मानिसमा प्रायजसो यी गुणहरू अभाव हुन्छन्।

जे हो वा जे छ बाट प्रारम्भ गर्ने जो कोहीले पनि परिवर्तनको भावना महसुस गर्न सक्छ तर क्रमिक परिवर्तनको धारणा अवरोधको अर्को रूप हो। समयको वास्तविक अस्वीकृत नै परिवर्तन हो। **तत्काल परिवर्तनको वास्तविक प्रक्रियाले क्रान्तिलाई औंल्याउँदछ र यस्तो क्रान्तिमा केही घटछ कि भन्ने डर व्याप्त हुनेबित्तिकै परिवर्तन हुन सक्दैन।**

यदि क्रान्तिले वर्तमान अवस्थामा आधारभूत परिवर्तन गर्न सक्दैन भने त्यो क्रान्ति मूल्यहीन हुन्छ। सफल क्रान्तिले कारणहरूलाई स्पष्ट गराउने र केही प्रतिक्रिया नगरी कारणहरूको विलय गराउँदछ जब कि विद्रोहले केवल सतही रूप फेरेर पुनः अस्तित्व कायम गर्ने गरी अल्पकालीन बन्दको घोषणा गर्दछ। आन्तरिक चैतन्य-क्रान्ति बिना आर्थिक क्रान्ति मूल्यहीन हुन्छ। विचारमाथि आधारित परिवर्तन क्रान्ति होइन किनकि विचार भन्नु नै स्मृतिको प्रत्युत्तर हो र क्रमशः त्यो पुनः प्रतिक्रिया नै बन्दछ। अधिकारको विरुद्ध प्रतिक्रिया गर्नु अर्को अधिकारको सिर्जना गर्नु हो। **विद्रोहलाई जहिले पनि प्रतिक्रियाद्वारा गति दिइराखिन्छ जब कि क्रान्ति अन्तिम हुन्छ। विद्रोह शब्द बन्द भन्ने कुरासँग सम्बन्ध राख्दछ भने क्रान्ति अन्त्य भन्ने शब्दसँग सम्बन्ध राख्दछ।**

जब मानसले कुनै तथ्यको सत्यता देख्दछ र त्यो सत्यतालाई स्वतः कार्य गर्न दिन्छ भने त्यही सत्यताले स्वयम् आफ्नो तरिका सिर्जना गर्दछ। **क्रान्ति समाजभित्र**





**नभई व्यक्तिभित्र निहित छ।** शोषितले क्रान्तिगर्न सक्दैन्, तिनीहरूले जे गर्छन त्यो केवल विद्रोह हो जुन प्रतिक्रियाले ल्याएको हुन्छ र अर्को शोषणको ढाँचा सिर्जना गर्दछ र त्यो ढाँचाको व्याख्या आफ्नै तरिकाले गरी आफ्नो मपाईत्व प्रकट गर्दा अर्को शोषक उत्पन्न गर्न पुग्दछ जसको बारेमा उनीहरू अनभिज्ञ हुन्छन् किनभने हिंसाले हिंसा निम्त्याएजस्तै प्रतिक्रियाले अर्को प्रतिगामीको अस्तित्व खडा गर्न चाहन्छ र गरेको हुन्छ। पुरानो ठाउँमा नयाँ शोषकहरूको समूहले ठाउँ लिन्छन् र लिइराखेको देखिन्छ। जबसम्म तिनीहरू पीडित र शोषित हुन्छन् तबसम्म तिनीहरूले विद्रोह गर्दछन्। साँचो क्रान्ति तब घट्छ जब शोषक र शोषित दुवैले वास्तविक मनोगत कारणहरू पत्ता लगाई अन्त्य गर्ने अभिप्रायले एक आपसमा भेट गर्दछन्। यो भेट नै पहिलो आन्तरिक अवस्था हुन्छ जसअन्तर्गत शोषक स्वयम्ले आफूभित्र शोषित हुने र शोषित स्वयम्ले आफैभित्र शोषक हुने कुरा पत्ता लगाएका हुन्छन्। शोषक र शोषित दुवैभित्र शोषण गर्न दिने र शोषण गर्ने दुवै कुराहरू मनोगत रूपमा विद्यमान रहेका हुन्छन्। यस्तो आन्तरिक भेटको परिणामले शोषणको कारणहरूबाट हुने आन्तरिक स्वतन्त्रता दिन्छ र हुन्छ पनि। **विद्रोह घृणा र द्वन्दबाट गति लिन्छ जबकि क्रान्ति करुणाको फल हो।** जब मानव जीवनको उद्देश्य र अर्थको नयाँ सुझबुझमा आउँदछ तब संसारलाई छुट्टैपाराले हेर्दछ र संसार परिवर्तन भए-नभए पनि तिमी स्वयम् भित्रको पलपलको परिवर्तनले संसारका प्रत्येक वस्तुहरू नयाँ देखा पर्दछन्। यदि व्यक्तिमा ऐच्छिक क्रान्ति आउँछ भने उसले सम्पूर्ण मानवका लागि बिनाभेदभाव उचित वातावरण सिर्जना गर्न सक्छ। त्यसपछि संसार एउटा ऐकिक मानव इकाइ बन्दछ। वाह्य भन्नु नै भित्र हो र भित्रको वाह्य प्रतिक्रिया नभई आफ्नै क्रिया हुन्छ। यस्तो पूर्ण गतिको सचेतता नै संवेदनाशीलता हो।

उद्देश्यमूलक कार्य र आन्तरिक तनावद्वारा गरिएको त्यागद्वारा क्रान्ति सम्भव छैन र मुक्ति पनि गर्दैन बरु हामी जुन परिस्थितिभित्र छौं त्यसलाई पूर्णरूपमा बुझेर मुक्ति हुन सक्दछौं, क्रान्ति गर्न सक्दछौं। **जे छ को अखण्डनीय स्व-बोधद्वारा क्रान्ति र पूर्ण मुक्ति हुन्छ।**



## स्वतन्त्रता – प्राकृतिक हो कि कृत्रिम ?

कुनै पनि कुराको उदय बनोट, स्वभाव र कार्यको बारेमा बुझ्नु नै त्यसबाट स्वतन्त्र हुनु हो। विपरीतार्थकताको ढाँचाभित्र स्वतन्त्रता हुँदैन। घृणाबाट स्वतन्त्र हुने कुरा प्रेममा नभई घृणाभित्र नै रहेको हुन्छ। केही कारणले कुनै पनि कुराबाट स्वयम् आफूले स्वतन्त्रता खोज्ने कुराले पहिला नै अस्तित्वमा भइरहेको शान्ति, स्वतन्त्रता, सम्वेदनशीलता र स्पष्टताहरूलाई नष्ट गरिरहेको छ। स्वयम्को लागि ज्योतिर्मय मानसले अनुभवको माग गर्दैन। स्वतन्त्रता उद्देश्यविहीन शुद्ध अवलोकन हो जहाँ विगतको प्रभावरहीत अन्तर्दृष्टि व्याप्त हुन्छ। परिपक्वता सम्पूर्ण अनुभवबाट स्वतन्त्रता हो। **शिक्षाले कृत्रिमताको स्वतन्त्रता दिन्छ भने दीक्षाले प्राकृतिक स्वतन्त्रतातिर उन्मुख गराउँदछ।**

नर्कानु नै स्वतन्त्रताको सारतत्व हो। निश्चयसाथ अभिव्यक्त गर्नु र सकारात्मकताको प्रयोग गर्नु बन्धन हो। स्वतन्त्र बन्ने वा हुने माग गर्नु नै हामीहरूको समस्याहरूको कारण हो। प्राप्तिको लागि गरिने अनुसरण वा प्रयास नै दास हो जसले वास्तविक स्वतन्त्रताको अस्वीकृत गर्दछ। आफैंले आफूसँग भएको ज्ञानले आफैंलाई हेरेकोले स्वयम्बाट स्वतन्त्र हुने कुरा अस्तित्वमा आएको हो।

**धैर्यताले नभई अधैर्यताले समयको आविष्कार गर्दछ।** विषालु सर्प देख्नबित्तिकै दिइने तत्काल प्रतिक्रिया सर्पको बारेमा प्राप्त गरेको ज्ञान र डरको परिणाम हो। त्यस्तो ज्ञानद्वारा हेरिने हेराइले समयको माग गर्दछ। **समयको माग गरेर आश्वासन दिने स्वतन्त्रता जहिले पनि कृत्रिम हुन्छ।** पूर्णताको विभाजनमा समयले काम गर्दछ तर जुन पूर्ण छ त्यो जीवनको उतार चढाव र क्रिया-प्रतिक्रियाबाट स्वतन्त्र हुन्छ।

कसैबाट र कसैको लागि स्वतन्त्र बन्ने कुराभित्र संघर्ष, द्वन्द र हिंसा निहित रहेको कुरालाई द्वन्दात्मक भौतिकवादको कलम र बन्दुकको द्वन्दात्मक चरित्रले साम्प्रदायिकतामा रूपान्तरण गरी मानव मानव बीचमा मर्ने र मार्ने कुरालाई सहर्ष स्वीकार गर्नुपर्ने सैद्धान्तिक नशाले मानवलाई सम्मोहित गराएको कुरा स्पष्ट छ। यहाँ **बाट** र **निम्ति** भन्ने शब्दभन्दा पनि अति गहिरो तहमा आन्तरिकरूपले स्वयम्कै लागि स्वयम्द्वारा आउने स्वतन्त्रतालाई औंल्याउन खोजिएको हो। स्वतन्त्रताअन्तर्गत कुनै कुरालाई हटाउन र फाल्न संघर्ष गरिरहनुपर्दैन। यस्तो द्वन्द र विवादरहित अवस्था अर्थात् पूर्ण स्वतन्त्रतामा नै सुमधुर सम्बन्ध स्थापित हुन सक्छ। कृत्रिम स्वतन्त्रता वैचारिक प्रक्रियाको उपज हो भने प्राकृतिक स्वतन्त्रता एक आपसमा अन्तर्निहित अप्रदूषित साझा चेतनाको सु-मधुर सम्वेदनशील गति हो।





## वर्तमान मस्तिष्कमा – के हुन्छ र के हुँदैन ?

वर्तमानको उल्ड्घन नै मस्तिष्कको भ्रष्टताको सुरुवात हो। यदि मस्तिष्कमा कुनै पनि तरिकाले कुनै पनि रूपको चोट लाग्न सक्ने स्थितिमा छ भने त्यस्तो मस्तिष्क जवान, स्पष्ट र स्वच्छ हुन सक्दैन। जब मस्तिष्क चोटबाट स्वतन्त्र हुन्छ तब मस्तिष्कसँग अवरोध भन्ने कुनै कुरा हुँदैन। **सांसारिक वस्तुहरूलाई फाल्नु एउटा कुरा हो तर मस्तिष्कका कुराहरूलाई फाल्नु भनेको पूर्णरूपमा फरक कुरा हो।** मस्तिष्क विचारले बन्दछ र विचारले धारणा र विश्वासहरूको रूपमा आफ्नो अस्तित्व जमाइराखेको हुन्छ। मस्तिष्क खाली हुने साहस गर्न सक्दैन किनकि यदि यो खाली भएमा मस्तिष्कको केही बन्ने कुराको अस्तित्व पनि अन्त्यमा आउन पुग्दछ। यसरी धारणाहरू, आशाहरू र वस्तुहरूभन्दा पनि टाढा रहने गरी मस्तिष्क स्वयम्ले उत्पन्न गरेका भौतिक विश्वासहरूमा मस्तिष्क आफैं टाँसिएको छ।

कुनै पनि कुराको सम्भावना नै छैन भन्ने र कुनै कुराको प्राप्तिको आस गर्ने मानसले केवल आफ्नो अनुकुलको व्याख्यामात्र गर्दछ तर यस्ता आशा, निराशा वा प्राप्तिजस्ता कुराहरू बुद्धिमान् प्राज्ञिक वा विशेषज्ञ व्यक्तिहरूको लागि मात्र हो भन्ने कुराबाट स्वतन्त्र भएको मानसले मात्र सोधखोज गर्न सक्दछ। यदि कसैले यो कुरा सम्भव छैन भन्नेबित्तिकै त्यहाँ व्यक्ति स्वयम्ले ढोका बन्द गर्न पुगी गर्नुपर्ने केही पनि देख्दैन र राख्दैन पनि। त्यस्तै यदि कसैले यो सम्भव हुन पनि सक्छ भनेर आशा गर्दछ भने आशाले निराशालाई पनि औंल्याउन सक्दछ तर **प्रत्येक मानिसले सम्भव हुन सक्छ भन्ने भनाइभित्र आशाको बीउ नराखीकन अन्वेषणको उचित प्रारम्भ गर्न सक्दछ।** यदि कसैको तीव्र भावना अन्वेषणमा लाग्दछ भने डरको अन्त्य हुन्छ अर्थात् डर सहायक कुरा बन्न जान्छ। अग्रगति लिनु पर्ने तीव्र भावना छ भने अगाडि बढ्दछ यद्यपि डर पृष्ठभूमिमा रहन सक्ला तर अगाडि बढ्ने गतिलाई भने छोडिंदैन। यदि मानसमा आकस्मिकताको भावना छैन भने अग्रगमन गर्न सक्दैन। पश्चताप, पीडा, कठिनाईसँग कुनै अर्थ छैन भनेर समग्रतामा अग्रसर भई पूर्णतामा बाँच्ने क्षमतायुक्त मानसमात्र अगाडि बढ्दछ र तत्पश्चात मात्र जीवन चलायमान् हुन्छ। अस्तित्वका सधैं उब्जिरहने समस्यासँग मात्र व्यवहार नगरी तत्काल ती समस्याको समाधानसँग पनि व्यवहार गर्ने मानस आवश्यक छ।

हामी जे छौं वा हौंमाथि सचेत हुनको लागि हामी जे होइनौंतिर गरिने संघर्षलाई अन्त्य गर्नुपर्दछ। हामीले स्वयम्लाई केवल वर्तमानको सम्बन्धमा मात्र बुझ्न

सक्छौं र त्यो वर्तमान सम्बन्ध नै स्वयम् गुरु हो। प्रष्फुटन सदा वर्तमानमा हुने ऐकिक प्रक्रिया हो। प्रष्फुटन विगतको व्यवधानबिना नै वर्तमानमा विष्फोटन हुन्छ। वर्तमान जो कसैले पनि व्याख्या गर्दैमा अस्तित्व आउने अन्यथा नआउने भन्ने कुरा होइन। यदि कसैले पनि वर्तमानको कुरालाई स्वयम् आफैंभित्र अवलोकन गरेमा पूर्ण रूपले तथ्यको रूपमा देख्न सक्दछ। यो तथ्यबाट कोही पनि भाग्न सक्दैन। यदि तथ्यको बारेमा धारणा छ भने तथ्यभन्दा धारणा महत्वपूर्ण हुन्छ। तथ्यको सत्यता र असत्यता जान्ने चाहना छ भने शब्दद्वारा, विचारद्वारा बाँच्नुहुँदैन। जे छ लाई बुझ्नको लागि पूर्णरूपमा मस्तिष्क प्रतिक्रियाविहीन अर्थात् वैचारिक निष्क्रियताको अवस्थामा रहनुपर्दछ। **तथ्य सम्फौता वा विश्वासमा भर पर्दैन। वर्तमान** अर्थात् **जे छ** लाई कसैले पनि कुनै अर्को शब्दले नामाङ्कन गर्दैमा परिवर्तन हुने होइन बरु त्यो जे बस्तु हो त्यो त्यही नै रहन्छ र हो पनि।







## भय, विभाजन र युद्ध – प्रमुख कारण विचार कि ईश्वर ?

जब मानवले प्रकृतिलाई पूर्ण रूपमा अभिलाषा तृप्ती र मोजमस्तीको कु-दृष्टि लगाउन सुरू गरी अस्तित्वमा नै नभएको कुरा माग गर्न सुरु गर्न थाल्यो तबबाट समस्याको बीजारोपण हुन थाल्यो। मानवले कुनै पनि कुरा विशेषतः स्वर्ग वा शान्तिजस्ता कुरामाथि भरपर्ने कुराको औचित्यहीनतालाई स्वीकार गर्नुपर्दछ। गलत समाधानहरूको आविष्कारको कारणले गर्दा नै समस्याले निरन्तरता पाइरहेको कुराको बोध हुन जाने क्रममा लाचारपन र दुर्बलताले पनि मस्तिष्कमा कम्पन ल्याउन पनि सक्दछ। **यदि सही उत्तर छैन भने सही प्रश्न पनि छैन।** तिनीहरू एक आपसमा अन्तर्निर्भर छन्। समस्या र समाधान एक साथ हिंड्दछन्। जतिसुकै गम्भीर समस्या भए तापनि त्यसभित्र स्वयम् समाधान रहेको हुन्छ। होसियारपूर्वक विनादबाव र लोभको फुर्सदिलो अवलोकनको अवस्थाले समस्याको स्वभावलाई देखाउँदछ र यसले समस्याको बनोटको बुझाइतिर डोऱ्याउँदछ। यस्तो समस्याको बनोटको स्पष्टता तबमात्र हुन्छ जब वातावरण उपर्युक्त हुन्छ। वातावरणलाई जबसम्म बुझिदैन तबसम्म वातावरण झुट हुन पनि सक्छ। वास्तवमा जीवनलाई विषयगत र वस्तुगत रूपमा विभाजन गर्न सकिदैन तर त्यो केवल सुविधाको लागि विभाजित गरे तापनि त्यही सुविधाले जटिलताको सुत्रपात गर्न लागिरहेको कुरा स्पष्टसँग देख्न सकिन्छ। जब वातावरण अवरोधको रूपमा खडा हुन्छ र द्वन्द खडा गर्छ तब वातावरणको वारेमा सचेत हुन पुगिन्छ। जब समस्याको स्वभाव फक्रन थाल्दछ तब समस्यालाई कुनै विचारको स्पर्शबिनाको प्रष्फुटनले समाधानको सुझाव दिन्छ। काम स्वयम् कहिल्यै पनि समस्या बन्दैन तर कामबारेको सोचाइले समस्या सिर्जना गर्दछ। कुनै पनि कुराको (सम्भोग, आनन्द, ई) स्थायित्व शरीरमाथि लाद्ने कार्य एउटा गम्भीर स्नायुविशेष, मानससँग सम्बन्धित समस्या हो। जब विभाजन हुन्छ तब प्रयासको अस्तित्व आउँदछ। **मानवले आफ्नो चेतनामा विभाजन अनुभव गरी अन्य जनावरभन्दा उत्कृष्ट सम्झिनु नै स्वयम्को लागि बिनाश गर्ने बीउहरू सिर्जना गर्नु हो।**

विकासक्रमको प्रक्रियाको अत्यन्त महत्वपूर्ण भाग हिंसा सजीव प्राणीको लागि एक हदसम्म आवश्यक भए तापनि यो मानव जगत्मा **एकतर्फी मैले गरेको गर्ने भए गर् नत्र म तँलाई मारिदिने कुरा गर्ने र अर्कोतर्फ मैले भनेको दिने भए दे नत्र म आफैं मरिदिने कुरा गरी हिंसालाई बडो चलाखीका साथ निरन्तरता दिई**

**कथित अहिंसाको आदर्श सुत्रपात गरेको** पाइन्छ। वर्तमान समयमा मानवलाई केवल फाइदामूलक सम्बन्ध को बारेमा थाहा छ। जसरी केही कुरा प्राप्त गर्न व्यक्तिहरूले एक अर्कोलाई प्रयोग गर्ने गरेका छन् त्यस्तै गरेर समाजले पनि केही प्राप्त गर्नका लागि विभिन्न तरिकाले व्यक्तिहरूलाई प्रयोग गर्दै आइरहेको छ। यसरी फाइदा प्राप्त गर्नको लागि अन्य व्यक्तिलाई प्रयोग गर्नु वा गर्न लगाउनु मानिसलाई मानिसकै विरुद्ध उभ्याउन खोज्ने मनोगत विभाजनको कारण हो।

**तथ्यले कहिल्यै समस्या सिर्जना गर्दैन।** समस्या त केवल तथ्य कुरालाई हटाउनुमा, तथ्यबाट भाग्नुमा, तथ्यलाई परिवर्तन गर्न खोज्नुमा वा आदर्शलाई नै अन्तिम रूप मान्नुले सिर्जना गर्दछ। असन्तुष्टि र अर्थविहीनताको प्रत्युत्तरमा राखिएको लक्ष्य नै झुट छ। द्वन्द केवल दुई झुटहरू वा विपरीतहरूबीच हुन्छ। **सत्य र झुटबीच कहिल्यै वादविवाद वा द्वन्द हुन सक्दैन।** समस्या सदा नयाँ हुन्छ तर दुर्भाग्यवश मानवले विगतलाई स्पर्श गरेर समस्यालाई सामना गर्ने भएकोले नै मानव प्रत्युत्तर कहिल्यै पनि पर्याप्त हुँदैन। तसर्थ त्यहाँ दुःख र पीडा छ। यदि अर्थपूर्णको धारणालाई फालिन्छ भने मात्र मानवले भौतिक जीवन देख्दछ र त्यो जीवनसँग भौतिकताको आफ्नै अर्थ हुन्छ। **वर्तमान समयमा हजारौं जीवित व्यक्तिहरूलाई बम, भोक र आतङ्कबाट मारिरहेको समयमा जन्मदै नजन्मिएका बच्चाहरूको जीवनको बारेमा चासो र जिज्ञासा लिइरहनु केवल जीवनलाई राजनैतिकीकरण गर्नु र प्राज्ञिक वादविवादको गति स्थापना गर्नु हो।**

जवसम्म मानव चेतनामा ज्ञानको सुक्ष्म अंश पनि कुनै पनि रूपमा रहिरहन्छ तवसम्म मानवचेतना विभाजित अवस्थामा बाँचिरहन्छ। विरुद्धमा जानु भनेको विभाजनलाई गति प्रदान गर्नु हो। कुनै पनि बानी यान्त्रिक हुन्छ भन्ने कुरालाई अस्वीकृत गर्नु भनेको त्यही संयन्त्रलाई अझ वढी उर्जा प्रदान गर्नु हो तर यदि मानसलाई विचार गरेर त्यसले निर्माण गर्ने वानीहरूलाई अवलोकन गरेमा ठूलो समस्याको स्व-बोधले सानातिना समस्याहरू महत्वहीन भई बिलाउन पुग्दछन्।

मानव जीवनलाई विभिन्न तरिकाले विभाजन गराइएको छ। देशीय तथा धार्मिक विभाजनले युद्ध निम्त्याएको छ र युद्धले असुरक्षा निम्त्याएको छ। विभाजन भएपछि मनोगत निर्भरताको आगमन हुन्छ र डर सिर्जना हुन पुग्दछ। **डर (असुरक्षा) ले गर्दा विचार गर्नुपर्ने देखिनु र विचारले गर्दा असुरक्षा महसुस गर्नुपर्ने दुवै काम विचारको विरोधाभासपूर्ण गुण हो जसको समाधान विचार स्वयम्माथि**

यदि वदल्नु नै छ भने सर्वप्रथम वर्तमान समयमा आफूले आफूलाई बदलौं, संसार स्वतः बदलिनेछ।





**विचार स्वयम्ले आफ्नो लागि गनुपर्ने अन्तर्दृष्टिबाट मात्र सम्भव छ।** मानसले अनुमान लगाएर डर उत्पन्न गराउँदछ। जब कुनै घटित घटनाको बारेमा डर लाग्छ तब त्यो डर स्वयम् तथ्य हुन सक्दैन। समस्याबाट टाढा भाग्ने प्रक्रियाले नै आशाको सिर्जना गर्दछ। **डर भन्नु नै भाग्नु हो। भर पर्नु भनेको आशा गर्नु हो र आशा गर्नु भनेको अल्छी गर्नु हो।**

**मानस अज्ञातभन्दा ज्ञातसँगको सम्बन्ध टुट्छ, बिलाउँछ भनेर डराउँदछ। विगतभित्र कुनै डर हुँदैन तर डर भने विगतको असर भविष्यमा के हुन सक्छ भन्ने सोचाइद्वारा उत्पन्न गरिएको हुन्छ।** वास्तवमा समस्या भनेकै डर हो जसबाट ईश्वर, राष्ट्रियता वा पार्टीहरू उत्पन्न भएका हुन्। डरबाट मुक्त हुनु भनेको नै स्वयम् डर हो। डरको अन्त्य नै मृत्यु हो तर हामी डरको अन्त्य अर्थात् मृत्युले ठाँउ लेओस्, मृत्युले काम गरोस् भन्ने चाहना नै लिन सक्दैनौं र चाहँदैनौं पनि। तथ्यको डरले बन्धनतिर डोऱ्याउँदछ। हामीले विचारको अस्थायी प्रकृतिलाई अस्वीकृत गर्नु नै असुरक्षा उत्पन्न गर्नु हो।

कुनै पनि समाधान सोच्नु भनेको भविष्य हो र तसर्थ त्यो उपयोगविहीन हुन पुग्दछ। यदि हामीबाट कुनै कुराको समाधानले ठाँउ लिन सक्छ भने त्यसले अहिले नै लिनुपर्दछ, घट्नुपर्दछ। हामी अहिले नै कुनै समस्या समाधान गर्न चाहाँदैनौं। त्यसैले त समाधानलाई भविष्यको धरातल सिर्जना गरी भविष्यमा घचेटन वा धकेल्न खोज्दछौं। यस संसारको कुनै पनि क्रियाकलापबाट भाग्न खोज्नु स्वयम् आफ्नो छायाँबाट आफू भाग्न खोज्नुजस्तै हो। अन्त्य नै प्रारम्भ हो तर डरले अन्त्यलाई अन्त्य हुनबाट रोक्ने गर्दछ। बचाएर राखिने कुरामाथि नै आक्रमण सम्भव हुन्छ। **सुरक्षाकर्मीको उपस्थिति नै असुरक्षा अर्थात् संभावित आक्रमण हुन सक्ने संकेत हो।** जीवन र मृत्युको बीचमा विभाजन ल्याउने तत्व - विचारले नै डर निम्त्याएको हो तर यथार्थमा यो विभाजन निरर्थक र आधारविहीन छ।

वास्तवमा जीवन र मृत्यु एउटै सिक्काका दुई पाटाहरू हुन्। भावना स्वयम् डरलाग्दो नभई केवल भावनाको बारेमा जे सोच्छौं त्यसले भावनाभित्र डर ल्याउँदछ। यो विषालु सर्पलाई हेर्नेजस्तै हो। एकपटक विषालु सर्पलाई देखेर बुझेर पुनः सर्पसँग खेल्ने गल्ती नगरेजस्तै एकपटक यो भावना बुझेपछि त्यो सुझबुझ जहिले पनि मानवसँग रहिरहेको हुन्छ। भय र युद्धको प्रमुख कारण नै विचारले जीवनको धरातलमा बनाउन चेष्टा गरिरहेको समानान्तर अस्तित्वको कुनै पनि आदर्शवाद हो।

विचारले खेलेको विध्वंसकारी खेलको अनभिज्ञता नै अज्ञानता हो।

## एकताको आवश्यकता - पूर्ण कि सापेक्ष ?

एकताभित्र संघर्ष र संघर्षभित्र एकता हुन्छ भनी विकसित भएको वैचारिक प्रणालीले खेलाउन पुगेको नरसंहारकारी खेलमा कथित संघर्षले कहिल्यै पनि जीवनको एकीकृत भावनालाई सम्बोधनसम्म पनि गर्न नसकेको स्पष्ट छ। वैचारिक एकताको नाउँमा भएको उत्तेजनात्मक संघर्षले केवल पश्चातापमा जल्ने र जलाउने गर्दछ। प्रकृतिमा निहित संघर्षको यथार्थताको जुन बोध मानिसले गरिरहेको छ त्यसले जीवनका कुनै पनि समस्या समाधान गर्न सक्दैन बरु झन् अधोगतितिर अग्रसर भएको दृश्य दिन प्रतिदिन धर्म, वर्ग, जात र देशरक्षाको नाममा मारिएका र मर्न तयार भइरहेका व्यक्तिहरूले देखाएको पाइन्छ। संघर्ष र घर्षणबाट निश्चय नै शक्ति उत्पन्न हुन्छ तर त्यो शक्तिले स्वयम्लाई नष्ट र कमजोर बनाइरहेको हुन्छ र कालान्तरमा गएर अस्तित्व-रक्षाको नाउँमा आफैं बिलाएर जाने निश्चत देखिन्छ। समस्या जहिले पनि मानिसहरू, वस्तुहरू, विचारहरूबीचको सम्बन्धको हुन्छ। सम्पूर्ण घटनाहरूको आवश्यक अन्तरनिर्भरता तथा अन्तरसम्बन्धको बारेमा सचेत हुनु नै मानवताको ऐना भित्र प्रवेश गर्नु हो। अचानक स्वयम्को सचेतताबाट स्वतन्त्र हुनेबित्तिकै व्यक्तिले विभाजित अस्तित्वको महसुस गरिरहन सक्दैन। वातावरणमा जे घट्छ त्यो स्वयम् त्यस्तो व्यक्तिमा बिना ज्ञान घटिरहन्छ।

ऐकिक गति हामीले अनुभव गर्न सकिने कुरा होइन। परम्पराले प्रदान गरिरहेको खानाले यो एकताको भोकलाई तृप्त गर्न सक्दैन। त्यो भोकको ज्वालाको साथ साथै द्वैदता पनि अन्त्य हुन्छ।

**प्रत्येक मानव प्राणीको व्यक्तित्व नारी तथा पुरुष गुणहरूबीचको एकीकृत गतिशील अन्तरखेलको परिणामस्वरूप निर्माण भइरहेको हुन्छ।** कर्ता, क्रिया र परिणामको समिश्रण नै अनुभव हो। परिणाम केन्द्रित नहुने कार्यले कर्ता, क्रिया र परिणामलाई एउटा ऐकिक प्रक्रिया को रूपमा स्थापना गर्दछ। अवलोकनकर्ता र अवलोकित वस्तुबीच विभाजन नभएमा मात्र हेराइले वास्तविक अन्वेषणको मार्गमा गति लिन पुग्छ। अन्वेषणअन्तर्गत समन्वयले गन्तव्यबिनाको इमानदारीताको माग गर्दछ।

अति सूक्ष्म हेराइ अर्थात् अन्तर्दृष्टिको आफ्नै किसिमको क्रियात्मक र तार्किक शक्ति हुने भएकोले क्रिया स्वतः पूर्ण हुन्छ। जब मस्तिष्क र शरीरको पूर्णमेलको गहन आवश्यकतालाई देखिन्छ तब मस्तिष्कले शरीरमाथि निन्दा र नियन्त्रण गर्न छोडी केवल हेर्दछ र यस्तो हेराइले मस्तिष्कलाई तिखो र शरीरलाई सम्वेदनशील बनाउँदछ। हेराइ नै तथ्य हो र तथ्यसँग कुनै जोड घटाउको कुरा हुँदैन। **तथ्यको**





**मूल्याङ्कनभन्दा तथ्यको बुझाइ महत्वपूर्ण कुरा हो।** जब तथ्य देखिन्छ तब मस्तिष्क तथ्यलाई पूर्ण जागृत भएर बानीहरू र शरीरलाई गिरावट ल्याउने कुराहरूको बारेमा सम्वेदनशील भई हेर्दछ। त्यसपछि विचारले शरीरमाथि शासन र नियन्त्रण गर्दैन किनभने अनुशासन र नियन्त्रणले असम्वेदनशील बनाउँदछ र असम्वेदनशीलताले गिरावट ल्याउँदछ। **विचारले देखाउने एकताको अग्रसरता जहिले पनि सापेक्ष हुन्छ भने एकता भन्ने शब्द स्वयम्भित्रको तत्व-बोधले विभाजनको खेललाई सदाको लागि निष्क्रिय बनाइदिन्छ।**



## भ्रमपूर्ण संस्कार – कसले कसको लागि निर्माण गरेको हो ?

मोक्ष वा मुक्ति प्राप्तिमा सफल मानिएका व्यक्तिहरूको प्रतिबिम्बलाई मानसपटलमा स्थापना गरेर मुक्ति प्राप्ति गर्नको लागि खोज गर्ने कार्य नै गलत छ। जब मूर्तिपूजा वा गुरूपूजा वा कुनै पनि व्यक्तिपूजा, जुन दोस्रो दर्जाका अर्थहीन कार्यहरू हुनलाई अन्य गरिन्छ तब मानसले त्यहाँ हुने अर्थात् रहने कुराको आफ्नै तरिकाले अभिव्यक्त गर्दछ। जे कुरालाई मानिस आफ्नो ठानिरहेको छ त्यो संस्कृतिको परिणाम हो अर्थात् वास्तवमा म भन्नु नै संस्कृति हो। वर्तमान सभ्यता र संस्कृति नाफा प्राप्त गर्न लालायित इच्छाहरूको सामूहिक लोभीरूप हो।

ईश्वरलाई पाउन सर्वप्रथम हामीलाई ईश्वर के हो भन्ने ज्ञान हुनुपर्दछ अन्यथा कसरी कसैले जे पाएको छ त्यो नै ईश्वरै हो भनी हामी ठोकुवा गर्न वा विश्वस्त हुन सक्दछौं ? अर्को शब्दमा, सत्यको अनुभूतिबिना कसरी कुनै पनि मानवले कथित गुरु,नेता वा शिक्षकले सत्यको बारेमा उचित तरिकाले मार्ग निर्देशन गरेका छन् भनेर निर्णय गर्न सक्दछ ? र यदि मानव स्वयम्लाई सत्य थाहा छ भने मानव किन फेरि त्यस्ता गुरु,नेता,शिक्षक वा त्यस्तै अन्य व्यक्तिको खोजी गरेर उसको चेला बनी उसको प्रशंसा गर्न लालायित हुन्छ ?

सत्यता त यो हो कि हामीले ईश्वरलाई चिन्दैनौं वा ईश्वरको बारेमा जान्दैनौं। जे जति जान्दछौं ती केवल शब्दहरू र कथाद्वारा प्राप्त गर्ने सन्तुष्टि र त्यही सन्तुष्टिभित्र शरण परेर वस्नुपर्नेबाहेक अन्य केही कुरा पत्ता लगाउन सकिरहेका छैनौं। हामीभित्रको सम्मोहित हुने शाब्दिक संस्कारको अन्त्य गर्ने साहस हामीभित्र नहुनु नै परम्परालाई निरन्तरता दिनु हो।

आदर्शसँग वास्तविकता छैन आदर्श व्यक्तिको कल्पना वा धारणाले गर्दा नै मानव जातिलाई ठूलो संकटमा पारेको छ। **हिंसायुक्त मानसलाई अहिंसाको आदर्शले स्वतन्त्र बनाउन सक्दैन।** आदर्श वर्तमान (म जे हुँ) को विपरीतार्थक हो। भ्रम त्यो हो जसले वास्तविकतालाई हटाउँदछ तर भ्रमहरू पनि वास्तविक तब बन्दछन् जब हामी ती भ्रमहरूद्वारा बाँच्दछौं अर्थात् ती भ्रमहरूमाथि भर परेर जीवन चलाउन खोज्दछौं।

जबसम्म जो कोहीसँग आफ्नो प्रतिबिम्ब हुन्छ तबसम्म त्यो व्यक्तिलाई चोट लाग्छ र कुनै न कुनै रूपले त्यस बिम्ब भित्र घोच्ने काम गर्दछ वा घोच्ने काम हुन जान्छ। **हामीले हाम्रो विभाज्य चेतनद्वारा अनुभव गर्ने सबै कुरा भ्रम हो।**

जसरी तालिम प्राप्त कुकुरले केही भनेको मानेमा पुरस्कार पाएजस्तै हामी पनि





कुनै धार्मिक विश्वास, प्रार्थना र मान्यतामाथि आधारित सजायँ र पुरस्कारको खेललाई अस्तित्वमा राख्ने नशामा लिप्त छौं। केवल छरछिमेकीलाई नष्ट गर्न र उसको सम्पत्तिलाई हडप्ने, विच्छेद र विनाश गर्ने खूबीमा मात्र परिवर्तन गर्न सफल भएको मानव जति बढी विगतलाई जोड दिएर प्रत्युत्तर दिन्छ त्यति नै बढी पूर्वाग्रही बन्न पुग्दछ। सचेत र अचेतरूपमा विश्वास गर्नुपर्ने आन्तरिक कारणहरूको स्वभाव बुझेपछि मात्र विश्वास भन्ने शब्दबाट स्वतन्त्र हुन सकिन्छ। लक्ष्यहरूको स्वतः छोडाइमा प्रश्नहरू पनि बिलाउँदछन्। यी लक्ष्य र प्रश्न एक आपसमा अन्तर्निर्भर छन्।

प्रत्येक प्रार्थना एउटा बिन्ती हो र जब स्पष्टता र बोझविहीन मन हुन्छ त्यहाँ कुनै माग वा सोधाइ हुँदैन। हाम्रा विश्वासहरू सबै दोस्रो दर्जाका वस्तुहरू हुन्। **अधिकारको अन्धभक्त स्वीकारोक्तिको परिणाम नै विश्वास हो।** हामी हाम्रो विश्वासहरूबाट भिन्न छैनौं। जब ती विश्वासहरू र भ्रमहरू अन्त्य हुन पुग्दछन् तब हामी पनि अन्त्यमा आउँदछौं।



## जीवन र वातावरण - कुनले कसलाई बनाउँदछ ?

प्रकृति भनेको मानवले प्रयोग गर्ने भनि सिर्जना गरेको बस्तु हो भन्ने पूर्वाग्रही र एकोहोरो सोचाइले पर्यावरणलाई असन्तुलित बनाएको छ र यो असन्तुलनलाई सन्तुलनमा ल्याउनको लागि अब आएर चाल्नुपर्ने कदम निरर्थक सावित हुने लक्षण स्पष्टसँग देखा पर्न थालेको छ किनभने विचार स्वयम्‌को जन्म, स्वभाव, अभिव्यक्ति र कार्यले आफ्नो निरंकुशता विभिन्न माध्यमबाट प्रमाणित गरिरहेकोले समस्या समाधान गर्न कठिन हुने देखिन्छ।

मानवले वैचारिक रूपमा जुन सम्बन्ध स्थापित गर्न खोजिरहेको छ त्यो वास्तवमा कुनै न कुनै रूपमा गर्न खोजेको पारस्पारिक शोषणको सम्बन्ध हो। मानवलाई दुःख तब हुन्छ जब भौतिक प्रक्रिया अर्थात् कारण र असरको अस्तित्वलाई नै मानव जीवनको अस्तित्व हो भनी आत्मसाथ गरिन्छ। यदि कारण र असर स्थिर हुन्छन् भने भविष्यलाई पहिला नै स्थापित गरिएको हुन्छ। कारण र असरको अविभाजनीय इकाइले कर्ता, जुन सदा केही माध्यमद्वारा केही बन्ने अभिलाषा राख्दछ, पूर्ण रूपमा अन्त्यमा आउँदछ। **अन्त्य गर्नु** सँग उद्देश्य हुनु निर्णयको कुरा हो। निर्णयले इच्छाको कार्य - म यो गर्नेछु यो काम गर्ने छैन - को अर्थ दिन्छ। जब इच्छा **अन्त्य वा गन्तव्य**को कार्यमा प्रवेश गर्छ त्यो इच्छा अन्त्यताको कारण बन्दछ। जहाँ कारण छ त्यहाँ उद्देश्य हुन्छ र यसरी वास्तवमा **अन्त्य**को अन्त्य नै हुँदैन। यदि कार्य गर्नाको क्षेत्रमा कुनै कारण छ भने मानस स्वतन्त्र कार्य गर्न कहिल्यै सक्दैन। कारण जतिसुकै सूक्ष्म र तार्किक भए पनि त्यो एउटा वैचारिक प्रक्रिया हो र विचार जहिले पनि कसैद्वारा अभिप्ररित वा स्वयम्‌ले गर्ने गरेको कल्पना, इच्छा, धारणा वा निर्णयद्वारा प्रभावित हुन्छ।

**सम्बन्धको अध्ययन नै जीवन जिउने कला हो।** यदि सम्बन्धभित्र सम्झना छ भने त्यो सम्बन्ध होइन किनभने सम्बन्ध मानव मानवबीचमा हुन्छ न कि सम्झनाहरूबीचमा हुन्छ। सम्बन्धको स्थापना त्यहाँ हुन्छ जहाँ डर हुँदैन र जहाँ डर हुँदैन त्यहाँ चोट पनि हुँदैन। सर्वप्रथम स्वयम्‌ले पूर्णताको गंभीर आवश्यकता स्वयम्‌सँग र स्वयम्‌भित्र हुनुपर्ने स्पष्टता बोध गर्नेबित्तिकै अन्य व्यक्तिसँगको सम्बन्धमा स्वभावतः पूर्णता स्थापना हुन जान्छ। **मानव जातिले आफूलाई प्रकृतिबाट पृथक राखेर प्रकृतिलाई अध्ययन गर्न कहिल्यै सक्दैन।** पृथ्वी कसैको पनि स्वामित्वमा रहेको छैन। मानव यस पृथ्वीका पाहुनाहरू हुन् र मानवमा पाहुनामा हुनुपर्ने सरलता र कठिनता दुवै निहित हुनुपर्दछ।





व्यक्तिको अनुपमता प्राकृतिक रूपले पिता र माताबाट आउने वंशाणुमा रहेको हुन्छ। जन्मैदेखिबाट बच्चालाई विभिन्न सांस्कृतिक, सामाजिक, शैक्षिक मूल्य मान्यता र विश्वासको वातावरणमा हुर्काउँदै लैजाँदा हुर्कंदो बच्चाले विभिन्न चरणमा घट्ने उत्तेजक-प्रत्युत्तरबाट प्रभावित हुन्छ र जुन आखिरमा गएर बच्चाको वैचारिक प्रणालीको अंश बन्दछ र त्यसैलाई नै ज्ञान भनिन्छ। यस्तो ज्ञान सम्झनाको रूपमा रहन्छ। जबसम्म बाहिरी कृत्रिम कैदखानालाई तोडिदैन, विष्फोटन गरिदैन तबसम्म प्राकृत वंशाणुले प्रष्फुटन हुन पाउँदैन। वंशाणुको लागि पृष्ठभूमि तयार छ वा भए तापनि विगतको आसक्ति र मस्तीले गर्दा मानव प्रष्फुटित हुन नसक्ने अवस्थामा जकडिएको छ। पूर्खाको संस्कृति र संस्कारको प्रभावले मानवको प्राकृतिक प्रष्फुटनलाई नष्ट गरिराखेको छ। जबसम्म मानव ऐतिहासिक रूपले वैचारिक मूल्य र मान्यतामा जकडिरहन्छ तबसम्म मानवको स्वार्थीयुक्त वंशाणुगत गुणले निरन्तरता पाउँदै समस्या सिर्जना गर्नतिर अग्रसर भइरहन्छ।

वास्तविक तीक्ष्ण विवेकयुक्त मानस अनुशासनबाट स्वतन्त्र हुन्छ किनभने तीक्ष्णविवेक वातावरणमाथि प्रश्न गर्ने र वातावरणको सही महत्व पत्ता लगाउनु बाट जन्मिएको हुन्छ र उक्त अन्वेषणमा कुनै विशेष परिस्थिति वा ढाँचामा गरिने खालको समायोजन नभई बरु सुझबुझद्वारा गरिने वास्तविक समायोजन हुन्छ र तसर्थ कुनै विशेष अवस्थाबाट स्वतन्त्र हुन्छ। **सजीव प्रणाली, जुन विभिन्न उप-प्रणालीहरू मिलेर बनेको छ लाई उप-प्रणाली अन्तर्गतअध्ययन गर्दा ती स्वयम्‌मा पूर्ण देखिन्छन् भने प्रणालीहरूको आधारमा अध्ययन गर्दा सहायकको रूपमा स्थापित हुन पुग्दछन्।** सजीव प्रणाली स्व-सांगठनिक प्रणाली हो जसले यो अर्थ देखाउँछ कि वातावरणद्वारा नै जीव प्रणालीको बनावट तथा कार्यहरू निर्धारण नभई, प्रणाली स्वयम्‌द्वारा स्थापित भएको हुन्छ तर यसको तात्पर्य जीव-प्रणाली वातावरणबाट भिन्न हुन्छ भनेर भनेको नभई वातावरणसँग लगातार प्रतिक्रिया र प्रत्युत्तर गर्दछ। जीव प्रणालीको संगठन भने वातावरणसँगको प्रतिक्रियाद्वारा निर्धारण हुँदैन किनकि स्वयम् नवीकरण (परिवर्तन) हुनु स्व-सांगठनिक प्रणलिको एउटा अत्यन्त अन्तर्निहित स्वभाव हो।

केवल वातावरणभित्रको अनुभवले सद्‌गुणको सार र नम्रता ल्याउन सक्दैन। केवल नम्रतामा मात्र सिकाइ हुन्छ र सिकाइ ज्ञानको प्राप्ति होइन। **आन्तरिक तनाव र विरोधाभासको मुक्ति हुनु नै सरलताको जन्म हुनु हो।** स्पष्टतासँग कारण र परिणाम केही पनि हुँदैन। स्पष्टता त विचार र यसले गर्ने गरेका क्रियाकलापहरूको

अवलोकन हो र यही स्पष्टता नै सार्मथ्य (बल) हो। मानव आफ्नो सोझोपन र कमजोरीहरूको सामना गर्दा चोट लाग्ने भएकोले मानव स्वयम्ले आफैंभित्र फर्केर आफैभित्र परिवार,धर्म,राष्ट्रका पर्खालहरू खडा गरी निर्दयी बन्न पुग्दछ तर यदि मानव कुनै प्रतिक्रियाबिना नै स्वयम् आफैभित्रका र संसारका सम्पूर्ण गतिहरूले प्रदान गर्ने चोट, पश्चाताप र लादिएको अनुशासनबिना नै सम्वेदनशील हुन्छ भने मात्र त्यहाँ अमापनीय अस्तित्वको ज्योति सदा बलिरहेको हुन्छ। नियन्त्रित जीवन कहिल्यै स्वस्थ हुँदैन।

जब असलपनलाई पूर्णतासँग जोडिन्छ तब असलपनले वातावरण र जीव बीच अनुपम सम्बन्ध स्थापित गर्दछ। असलले उदारता र अरूलाई चोट नपारिकन कार्य गर्ने चाहनाको साथसाथै क्षणिक समयमा मात्र उपर्युक्त हुने कुरा नगरी जुनसुकै समयमा पनि उपर्युक्त हुने कुरालाई प्रष्फूटित गराइरहेको हुन्छ र असलपनले कुनै वातावरण, परिस्थिति र दवावसँग सम्बन्ध राख्दैन,बरु वातावरण असलपनसँग सम्बन्ध राख्दछ। असल हुनु भन्नु नै प्रभाव, बाध्यता र सहज प्राप्तिको धारणाबाट स्वतन्त्र हुनु हो। जीवनलाई वातावरणले असर पारे तापनि आन्तरिक परिवर्तनको धरातलमा स्वयम् व्यक्तिको जीवनले बाहेक अरू कसैको प्रभावले केही पनि गर्न सक्दैन। मनोगत रूपमा भोलि भन्ने कुराको अस्तित्व नरहने गरी जिउने जीवन नै स्वस्थकर जीवन हो।







## विचारक - विचारबाट भिन्न हो कि होइन ?

एउटा शब्दको प्रतिस्थापन अर्को शब्दले गरे तापनि त्यसभित्र लुकेको गति र उद्देश्य एउटै नै हुने कुरालाई बोध गर्न **म** को परिचयलाई विभिन्न काम, प्रणाली, वाद, देश, ईश्वर आदिसँग सम्बद्ध गरेर **म** लाई नै अझ बढी सशक्त बनाउन खोजिएको कुराबाट स्पष्ट हुन सकिन्छ। **म** भन्नु नै ज्ञानको संग्रह हो। जब यो **म** भनेर जान्ने वा चिनिने ज्ञानको अन्त्य हुन्छ तब उक्त व्यक्तिले स्वयम्लाई जीवित वा मुर्दा भनेर चिन्ने कुनै आधार नै रहँदैन। हामीले कुनैपनि आधार वा सन्दर्भबिना अनुभवलाई सञ्चारित गराउन सक्दैनौं। जे अनुभव गरिन्छ त्यो ज्ञानको चित्राङ्कन अर्थात् कल्पना हो। अज्ञातलाई अनुभव गरिरहन ज्ञान पूर्णरूपमा मर्नुपर्दछ र त्यो कुराको श्रवण गर्नेबित्तिकै ऊ डराउँदछ किनभने मृत्युलाई अनुभव गर्न कर्ताले सक्दैन। स्मरण र ज्ञान एउटै कुरा हुन किनभने स्मरणबिना ज्ञानको कुनै मूल्य हुँदैन। कुनै पनि अनुभवको पुनः इच्छा गर्नु भनेको विगतलाई जोड दिनु हो अर्थात् विचारलाई निरन्तरता दिइ ज्ञातलाई अझ वृद्धि गराउनु हो। मानवले स्वार्थविहीनता भन्ने कुरा लगानी गरेर वा प्रयोग गरेर प्राप्त गरिने वस्तुको रूपमा स्थापित गरिएको छ। बाँच्नको लागि एक निश्चित स्वार्थपन आवश्यक छ तर हामीलाई यो **स्वार्थ** समाधान गर्न नसकिने ठूलो समस्या बनेको छ। स्वार्थले प्रेमलाई देख्न र स्पर्श गर्न सक्दैन। स्वार्थको वरिपरिका सम्पूर्ण धारणाहरूबाट स्वतन्त्र नभइकन हामी आफ्नो मौलिक भाव र अवस्थामा आउन सक्दैनौं।

**विचारको नियम भन्नु नै तर्क गर्नु र वाह्यको प्रत्युत्तर गर्नु हो। तर्कद्वारा निर्धारित सत्यबाहेक अन्य कुरा छैन भन्नु पनि विचार नै हो।** भद्र वा अलि राम्रो चिन्तन भन्ने कुरै छैन। केवल सम्पूर्ण चिन्तन शर्तात्मक हुन्छ। झुटभित्रको सत्,सत् भनिएको भित्रको झुट र सत्लाई सत्को रूपमा अनुभूति गर्नको लागि स्वयम् मानस आफ्नो शर्त र प्रभावबाट बाँधिएको हुनुहुँदैन। एसिया,अफ्रिका, युरोपका नदीहरू सबै नदीहरू हुन् तर जुन क्षणमा ती नदीलाई शब्दद्वारा परिचित र परिभाषित गराइन्छ तब त्यहाँ विभाजन हुन्छ। यो विभाजन नदीको सीमितता हो अर्थात् नदीका सुन्दर गुणहरू जस्तै गहिराइ, पानी, बहाव, आवाज आदिलाई सीमित गराउनु हो। धारणामाथि आधारित कार्य निश्चय नै छनौटको कार्य हो जब मानवले विचारको सीमितता र चलाखीपनको गति देखेर स्वयम् विचारलाई विचारले केही गर्न नसकिने कुराको दर्शन गर्न पुग्छ तब विचार स्वभावतः आफ्नो प्राकृतिक ढाँचामा आउन पुग्दछ। विचारद्वारा स्पर्शरहीत भइरहने हुनाले प्राकृतिक अवस्थासँग दिशानिर्देश गर्ने आधार नै

हुँदैन र त्यो मौन वा शान्तपनबाट भाग्ने बहाना पनि पत्ता लगाउन सक्दैन। विचार आफ्नो कार्यगत क्षमताभन्दा पर जानु मानिसको शत्रु बन्नु हो। विचार स्वयम्ले आफ्नो निरन्तरता दिने काम केवल बढीभन्दा बढी प्रश्न सोधेर ज्ञान संकलन गर्नुमा मात्र छ। विचारलाई आकासमा मिल्किसकेपछिको गर्जनसँग तुलना गर्न सकिन्छ। **आकासमा मिल्कनु र गर्जने काम (चट्याङ्) एकसाथ एकैपटक हुन्छ तर आवाज प्रकाशभन्दा ढिलो गमन गर्ने भएकोले मिल्कने र गर्जने छुट्टाछुट्टै घटनाहरू हुन् भन्ने भ्रम सिर्जना भएजस्तै विचार (गर्जन) ले कहिल्यै पनि जीवन (मिल्कनु) को गतिलाई समेट्न सक्दैन।** विचार धेरै नै ढिलो अर्थात् सुस्तो छ।

निरन्तरताको अन्त्य भन्नु नै समयको अन्त्य हो। सकारात्मकता भन्नु नै के गर्ने भन्नेबारेमा कुनै एक निश्चित योजना वा तरिका दिनु भन्ने बुझिन्छ। स्मरण पूर्ण रूपमा आवश्यक छ तर **समस्या** भनेको स्मरण होइन बरु त्यो स्मरणलाई आध्यात्मिक रुचि र खुसी प्राप्ति गर्ने साधनको रूपमा प्रयोग गर्ने वैचारिक झुकावभित्र रहेको पाइन्छ।

चाहना गर्नु नै विचार हो किनभने विचारको साधनबिना त्यो चाहना पूरा हुनै सक्दैन। मानिसले अर्काको विचारलाई आफ्नो विचार मानेर हिड्दैछ तर वास्तवमा मानिसको आफ्नो भन्ने कुनै विचार नै छैन। विचार स्वयम्ले आफ्नो अल्पकालीन अस्तित्वको कारणले गर्दा स्थायित्वको रूपमा विचारक सिर्जना गरी क्रमशः विचारक र अनुभवकर्ता बनाई आफ्नो अस्तित्वलाई निरन्तर कायम राख्न खोज्दछ। वर्तमानको सुझवुझ विचारमाथि भर पर्दैन किनभने विचार स्वयम् नै एउटा भाग्ने बाहना हो। समस्याको बारेमा सोच्नु समस्यालाई नबुझ्नु हो। जब मानस शान्त हुन्छ तब.मात्र वर्तमानले आफ्नो सत्यता स्वतः प्रष्फूटित गराउँदछ। विचारलाई जागरण,सचेतता गराउनुमा विचारले बनाएका चीजहरूको दर्शन हुन पुग्दछ।

विचारले असल र खराव बनाउँदछ। असल त खराबको विपरितार्थक हो भन्नु केवल विचारमात्र हो। **असल जे छ त्यो विचारको उपज होइन।** वैचारिक अस्तित्वको सचेत तहमा घट्ने कुनै पनि कार्य प्रतिक्रिया हो। सजीव प्रणालीले गर्ने वा दिने भन्नु नै एउटा र अन्तिम कार्य उत्प्रेरक-प्रत्युत्तर प्रक्रियाको एउटा ऐकिक क्रिया हो। त्यहाँ विचारले हस्तक्षेप गरेर कृत्रिम विभाजन गर्ने बाहेक अन्य कुनै विभाजन हुँदैन। यदि अमापनीयतालाई मापन गर्न सकिन्छ भने त्यो अमापनीयता होइन। हाम्रो मापन (नाप्ने) गर्ने औजार शब्द हो र शब्द कहिल्यै वास्तविक र यथार्थ हुँदैन। व्यक्तिले जे विचार गर्दछ त्यो विचार कदापि व्यक्तिबाट भिन्न हुन सक्दैन। जे त्यो सोच्दछ त्यो त्यही नै हो तर त्यसबाट भिन्न सोच्नु भनेको विचारको अनिष्टकारी खेलको सुरूवात गर्नु हो।





## सत्य,शून्य,शक्ति,धर्म र जीवन - एउटै हुन् कि होइनन् ?

विवादरहीत र तुलनाबिना को समन्वयात्मक जीवन जिउनको लागि हुने र गर्नुपर्ने सम्पूर्ण वृद्धि, विकास र परिवर्तनसँग सम्बन्धित कुराहरू आफैंभित्र सम्पन्न भएर चिनिन पुगेको प्राणी हो-मानव प्राणी। धर्म, मुक्ति भन्ने कुराले सम्प्रदाय र व्यक्तिसँग सरोकार नराखी जीवनसँग सरोकार राख्ने कुरा हो।

जब विचारको गति हुँदैन तब त्यहाँ केवल शून्यताको मौनता हुन्छ। यो तीन कालको पूर्ण विष्फोटन हो। त्यसपछि अस्तित्व वा भाव समयविहीन हुन्छ। केवल सक्रिय वर्तमान तर त्यो वर्तमान समयको हुँदैन। यो त वैचारिक अवरोधहरूको अनुपस्थिति र पर्खालविहीन भावनाको सतर्कता हो।

शून्यता केवल मानसकै सुचीहरूको स्व-अध्ययनबाट मात्र सम्भव हुन्छ। कसैले त्यसलाई प्रमाणको रूपमा पेस गर्न सक्दैन। यदि कसैले कसैलाई शून्यतामा लान सक्दछु भन्दछ भने त्यो मित्थ्याभाषी र सम्मोहन गर्ने व्यक्तिको रूपमा स्थापित हुन पुग्दछ। करुणा महसुस गरिराखेको छु भनेर भन्ने कुरा होइन। शून्य मानस मनोगत मबिना नै कार्य गर्दछ। यस्तो मानसले गल्ती गरे पनि तत्काल सच्याइहाल्दछ किनभने उसको लागि विगतमा भर पर्नुपर्ने आवश्यकता पर्दैन। यस्तो मानस सदा तत्पर, लोचपूर्ण र सिर्जनात्मक गतिमा चलायमान् भइरहन्छ। यस मानसले कुनै भावी उद्देश्य बनाई प्रयास गरेर मनोगत रूपमा केही बन्ने भन्ने कुरा लिएर चलायमान भएको हुँदैन र यो नियन्त्रणविनाको पूर्ण ध्यानमा मग्न भइराखेको हुन्छ। ध्यान भनेको सचेत झुकाव,सचेत इच्छा लिएर गरिने प्रयासलाई ध्यान भन्न सकिदैन। त्यसैले सचेतको अनुपस्थितिको अवस्था अर्थात मआफबिनाको अवस्था नै ध्यान हो र यो ब्रह्माण्ड यही ध्यानमा समाहित रहेको छ। ब्रह्माण्ड ध्यानमा लिन छ भन्नु नै यस नियम कै अर्थात् ध्यान कै नियमको अभिव्यक्ति हो। सूर्य उदय र अस्त हुनु,ताराहरू, ग्रहहरू आफ्नो गतिमा चल्नु सबै नियम हुन्। पूर्ण वस्तु पूर्ण नियममा हुन्छ। अनुशीलन,ध्यान,मनन्को अर्थ आकास हो र खुलापन यसको अभिव्यक्ति हो, सिर्जना हो। ध्यान अमापनिय छ। हामीले ध्यानको बारेमा धेरै व्याख्या र भाषण दिन खोजेमा त्यो ध्यान ध्यान रहँदैन।

वैज्ञानिक धर्म जसले हृदय र मस्तिष्कको स्वभाव र तीब्रतालाई बोध गरी ज्ञानभन्दा पर जाने विशालता र तीब्रताले ओतप्रोत हुने भएकोले यसले कथित संगठित धर्मसँग सम्बन्धित कुनै मन्दिर, गिर्जाघर र गुम्बामा सरोकार राख्दैन र त्यहाँ कुनै सत्यता पनि देख्दैन। तिनीहरू सायद केवल चिन्ह हुन सक्छन् तर चिन्ह तथ्य कदापि हुन

सक्दैन। सङ्केत र चिन्हको पूजा गर्नुमा हामीले यथार्थतालाई, सत्यलाई भुल्दछौ र दुर्भाग्यवश सत्यलाई भन्दा चिन्हलाई नै बढी महत्व दिन पुगी चिन्ह र झण्डाको लागि हिंसा र युद्ध भड्काउन पुग्दछौं। सम्पूर्ण धर्महरू निष्कर्ष र विश्वासहरूमा आधारित छन्। **ज्ञान समयको हो र समयको बन्धनबाट स्वतन्त्रता नै धर्म हो।**

सत्य धार्मिक मानिस समाजबाट पूर्ण स्वतन्त्र हुन्छ उसले समाजप्रति सम्बन्ध स्थापना गर्न सक्छ तर समाजको ऊसँग सम्बन्ध हुँदैन। समाजको अर्थ कुनै पनि व्यक्तिलाई उच्च तहमा पुग्नमा सहायता गर्नुमा रहेको हुन्छ। वास्तवमा सत्यले चाहे घरमा होस् वा विदेशमा होस् कहीं पनि विरोधाभास सिर्जना गर्दैन। जे कुरा कुनै एक व्यक्तिको लागि सत्य हुन्छ, त्यो यस्तो कुरा हो जुन अरूहरूलाई कुनै पनि हालतमा सञ्चारित गराउन सकिदैन। सत्यताले नयाँ समाज र संस्कृतिको जन्म दिन्छ। सत्य भनाइले बोझमुक्त गराउँदछ तर त्यो निर्देशनको रूपमा कुनै हालतमा पनि प्रस्तुत हुन सक्दैन। जे सत् छ त्यो समग्र मानवतासँग सरोकार राख्छ, मानवहरूबीच एकता सत्यताले ल्याउँदछ। झुटको वास्तविक अनुभूति नै सत्यताको सचेतता हो।

परावर्तित गर्न कर्ता र बस्तु हुनुपर्ने भएकोले मौन मानस परावर्तित मानस होइन बरु केन्द्रविहीन मानस हो। पूर्ण मानसको मौनता नै ध्यान हो। यदि हामी सतर्कतापूर्वक पूर्णरूपमा ध्यान लगाएर हेर्दछौं भने त्यहाँ सिक्नुपर्ने केही छैन। त्यहाँ केवल अनन्त ठाउँ, मौनता र शून्यता छ जसले पूर्ण शक्तिको उपयोग गरिराखेको हुन्छ। **स्व-बोधबिना जे बोल्दछौं त्यो सत्य हुँदैन।** सत्य धेरै नै खतरामूलक हुन्छ किनभने त्यसले स्वयम्भित्र क्रान्तिको ज्वाला बालीराख्दछ। पूर्णता नै शक्ति हो र त्यो पूर्णशक्तिमा शून्यता हुन्छ। उक्त शून्यतामा कुनै वस्तु वा भाव हुँदैन।

**सत्य नै शून्य हो, शून्य नै शक्ति हो, शक्ति नै धर्म हो र धर्म नै जीवन हो।**







## खण्ड-दुई

# सत्य छैन
# ("TRUTH IS NOT")

### जीवनको अर्थ - कसले कसलाई कसरी लगाउँदछन् ?

शताब्दीऔंदेखि मानव विकासक्रमको अन्तिम उद्देश्य भन्नु नै धार्मिक गुरुहरू र राजनैतिक नेताहरूले प्रतिपादित स्वर्गप्राप्ति र साम्यवादको नशामा जीवनलाई समर्पण गरेर पूर्णमानवको परिकल्पना साकार गर्नुमा रहेको छ जसले गर्दा मानवले पाउनु नपर्ने दुःख पाइरहेका छन्। प्रत्येक व्यक्ति वा समूहले ईश्वर वा तथाकथित सत्य आफ्नो पक्षमा रहेको दाबी गरी मानवले नै मानवलाई मार्नमा तल्लीन भइरहेको कुरा आदर्श नभई वर्तमान यथार्थता हो। कुनै पनि पक्षधर व्यक्तिहरूले आफ्नो आस्था र विश्वासको पक्षमा ल्याउन नसकेमा आक्रामक भई डर त्रास देखाउँदै अन्त्यमा हत्या र हिंसाको मैदानमा उत्रन अग्रसर भई नरसंहारको दानवीय नृत्य देखाउने गरेको चरित्र सर्वविदितै छ। जब मानव चेतनाले विभाजित हेराई र सोचको विकास गरी डराउन पुग्यो तब उक्त डरबाट छुटकारा पाउन प्रयोग गर्ने गरेको साधन विचारले पुनः डरलाई नै झन् निरन्तरता दिन थालेको पाइन्छ। **यही विचार साधनले नै समस्या समाधानको खातिर अनेक किसिमका अन्तर्ज्ञान, अन्तर्दृष्टि, राज योग र विपश्यनाजस्ता धारणाहरूको विकास गरेर मानवलाई झन् अन्यौलता सिर्जना गरेको छ।** जतिसुकै शब्दहरूको उत्पत्ति र निर्माण गरे पनि शब्द कदापि यथार्थता बन्न सक्दैन। मानिसले शब्दद्वारा

वस्तुहरूको यथार्थतालाई बुझ्न खोज्नु नै वास्तविक समस्या हो ।

जीवन के हो भन्ने बारेमा जति पनि अभिव्यक्ति गरिन्छ ती केवल परिभाषामात्र हुन् जसको कुनै अर्थ हुँदैन । **जीवनलाई सैद्धान्तिक व्याख्या विश्लेषण गर्नु जीवनको मूल्यलाई गिराउनु हो ।** जीवनको बारेमा कसैले पनि केही भन्न सक्दैन । विचारले यथार्थता बुझ्न व्यर्थ कोसिस गरिरहेको छ । **वास्तवमा धर्मको शाब्दिक अर्थ भन्नु नै मुहान वा मूल स्रोततिर मानवलाई सम्बन्ध गराउनु भन्ने हुन्छ ।** तर यथार्थलाई हेर्ने हो भने धर्म र राजनीतिले मतभेत र संघर्ष सिर्जना गरेको छ । वास्तवमा धर्म र राजनीतिले जे कुराको स्थापना गर्न खोजेको हो त्यो सफल नहुने कुरा स्पष्ट भएको छ । धर्मको उद्देश्य मानिसलाई स्वर्गमा पुऱ्याउनु नभई बरु स्वर्ग मानिसभित्र ल्याउनु भने तापनि यथार्थमा नरक स्थापना गरिरहेको कुरा नरसंहारको मार्ने र मर्ने खेलले स्पष्ट पारेको सर्वविदितै छ । धर्मले शान्ति ल्याउँछ भनी आस गर्दै बस्नु र आस गर्दै मर्नु पर्ने अवस्था सिर्जना गरेको छ । **वैचारिक धरातलद्वारा हुर्केको मानवता र मानव अधिकारको अवधारणा आफैँमा असफल सावित भएको छ ।** धर्मले विभिन्न सिर्जनात्मक कुराहरू गरेको हुनाले मानव समस्याको समाधान पनि धर्मबाट नै सम्भव हुने भनिविकसित गरेको मूल्य मान्यता र आस्थाले गर्न खोजेको चेष्टा असफल सावित भएको छ । हामीलाई जीवनको बारेमा बुझ्नुपर्छ भन्ने मान्यताले प्रदत्त ज्ञानले नै जीवनको उद्देश्य के हो भन्ने प्रश्न उत्पन्न भएको हो तर कसैलाई पनि जीवनको बारेमा केही कुरा थाहा छैन । जति पनि जीवनको बारेमा थाहा छ त्यो सबै केवल परिभाषा र धारणामात्र हो जसले जीवनको सजिव गुणलाई स्पर्श गर्न सक्दैन । जीवनको अर्थ बोध गरेर परिवर्तन ल्याउने आश गरिएको छ तर त्यस्तो जीवनमा गर्नुपर्ने कुनै पनि कुराको बोध अस्तित्वमा नरहेको पनि हुन सक्छ । यदि जीवनसँग कुनै अर्थ छ भने पनि त्यो पहिला नै सञ्चालनमा आइसकेको हुने हुनाले कसैले पनि जीवनको बारेमा कुनै प्रश्न गर्नुपर्ने औचित्यता नै रहँदैन । जीवित मानिसले कहिल्यै पनि मृत्यु र मृत्युपछिको बारेमा प्रश्न सोध्न चाहँदैन किनभने त्यस्ता प्रश्नहरूको उत्पत्ति केवल जीवनबाट डराएका व्यक्तिले मात्र सिर्जना गर्ने गरेको पाइन्छ । यहाँ कसैले पनि कसैलाई जीवनको अर्थको परिभाषा दिनुपर्ने आवश्यकता छैन ।







## यथार्थता – कसले आविष्कार गर्दछ ?

कुनै पनि व्यक्तिले भनेको कुरा सत्य हो भन्ने कुरा स्वयम् आफैंले पत्ता नलगाइकन एकिंन गर्नु भनेको अन्धभक्त बनी त्यस व्यक्तिको चेला बन्नु हो । हामीलाई यो सम्पूर्ण सिर्जना मानिसको विशेष उद्देश्य प्राप्ति र फाइदाको लागि उपलब्ध भएको हो भनिहाम्रो मस्तिष्कमाथि प्रभाव पारिएको परिणामस्वरूप नै दुःखको बीज बिजारोपण हुन पुगेको हो । **जुका र लामखुट्टेले शरीरमा टोकेको खण्डमा मार्नु जायज देखिए तापनि मानिसले मानिसलाई कुनै विचार वा वादको लागि मार्नु कत्ति पनि जायज देखिदैन ।**

प्रकृति स्वयम्को लागि अपनाउनुपर्ने त्यस्तो कुनै संस्कृतिको आवश्यकता नपरे तापनि संस्कृति र समाजले मानिसलाई कुनै एक संस्कृतिभित्रको मूल्य र मान्यताको ढाँचाभित्र आबद्ध गराउन खोजेको पाइन्छ । मानिस जे जस्तो छ त्यो भन्दा राम्रो, उपर्युक्त, अर्थपूर्ण र आर्कषक उद्देश्य छ भनी कल्पना गर्नाको कारणले मानिसले पुनरावृत्ति प्रक्रियालाई अगाँलेको छ । मानिसले कुनै पनि ढाँचा तयार पारेर पूर्णता दिन खोज्ने प्रयासले पुनः मानिसलाई त्यही ठाउँमा पुऱ्याउनेछ जहाँबाट उभिएर अहिले प्रश्न गरिरहेको छ । हामीमाथि लादिएको कुनै पनि कुराको यथार्थतामाथि प्रश्न गर्नु नै समस्यामा जकडिनु हो । **यथार्थता अनुभव गर्ने कुनै बाटो नै छैन बरु हामीले विचारद्वारा यथार्थको आविष्कार गरेका छौं ।** पुरानो पिंढीले आफ्नो मूल्य, मान्यता र आस्थालाई कायम राख्न आउँदो पिंढीमाथि प्रभाव पारी आफूले पूरा नगरेको काम गर्न-गराउनको लागि विश्वास र मान्यताको साथमा डर र धम्कीको प्रयोग पनि गर्दछन् तर त्यो तरिकाबाट काम गर्न असम्भव हुने देखेपछि प्रेमको कुरा गरी बौद्धिक चतुरता प्रस्तुत गर्दछन् । बस्तुको नामलाई बस्तुबाट हटाएर गरिने गफ गफैमात्र हो । बस्तुको नामबाट शब्दलाई हटाउन सकिदैन । कसैले बस्तुको नामांकन गर्नेबित्तिकै वक्ता र बस्तुबीच हुने विभाजनको खेल अस्तित्वमा आइहाल्दछ । जब कुनै पनि व्यक्तिले आफूलाई खुशी, दुखी वा इर्ष्यालु पाउँदछ वा ठान्दछ तब त्यो इन्द्रीयानुभूति गर्नु वा ठान्नुले नै (म र खुशी वा इर्ष्याबीच) विभाजन ल्याइसकेको हुन्छ । नयाँ अनुभव भन्ने कुनै कुरा नै छैन किनभने पुरानोले नै नयाँ स्थापना गर्ने गर्दछ ।

ज्ञान प्राप्तिको लागि गरिने स्थायी मागले नै अनुभवलाई निरन्तरता दिने काम गर्दछ । जुनसुकै कारणले होस्, भयबाट मुक्त हुने सम्पूर्ण उपचारका विधिहरूले नै वास्तवमा भयलाई कायम राख्ने र निरन्तरता दिने काम गरिरहेको छ । जब डरको

अन्त्य हुन्छ तब ज्ञात भएका सम्पूर्ण कुराहरू पनि अन्त्यमा आई शारीरिक मृत्युले ठाउँ लिन पुग्छ। वास्तवमा एकपटक यो मनोगत म अर्थात् स्वयम्को अस्तित्व अन्त्य भएपछि वास्तवमा म बाँचेको छु वा मरेको छु भन्ने ज्ञात गर्ने कुनै पनि तरिका रहँदैन। यो मेरो शरीर हो भन्ने कुरा भन्न पनि असम्भव हुन्छ तर सञ्चारको लागि भने 'म' को प्रयोग स्वाभाविक बन्न जान्छ। कुनै पनि कुराको नामकरण नगरिकन महसुस गर्ने बाटो नै छैन किनभने सबै भावनाहरू विचार हुन्। ठाँउ नभए बिना कुनै पनि बस्तुको मापन गर्ने बाटो नै छैन। विचारको जन्म नै स्वयम् आफैँमा मापन गर्ने सुरूवात हो। मासु खानु नखानुभन्दा पनि मासु खाने प्रबल इच्छा राखेर मासु नखाएमा हिंसाले नै प्रश्रय पाउँदछ भन्ने मनोगत भावना विकसित गराउनुले ठूलो समस्या सिर्जना गर्दछ। शरीरलाई चाहिने जुन कुरा हो त्यो विचारले उत्पादन र परिष्कृत गराउँदै ल्याएका पौष्टिक भनाउँदा कृत्रिम तयारी खानाहरूको आवश्यकता छैन। **शरीर स्वादको लागि नभई भोक मेटाउनको लागि केही चीज माग गर्दछ तर त्यो विचारको उपज नै हुनुपर्दछ भन्ने जरुरत छैन। शरीरले आवश्यकभन्दा बढी खाना खानु नै समस्या हो।** हामीले भोक र खानाभन्दा पनि खानामाथि बनाइएको सोचाइद्वारा बाँचिरहेका छौं। त्यसैले त कुनै सोचिएको स्वादिष्ट खाना भएन भने खाँदै खाँदैनौं तर जब विचारले भोकमाथि कार्य गर्न छोड्छ तब त्यही नखाएको खाना शरीरले खान अभिप्रेरित हुन्छ र खान थाल्दछ। शरीरलाई परिस्थितिअनुरूप के खानुपर्छ भन्ने अन्तर्विवेक पहिल्यैबाट स्व-निहित रहेको हुन्छ। यदि शरीरलाई कुनै खाना मन पर्दैन भने त्यसलाई प्राकृतिक रूपले अस्वीकृत गरेको पाइन्छ।







## जीवनको मौलिकता-प्रयासबिना सम्भव कि असम्भव ?

वास्तवमा मानिसले मौलिकता प्रस्तुत गर्न कठिन छ किनभने जति पनि अनुभव गरिन्छ त्यो सबै कुनै न कुनै रूपमा विगतका तथाकथित दार्शनिक,बौद्धिक तथा मुक्ति प्राप्त गरेका व्यक्तिहरूको अनुभव र धारणासँग मिलाउन खोज्ने र तुलना गरेर उनीहरूले भनेका अनुभवहरू प्राप्त गर्नमा तल्लीन भइरहेको पाइन्छ। यसरी कुनै पनि व्यक्तिसँग प्रथम दर्जाको मौलिक अनुभव भन्ने कुनै कुरा नभएकोले सबैले दोस्रो दर्जाको मानव जीवन व्यतित गरिरहेको पाइन्छ। सत्य,स्वर्ग प्राप्त गर्नको लागि मानिसले आश्रममा गएर शरीरलाई कष्ट दिएर,कामवासनालाइ दबाएर, दैनिक जीवनका घट्नाक्रमहरूबाट भागेर प्राप्त हुने कुरा बताइएको छ। तथाकथित मोक्ष प्राप्त गरेका व्यक्तिहरूले अनुभव बाँडेर संसारलाई बचाँउनको लागि परिवर्तन ल्याउने चेष्टा गरिरहेका छन् तर त्यस्ता अनुभवहरूले मानिसहरूलाई मनोगत धारणामा आधारित यान्त्रिक प्रक्रियाको उदय गराएर दलदल जमिनमा जकडिन बाध्य गराएको देखिन्छ। संसारमा कुनै पनि अनुभव बाँड्नु पर्ने आवश्यकता नै छैन भन्ने कुराको बोधको स्पष्टतालाई देखाउनु आवश्यक छ। वास्तवमा भन्ने हो भने जति पनि प्राप्त गनुपर्ने कुराहरू छन् ती सबै संस्कृति र परम्पराले अगाडि सारिदिएको छ। ती सम्पूर्ण कुराहरूलाई हटाउने वित्तिकै मस्तिष्कमा त्यस्तो कुनै कुरा अनुभव गरि बाँड्नुपर्ने वा कुनै आमूल परिवर्तन गर्ने भन्ने कुराको अस्तित्व नै रहँदैन तर पनि मानिसले संस्कृति र परम्पराले दिएको संस्कारलाई सहजै विष्फोट गराउन सक्ने साहस मानिसमा निहित भएको पाइँदैन। मानिसहरूले युगौंदेखि चलिआएको र पछ्याउँदै आएको परम्परा र संस्कृतिभित्र पक्कै पनि रहस्यमय कुरा हुनुपर्दछ, अन्यथा यत्तिका समयसम्म यति धेरै मानिसहरूले किन मान्दै आएका छन् त ? भनी पिछ्लग्गु र अन्धभक्त बन्ने प्रश्न गरी मस्तिष्कलाई शान्त बनाउने कोसिस गरेको पाईन्छ। संसारलाई बचाउन समयसमयमा देवताहरूले अवतार लिएर संसारलाई उद्दार गरेजस्तै वर्तमान आणविक शक्तिको भूत सवार भएको संसारलाई पनि कुनै अलौलिक व्यक्ति आएर उद्दार गर्ने छन् भन्ने आशमा हुर्कन्छौं र आसैमा मर्न पनि तयार हुने परम्परालाई मानिसले साथ दिएको पाइन्छ। जन सेवाको नाउँमा विद्रोह र क्रान्तिको विगुल फुकेर विभिन्न तरिकाले मानवले नै मानवलाई मार्ने कलामा निपूर्णता प्राप्त गरी प्रकृतिमाथि खेलवाड गर्न पुगेको कुरा स्पष्ट छ। चेला वा कार्यकर्ता र व्यक्ति हत्याको संख्याले कुनै पनि गुरु वा वाद र सिद्धान्तको सत्यतालाई कसी गर्ने कामले शक्ति र सत्ता लालायित पाखण्डीहरूले लजास्पद तरिकाले मानवलाई प्रयोग

गरिराखेको पाइन्छ। कुनै पनि व्यक्तिले आएर म मुक्ति प्राप्त गरेको व्यक्ति हुँ वा मेरो पछाडि धेरै पिछलग्गुको जमात छ भनी शक्तिको प्रदर्शन गरेर वैचारिक सिद्धान्त सही छ भनेर भन्नु स्वयम् आफैंमा हास्यास्पद कुरा बन्न जान्छ।

वास्तवमा मानिस कम्प्युटरजस्तै यस्तो एउटा मेसिन हो जसभित्र जे जति धार्मिक,सामाजिक,राजनैतिक,आर्थिक ज्ञान र अनुभव संग्रह गरिएको हुन्छ,त्यही ज्ञान र अनुभवबाट नै कुनै पनि प्रश्नको प्रत्युत्तर आउने गर्दछ। मानिसका सम्पूर्ण विचार,धारणा र अनुभवहरू सबै संस्कृतिका उपजहरू हुन्। **मानिसले त्यही कुरालाई विश्वास गर्छ,ध्यान दिन्छ र मर्न पनि तयार हुन्छ जुन मान्यता र विश्वासको वातावरणमा उसलाई हुर्काइन्छ र विकसित गराइन्छ।** उसको लागि त्यही वातावरणभित्रको मान्यता र विश्वास नै सत्य भएको ठान्दछ तर उसलाई त्यो विश्वास र मान्यता केवल पूर्वाग्रहयुक्त शैक्षिक,सांस्कृतिक र राजनैतिक धरातलबाट निस्केको परिणाम हो भन्ने कुराको बोध ऊ स्वयम् आफूले गर्नु अति आवश्यक देखिएको छ। वास्तवमा विचार वा ज्ञानले नै स्वतन्त्रता प्रदान गर्दछ भनी ज्ञानलाई नै पूजागर्ने परिपाटी युगौंदेखि चलिआएको छ तर यथार्थ ठिक यसको उल्टो छ। यही विचार वा ज्ञानले नै मानिसलाई यथार्थताको धरातल स्पर्श गर्नबाट बञ्चित गराइराखेको परिणामस्वरूप कुनै पनि व्यक्तिको मृत्युलाई विभिन्न किसिमका व्याख्या र विश्लेषणद्वारा सहिद र आतङ्ककारीको बिल्ला लगाई मृतकको लाशमा झण्डा ओडाउनमा व्यस्त भएको पाइन्छ तर मृत्यु कदापी धारणा,व्याख्या र विश्लेषण बन्न सक्दैन। वास्तवमा मृत्यु हुनुपर्ने त विचारको हो। **जीवनभन्दा बाहिरका भौतिक कार्यहरूको संगठन र उद्देश्य प्राप्तिमा विचारको आवश्यकता र महत्व रहन्छ तर विचारले जीवनका मनोगत समस्याहरू समाधान गर्नमा जे भूमिका खेलेको छ त्यसले केवल विध्वंस र हिंसा निम्त्याएको सर्वविदीतै छ।** मानिसहरूले विचारबिना कुनै कार्य गर्न सम्भव छैन। त्यसैले जे जति ज्ञान छ त्यो बाहेक अन्य तरिकाले काम गर्ने भन्ने कुनै कुरा नै छैन भनी मानिसले विचारलाई नै विश्वास गर्ने गरेको पाइन्छ तर यसरी विचारबाट उत्पन्न कुनै पनि कार्य स्वयम्ले आफ्नै कार्यलाई नै संरक्षण गर्ने काम पनि विचारको नै हो भनी हेर्नु अति आवश्यक छ। जति बढी अनुभव प्राप्त गरिन्छ त्यति नै बढी समस्या समाधान गर्न सकिन्छ भन्नु नै विचार अर्थात् ज्ञानलाई नै झन् बलियो बनाउने काम गर्नु हो। त्यसैले जति बढी रिस, इर्ष्या,लोभ र हिंसालाई समाधान गर्न वैचारिक पहल गरिन्छ त्यति नै बढी झन् ती कुराहरूले सजीवता प्राप्त गर्दछन्। त्यसैले मानिसले वास्तविक रूपमा लोभ, इर्ष्या, रिस





आदिसँग प्रत्यक्ष सामना गरिरहेको देखिँदैन। बरु केवल तिनीहरूलाई प्रयोग गर्नमा रुचि देखाएको पाइन्छ। लोभसँग प्रत्यक्ष व्यवहार नगरी लोभबाट **कसरी** मुक्त हुन सकिन्छ भन्ने धारणासँग व्यवहार गरिरहेको पाइन्छ। जे कुराले शरीरभित्र सजिवता पाइरहेको छ त्योसँग मानिसले व्यवहार गर्न सकेको छैन।

मानिसले प्रयोग गर्ने साधन भनेको विचार हो र विचार पर्दाथ भएकोले विचारले समाधान गर्न खोज्ने कुराको मूल्य र परिणाम पनि बस्तुगत नै हुन्छ। बाँच्ने नाममा मानिसको विचारले जुन प्रगति गरेको छ त्यही प्रगतिशील साधनले जीवनका सजीव समस्याहरूलाई समाधान गर्ने विभिन्न द्वन्दात्मक भौतिकवादी प्रयास व्यर्थ सावित भएको कारण नै यो हो कि जीवनका प्रत्येक समस्या प्रत्येक पल फरक फरक रूपमा प्रस्तुत भइरहेका हुन्छन्। मानिसहरूले प्राप्त गरेको यान्त्रिक ज्ञान भावी पिंढीमाथि थुपार्ने प्रयास गरिरहेको कारणले गर्दा भावी पिंढीले समस्यासँग प्रत्यक्ष सामना गर्ने उनीहरूको सम्भावनालाई विध्वंस गरिरहेको छ। विचारले समयभन्दा बाहिर घट्ने कुनै पनि कुराको सम्भावनालाई हेर्नै सक्दैन।

इन्द्रियानुभूतिमाथि वैचारिक मूल्यांकनले हस्तक्षेप गरी पीडा र आनन्दको विभाजन ल्याउनु दुःखको सुरुवात हो। कुनै पनि इन्द्रियानुभूतिको आफ्नै प्राकृतिक समय हुन्छ।

विचार स्वयम्ले आफ्नो अस्तित्वलाई निरन्तरता दिन कुनै पनि हालतमा कुनै पनि काम गर्न तयार भइरहेको देखिन्छ। वास्तवमा आँखाले हेर्न नपाउँदै विचारले हेरिहाल्दछ र इन्द्रीयानुभूतिभन्दा पनि वैचारिक अनुभूतिले ठाँउ लिन पुग्दछ। सम्झना र अनुभूतिबीच जहिले पनि दुरी हुन्छ अर्थात् सम्झना ध्वनिको गतिजस्तै ढिलो हुन्छ जबकि इन्द्रियानुभूति प्रकाशको गति जस्तै छिटो हुन्छ। तर हामीले केही कारणबश सम्झनालाई पृष्ठभूमिमा राखेर प्रकृति र शरीरमा घट्ने घट्नाहरूलाई स्वभावःत हेर्ने क्षमतालाई गुमाइसकेको जस्तो देखिएकोले इन्द्रियानुभूतिमाथि वैचारिक हस्तक्षेपले अति शिघ्र ठाउँ लिई मूल्याङ्कन गरिरहेको पाइन्छ। यही मूल्याङ्कन नै पहिचान अर्थात् नामाङ्कन हो। शारीरिक आँखा स्वयम्ले हेराइको अनुभूतिलाई मस्तिष्कमा रहेको ज्ञानबाहेक अन्य कुनै तरिकाले अनुवाद वा पहिचान गर्ने आधार नै छैन। मानिसले विचारविहीन अवस्था वा प्रयासरहित अवस्थामा आउनुपर्दछ भनेर भन्नु अत्यन्त भ्रमात्मक र हास्यास्पद छ। **बिचारविहीन अवस्थामा आउनुपर्दछ भन्नुको अर्थ स्वयम् आफैंमा एउटा बिचार हुने र प्रयासविहीन अवस्थामा आउनुपर्छ भन्नुको अर्थ पनि आफैंमा**

एउटा प्रयास सावित हुने भएकोले यस्ता कुराहरू गरेर मानवलाई गुमराह गराउने काम धार्मिक गुरुहरूबाट भइरहेको पाइन्छ। शब्दबिना कुनै पनि चिजलाई हेर्न सकिँदैन र त्यही शब्द नै ज्ञान हो र त्यो ज्ञानबिना कुनै पनि अनुभवलाई मानिसले पीडा र मोजमस्ती वा खुशी र बेखुशीमा विभाजन गर्न सक्दैन। जहाँसम्म इन्द्रियानुभूतिहरूको कुरा छ तिनीहरूले के गरिरहेका छन् भन्ने कुराको अभिव्यक्त गर्ने विचार त्यहाँ हुँदैन। मानिसले भन्ने गरेको कुनै पनि स्व-उत्पादित कार्य छैन। बच्चाहरूलाई बुझ्नको लागि शब्दकै, भाषाकै जरुरत पर्दछ भन्ने जरुरत छैन। बच्चाहरूको शरीरले विभिन्न तरिकाले खुशी र आनन्दको अभिव्यक्ति साङ्केतिकरूपमा दिइराखेका हुन्छन् तर मानिसहरूले जीवनको त्यो सहज सरल अभिव्यक्ति बुझ्नको लागि शब्द र भाषाको प्रयोग गरेर सरल जीवनलाई बुझ्न झन् जटिल बनाइदिएको पाइन्छ किनभने मानिसले ज्ञान अर्थात् शब्दलाई नै शक्तिको साधनको रूपमा प्रयोग गरिराखेका छन्। मानिसले शक्ति भन्नु नै ज्ञान हो भनी मैले जानेको छु र तपाईंले जान्नु भएको छैन भनि शक्तिको विध्वंश खेल सुरूवात गरेको पाइन्छ यद्यपि भौतिक कार्य सम्पादन गर्नको लागि विचारलाई प्रयोगमा ल्याउन सकिन्छ तर वर्तमान समयमा धर्म, सेवा, सत्तामोहको नाउँमा भएका हत्या, हिंसा र युद्ध पनि त्यही वैचारिक प्रक्रियाको परिणाम होइन र ? त्यसैले **अज्ञानता भनेको विचारको विध्वंसकारी खेलको अनभिज्ञता हो।** आफूले आफूलाई हेर्न नसक्नु नै अज्ञानता हो। कसैलाई मूर्ख वा इर्ष्यालु छ भन्नुको अर्थ केवल ऊ जे छ त्यसलाई मात्र शब्दहरूद्वारा औल्याइएको मात्र हुन्छ तर उसको मूल्याङ्कन गरिएको भने हुँदैन। दर्शनले केवल वैचारिक साधनलाई तिखो बनाउनेबाहेक अरू केही मद्दत गर्न सक्दैन। दर्शनले कुनै पनि तरिकाले जीवनलाई बुझ्न मद्दत गर्न सक्दैन। **मानिससँग एउटै साधन विचारभन्दा बाहेक अरू दोस्रो कुनै साधन नभएकोले जति पनि सहज बोध, स्व-बोध भन्ने कुरा छन् ती सबै वैचारिक साधनका उपजहरू नै हुन्। वास्तवमा त्यहाँ बुझ्नुपर्ने केही पनि छैन भन्ने कुराको बोध हुने वित्तिकै त्यहाँ कुनै पनि कुराहरूबाट स्वतन्त्र हुने भन्ने माग त्यहाँ रहँदैरहन्न। तर यो बोध वस्तुहरूको अनुभव क्षेत्रको भित्रमा नपर्ने भएकोले यो कसरी घट्न सक्छ भन्ने कुराको बाँडफाँड गर्न असम्भव छ।**

मानिसहरू जहाँसुकैका हुन्, उनीहरूले खोजेको कुरा भनेको दुःख बिनाको मोक्ष, मुक्ति वा आनन्द हो तर एउटाको प्राप्ति अर्कोबिना सम्भव छैन। संगीत, सुन्दरता भन्ने कुराहरू कान र आँखा स्वयम्ले बनाउने कुरा नभइ विचारले उत्पन्न गर्ने कुरा





हुन्। कुनै पनि कुराको प्रत्युत्तर नभई प्रतिक्रिया दिनेबित्तिकै समस्या सिर्जना हुन थाल्दछ। शरीरले आफ्नो सुरक्षा गर्न आफैं जान्दछ र त्यो सुरक्षाको प्रयोग भने अर्कोपटक विचारको सहायताले गर्न सक्दछ। चेलाहरूको अस्तित्वले नै गुरुहरूको अस्तित्व उदय गराउँदछ। **वास्तवमा धार्मिक गुरुहरूले हामीलाई उल्झन र दिग्भ्रमित गराउन सक्दैनन् बरु हामीहरू नै अरूहरूद्वारा भ्रम र उल्झनमा पर्न चाहन्छौं।** अझ भन्ने हो भने हामी आफैंले आफैंलाई मूर्ख बनाइरहेका छौं। यस संसारमा कुनै एक अपराधीले अपराध गर्ने काम छोड्न सफल भएमा त्यसले अरू दुई वा त्योभन्दा बढी अपराधीहरू सिर्जना गरेको र गराएको पाइन्छ। प्राकृतिक अवस्थामा आउनको लागि न त कुनै विधिको जरुरत छ न त कुनै विधि नै छ। जबसम्म केवल राम्रो गर्छु भन्ने चाहनाले अग्रसर हुन पुगिन्छ तब जहिले पनि नराम्रो गरिन्छ किनभने राम्रो गर्ने चाहना एउटा धारणा बन्न पुग्छ र उक्त धारणा जहिले पनि भविष्यसँग जोडिएको हुन्छ। भावी प्राप्ति नभएसम्म जे गर्दछ त्यसले नराम्रोलाई आत्मसाथ गरिरहेको हुन्छ,-अन्यथा वर्तमानमा नै राम्रो भन्ने काम गरिहाल्न सक्दथ्यो भन्ने अर्थ स्पष्ट हुन्छ।

**परिवर्तनको चाहना गरेर भएको परिवर्तनले जहिले पनि अरूहरूलाई परिवर्तन ल्याउनको लागि पहल गर्दछ तर वास्तवमा परिवर्तन गर्नुपर्ने कुनै पनि कुरा नै छैन।** जे जति परिवर्तन गर्नुपर्ने कुरा छ भनिन्छ त्यो सबै तथाकथित बौद्धिक व्यक्तिहरू वा मुक्तिप्राप्त व्यक्तिहरूले गरेको उत्पादीत बस्तु हो। धनी र गरिबहरूको पिडामा फरक देख्नु नै वर्तमान संस्कृतिले पारेको प्रभावको परिणाम हो तर वास्तवमा त्यहाँ केवल सबैको लागि हुने साझा पीडा छ। हाम्रो समस्याको जननी नै हामी स्वयम् हौं भन्ने कुराको बोध गर्न असमर्थ र अशक्त छौं किनभने संस्कृति र वरपरको वातावरणद्वारा निर्मित बहाना र दोषारोपणका खेल खेल्ने बानीले जरो गाडेको छ। हाम्रो समस्या प्रकृतिले सिर्जना गरेको होइन। जे कुरा प्रकृति प्रदत्त सबैको साझा हो र हुनुपर्दछ त्यसलाई हामीहरू बीचमा नै विवादोन्मुख र द्वन्द सिर्जना गर्ने तरिकाले बाँड्न खोजिएको पाइन्छ र अर्को तर्फ द्वन्द समाधान गर्नको लागि भनेर सहयोग मागी भिखारी पनि बनेको हाम्रो सामु स्पष्ट छ। एकातर्फ हत्या हिंसा र युद्धको अपरिहार्यतालाई पनि प्रमाणित गरिन्छ भने अर्को तर्फ त्यही युद्धको परिणामद्वारा पीडित व्यक्तिहरूलाई गास बास र कपासको अनुदान-सहयोगको अपिल पनि गर्दछौं जुन मानव जीवनको अति लज्जास्पद कार्य हो।



## सम्वादको आरम्भ गर्ने - प्रश्न कि उत्तर ?

यदि सम्वाद अन्तर्गत जबसम्म अर्काको विचार, धारणा, वादमाथि प्रश्न गरिन्छ तबसम्म वास्तवमा सम्वाद प्रारम्भ हुनै सक्दैन। आफूबाट अझसम्म ननिस्किएको प्रश्नको उदयले सम्वादलाई सहज र प्रष्फुटित गराउँदै अन्त्यमा वास्तवमा प्रश्न स्वयम् आफैंमा निरर्थक सावित गराउनु नै सम्वादले खेल्ने र खेलाउन सक्ने एक मात्र भूमिका हो। अरुहरूको कुरा काट्नु र अरूहरूको कार्यप्रति प्रश्न चिन्ह ठड्याउनु अति सजिलो कुरा हो। **जीवनको गतिमा विचारले समानान्तर अस्तित्वको अर्को गति खडा गर्नाको कारणले गर्दा सम्वाद गर्नुपरेको हो।** यदि प्राकृतिक रूपले सम्वादले गति लिन नसकेको खण्डमा त्यसले वादविवादको रूप लिएर झगडाको बीउ रोप्न पुग्दछ। हामीहरू प्रश्न गर्नको लागि लालायित छौं र प्रश्नस्वयम् अन्त्यमा आउने गरी प्रश्नको उत्तर खोज्न डराउँछौं। अनुभव गर्न नमिल्ने वा नसकिने कुरालाई अनुभव गर्न खोज्नु नै वास्तविक समस्या हो। 'नजिकको तीर्थ हेलाँ' भनेजस्तै वर्तमान मानव आफूसँग भएका उत्तरहरूलाई हेर्न छाडेर अन्य व्यक्तिहरूसँग प्रश्न सोधी उत्तरको अपेक्षा गर्न अति आतुर देखिन्छन्। प्रत्येक व्यक्ति स्वयम्सँग उत्तरहरू भए पनि उक्त उत्तरहरू ठीक प्रमाणित गर्न, अन्य व्यक्तिहरूको समर्थन र निश्चितता प्राप्त गर्न वा प्रश्नमाथि प्रकाश पारिदिन अन्य मानिसहरूबाट लालायित भइरहेको पाइन्छ। त्यसैले सम्वादको उद्देश्य भने कै स्वयम्ले मौलिक प्रश्न उठाइ उक्त प्रश्नको उत्तर स्वयम्भित्र हुन सक्ने कुरालाई दर्शाउनु बाहेक अरू केही हुन सक्दैन। कुनै पनि व्यक्तिले अन्य व्यक्तिबाट केही चाहना राख्नु नै दुःखको कारण हो। मस्तिष्क कारण र असरको चक्रमा बास गरिरहेको हुनाले प्रत्येक कुराको कारण पत्ता लगाउन खोज्ने हामीलाई बानी परेको छ। सम्पूर्ण साधना स्वार्थकेन्द्रित क्रिया हो र मानवले प्रयोग गर्ने गरेको साधन कारण र असरको क्षेत्रभित्रको उपज हो जसले कारणविहीन घटनाको दर्शन न त कहिल्यै गर्न नै सक्छ न त कसैलाई गराउन नै सक्छ। यो त कुनै पोखरी वा तालमा प्वाल परेको डुङ्गामा बसेर आनन्द लिन खोज्नु जत्तिकै व्यर्थ छ।

कुनै पनि मानवीय समस्यालाई नयाँ शब्दावली र ढाँचामा राखेर सम्बोधन गरी कुनै नौलो तरिकको अनुभूति दिलाउने चेष्टा गर्नुले मानव जीवनका समस्याहरूलाई कुनै पनि हालतमा समाधान गर्न सक्दैन। **जबसम्म मानिसहरूलाई आर्थिक स्थायित्व अन्तर्गत कम्तीमा पनि गास, बास र कपासको सर्वसुलभता प्राकृतिक तरिकाले हुँदैन तबसम्म यहाँ कुनै पनि अवतारले केही गर्न सक्दैन।** वास्तवमा कुनै पनि





गास, बास र कपासको आधारभूत आवश्यकताको परिपूर्तिको लागि कोही पनि अशिक्षित वा निर्दोष गरिबलाई ललाइफकाई वा डरधम्की को आडमा कुनै पनि पार्टीमा आबद्ध हुनै पर्ने वा कुनै धार्मिक तन्त्र मन्त्र र यन्त्र चलाउनै पर्ने बनाउने प्राणी को हो ? यहाँ कुनै पनि व्यक्तिलाई निष्पक्ष भएर स्वतन्त्रपूर्वक कुनै पनि कार्य गर्न नदिने असहज वातावरण निर्माण गर्न प्रत्येक धार्मिक र राजनैतिक संघ-संगठनहरू आ-आफ्नै तरिकाले निपूर्ण मानिएका देखिन्छन्। मानव जीवनका समस्याहरू कुनै पनि वाद र प्रणालीहरूद्वारा समाधान गर्न नसकेको कुरा विभिन्न रूपले क्रमश निरन्तर रूपमा इतिहासमा क्रमशः घटेका ढुङ्गा, भाला, खुकुरी, बम र आणविक तथा जैविक हतियारमा गरेको लगानी र प्रगतिले वातावरण लगायत मानव संहारको बाटो निर्माण गरिरहेको कुराबाट स्पष्ट भएको छ। कुनै पनि राष्ट्र जतिसुकै धार्मिक सांस्कृतिक रूपले धनी भए तापनि समस्याको समाधानलाई यथावतमात्र नराखी बरु झन् जटिल बनाउदै गइरहेको कुरा स्पष्ट देखिन्छ।

मानिसहरू प्रश्नको सट्टा उत्तरतिर मात्र ध्यान दिएको पाइन्छ। **वास्तवमा प्रश्नको उत्पत्ति पनि त्यही उत्तरबाट नै भइरहेको पाइन्छ।** प्रश्नको अन्त्य भन्नु नै उत्तरको पनि अन्त्य हो। वास्तवमा समाधानबाहेक समस्या भन्ने कुनै कुरा नै छैन तर त्यही समाधानहरू समस्याका रूपमा उदय भइरहेको पाइन्छ। **मानिस वास्तविक उत्तर सुन्न नै चाहँदैन किनभने उत्तरले प्रश्नलाई नै अन्त्य गरिदिन्छ।** त्यसैले एउटा प्रश्नको अन्त्य अरू सम्पूर्ण उत्तरहरूको समापन हो। विभिन्न थरिका उत्तरहरूद्वारा प्रश्नलाई जीवित गर्नु आवश्यक पर्दैन।

'म' को रूपमा संग्रहित ज्ञान र अनुभवहरूको विलय हुनेबित्तिकै शरीर बाँच्दछ कि बाँच्दैन भन्ने कुराको अन्यौलताले गर्दा नै मानिसले मृत्युपछिका प्रश्नहरू उब्जाउने गरेका छन्। सयौं हत्या हिंसाबाट उत्पन्न हजारौं लासहरूमाथि हिंडे तापनि मृत्युको अनुभव आफैंले गर्न सकिदैन। मृत्युलाई ज्ञानको अंश बनाई जान्न खोज्नु मृत्युलाई रहस्यमय बनाउनु हो तर मृत्यु भनेको ज्ञानको अन्त्य हो। मृत्युपछिका प्रश्नहरूको उत्तर पाउन प्रश्न स्वयम् नै जल्नु मर्नुपर्दछ तबमात्र अरूहरूद्वारा प्रतिपादित उत्तर नभई आफ्नै उत्तर आउन सक्दछ किनभने मृत्युपछिका प्रश्नहरू अनुमान, विश्वासबाट उत्पन्न भएका हुन्छन्। जबसम्म म को रूपमा स्थापित संग्रहित ज्ञान र अनुभवले प्रश्न खडागर्ने परिपाटी वा ढाँचा विलय हुँदैन तबसम्म प्रश्नको अस्तित्व स्वतः रहने स्पष्ट हुन जान्छ। मानिसहरूले उत्तर प्राप्तिको लागि आन्तरिक वा बाह्य रूपमा पर्खेर बस्ने परिपाटी सिर्जना गरेका छन्। जब आन्तरिक र बाह्य दुवै क्षेत्रमा पर्खेर हेर्ने कुराको महत्वहीनता

प्रमाणित हुन्छ तब प्रश्नको औचित्यता नै रहँदैन। जब सम्पूर्ण बाहिरी सहायताहरू अर्थहिन सावित हुन पुग्दछन् तब त्यहाँ निस्साहयता,दुर्बलता कुनै पनि हालतमा रहँदैन। जब बाह्य जान्छ तब आन्तरिक उदय हुन्छ भन्नुको अर्थ हो – यी दुई कुरालाई छुट्याउन सकिदैन। वास्तविक समस्या नै समाधान हो। समस्या र समाधान छुट्टाछुट्टै कुराहरू होइनन्। यदि समस्यालाई समाधान गरेमा समस्या समस्या नै रहँदैन। मानिसहरू समस्या भन्दा पनि समाधान तिर बढी चासो लिने भएकोले समाधानले जहिले पनि वर्तमानमा नभई भविष्यमा कार्य गर्ने कुरा गर्दछ। **भोलि समस्या समाधान गर्नु भनेकै वास्तविक समाधान नभई समस्यालाई अस्तित्वमा ल्याइराख्नु हो।** आजसम्मको उत्तर वा समाधानले प्रश्न वा समस्यालाई विभिन्न तरिकाले जटिल बनाउँदै लगेको र यथार्थमा समाधान गर्न नसकेकोले नै प्रश्न गर्नु परेको हो। अहिलेको प्रश्न आजसम्म दिइएका उत्तरहरूको असन्तुष्टि वा असफलताको प्रतीक हो। यहाँ गास, बास, कपास, स्वास्थ, विज्ञान तथा प्रविधिसँग सम्वन्धित प्रश्न बाहेक अन्य मनोगत तथा आदर्शोन्मुख प्रश्नको अस्तित्व नै छैन। वास्तवमा प्रश्न र मृत्यु एउटा र अन्तिम कुरा हुन्। प्रश्न सोध्नु नै शान्त मानसलाई गति प्रदान गर्नु हो। यदि अरूहरूले आजसम्म दिएका उत्तरहरू, समाधानहरू सत्य भएका भए किन मानिसहरू पूनः प्रश्न गरी फेरी अर्को उत्तरको प्रतीक्षामा लागिरहेका छन् त ? यसबाट यो स्पष्ट हुन्छ कि सही उत्तरले प्रश्नलाई विलय गराउँदछ न कि पुनः प्रश्न गर्न अभिप्रेरित गर्दछ। जब प्रश्नले कतै जाने,खोज्ने,विश्वास गर्ने र पत्ता लगाउने बाटो पाउँदैन तब प्रश्नरूपी विचारको विष्फोटन भई सदाको लागि अन्त्य हुन पुग्दछ। यसको अर्थ विचार नै नहुने भन्ने कुरा भने होइन वरु विचारले शासकको वा कर्ताको रूपमा खेल्ने विभाजित भूमिका खेल्न सक्दैन वास्तवमा प्रश्नकर्ता र प्रश्न भनेका एउटै कुरा हुन् किनभने जब प्रश्न नै रहँदैन तब प्रश्नकर्ताको अस्तित्व पनि रहँदैन तर प्रश्नकर्ता सहजै र स्वाभाविक प्रश्नको उत्तरबाट नअघाएको कारणले गर्दा नै प्रश्नकर्ताले उत्तर प्राप्तिभन्दा पनि प्रश्न गर्ने प्रथालाई निरन्तरता दिन खोज्दछ। त्यसैले प्रश्न नै उत्तर हो र उत्तर नै प्रश्न हो भन्ने कुरालाई पुनः प्रश्न गर्नु नै पूर्व प्रश्नको अपर्याप्त उत्तर मानी स्वयम्भित्र गमन गर्नु अति आवश्यक देखिन्छ। प्रश्नको उत्तर अरूहरूबाट सम्भव नहुने भएकोले कुनै विधि वा प्रक्रिया बिना नै प्रश्नको उत्तर स्वयम्ले स्वयम्को लागि ल्याउन सक्नुपर्दछ तर कुनै विधि वा प्रक्रिया अवलम्वन गर्नुले स्वयम् प्रश्नलाई नै ओइल्याइदिन पुग्दछ। त्यसैले प्रश्न स्वयम् आफैंमा आफ्नै तरिकाले प्रचण्ड बन्न पुग्दछ। प्रश्नको उत्तर प्राप्त गर्न अपनाइने परम्परागत





**कसरी** भन्ने शैलीले विधि,विचार वा अन्य व्यक्तिको आधिकारिकता स्थापना गर्ने भएकोले प्रश्न आफैं जल्नुपर्दछ। जबसम्म कुनै पनि प्रश्नभित्र वा बाहिरबाट पर्ख र हेर भन्ने धारणाले ओतप्रोत भएको हुन्छ तबसम्म प्रश्न आफैंमा जल्न सम्भव हुँदैन। **वास्तवमा जीवनमा प्रश्नको ठाउँमा उत्तरहरू मात्र छन्। उत्तर नै जीवन हो** र जीवन र शक्ति एक अर्काका पर्यायवाची शब्दहरू हुन्।



## परिवर्तन – आवश्यक कि अनावश्यक ?

कुनै पनि कुरा प्राप्तिको लागि गरिने त्याग वा दानले स्वार्थ,लोभको अर्थलाई बुझाउँदछ किनभने दिने व्यक्तिले कुनै न कुनै रूपले आफूलाई पहिलेको भन्दा केही बढी उदार, राम्रो वा इज्जत प्राप्त गरेको अनुभूति गर्दछ। वर्तमानप्रति असन्तुष्टि जागरण ल्याउने तत्व नै संस्कृति र संस्कारको परिणाम हो। कसरी जिउने भन्ने प्रश्नले जहिले पनि कुनै तरिका वा विधिको साथसाथै भविष्यमा उक्त विधिलाई व्यवहारमा उतार्न यान्त्रिक रूपमा गर्नुपर्ने नियमित अभ्यासलाई जनाउँदछ। बढी आनन्द प्राप्त गर्न खोज्नु,परिवर्तनको आव्हान गर्नु सबै कृत्रिमताको परिणाम हो। इच्छाविहीन बन्न खोज्ने इच्छा स्वयम् आफैंमा एउटा इच्छा हो र इच्छाले नै इच्छाविहीनताको परिकल्पना गरेको यथार्थतालाई हामी आत्मसाथ गर्न चाहँदैनौ। **इच्छा जीवन रहीरहेसम्म कुनै न कुनै रूपमा चलिरहने प्राकृतिक कुरा हो।** रिस, इच्छा, संभोग सबै शरीरभित्र भएका कुराहरूलाई राख्नुहुँदैन भनी विकसित गरेको धार्मिक-सांस्कृतिक सोचाइले मानिसलाई प्रकृतिको विरुद्धमा उभ्याइदिएको छ। बेश्याभन्दा गुण्डा,गुण्डाभन्दा नेता र नेताभन्दा तथाकथित धार्मिक गुरुहरूलाई बुझ्न अति गाह्रो हुन्छ किनभने तिनीहरूले जे बोल्दछन् र गर्ने वा दिने दावी गर्दछन् त्यो न त तिनीहरूसँग हुन्छ नै न त तिनीहरूले उपलब्ध गराउन नै सक्छन्। तिनीहरू केवल आफ्नो ब्यक्तिगत वा पार्टीगत स्वार्थपूर्ति गर्ने चाहनाले ओतप्रोत भई अरूलाई प्रयोग गर्न खोजिरहेका हुन्छन्। जे कुरा तिनीहरूसँग छैन र तिनीहरूबाट सम्भव हुँदैन त्यही कुरा विभिन्न तरिकाले दिने-दिलाउने आश्वासन दिनु नै उनीहरूको लागि मागी खाने भाँडोको निर्माण गरी जीविकोपार्जन गर्ने माध्यम बनाउनु हो।

मानिसले भाषण र बोलीमा परिवर्तनको अभिव्यक्ति दिएर परिवर्तनको लागि गर्नुपर्ने कार्य व्यावहारिक धरातलमा नगर्ने भएकोले परिवर्तन भन्ने शब्दले जहिले पनि भोलिको स्थान ओगट्न पुगेको पाइन्छ। **चाहनुसारको अप्राप्ति नै दुःख हो।** मस्तिष्कले एउटै समयमा दुईवटा कुराहरूको चाहना (सोच्छु अर्थात् बन्छु र हेर्छु) गर्नाले नै मानव मानसिक रोगबाट ग्रसित छ। हामीभित्र उत्पन्न मानसिक रोगले अरूलाई नभई स्वयम् आफैंलाई नष्ट गरिरहेको छ किनभने विभाजनबाट उत्पन्न हुने हिंसा हामी आफैंभित्र विद्यमान छ।

मानिसको आधारभूत समस्या भनेको नैतिक समस्या हो जसले कुनै पनि कार्य गर्नुअघि र कार्य गरिसकेपछि राम्रो नराम्रोको मूल्यांकन गर्न बाध्य गराएको छ र यो समस्या मानवको मस्तिष्कमा यसरी जकडिएर बसेको छ कि यसको समाधान धार्मिक





रूपले नगरी बरु धर्मले नै निर्माण गरेको नैतिकतामाथि प्रश्न उठाएर त्यसको शल्यक्रिया गर्नुसँग सम्बन्ध राख्दछ। मानिसलाई असल के हो भन्दा पनि **मेरो** लागि असल के हो भन्ने कुराले गति वा उर्जा प्रदान गरिरहेको पाइन्छ। वास्तविक नैतिक मानिसले अरूको नैतिकतामाथि निर्णय गरी नैतिकताको खेल खेल्न सक्दैन किनभने अरूको नैतिकतामाथि औंलो उठाउनेबित्तिकै आफ्नो नैतिकता पतन भई स्वयम् आफैंलाई नै प्रश्न गर्नुपर्ने गम्भीर आवश्यकतालाई अनुभूति गरेको हुन्छ।

**आमूल परिवर्तन प्रगतिशील रूपमा नभई अचानक हुन्छ।** कुनै पनि परिवर्तन उत्प्रेरणाको परिणाम हो भने त्यो संस्कृतिको अंश बन्न जान्छ। अति सूक्ष्म परिवर्तनले चेतनालाई असर पार्दछ। परिवर्तन कारणविहीन हुने र उक्त परिवर्तनपश्चात्को अवस्थाले मौलिकतालाई आफ्नै पृष्ठभूमिमा रहेको ज्ञान माथि निर्भर रहँदै आफ्नै तरिकाले अभिव्यक्त गर्दछ। परिवर्तन प्रत्येक व्यक्तिमा स्वतः घटित हुनु पर्ने कुरालाई प्रकृतिले आफ्नै तरिकाले समय समयमा मानवरूपी फूलहरूलाई सिर्जना गरिराखेको कुराले स्पष्ट पार्दछ। जब हामीसँग भएको एउटा मात्र उपलब्ध साधन विचारले कुनै पनि हालतमा समस्या समाधान गर्न सक्दैन तब विचारको गति मन्द हुन गई आफ्नो प्राकृतिक स्थान ग्रहण गर्न पुगी विचार कहिल्यै पनि बोझ बन्दैन। जे घट्नु छ त्यो कि अहिले नै घट्छ कि घट्दै घट्दैन। वास्तवमा परिवर्तन गर्नुपर्ने कुनै कुरा नभएकोले नै कुनै विधि र प्रणालीको आवश्यकता नदेखिएको हो। हामीले संसारलाई आफ्नो तरिकाले परिवर्तन गर्न खोज्दछौं तर वास्तवमा मानवभित्र परिवर्तन गर्नुपर्ने कुनै कुरा नै छैन किनभने मानव लगायत प्रकृति स्वयम् आफैं परिवर्तन भइरहेको हुन्छ। हामीले प्रयासबिना केही पनि सम्भव हुँदैन भन्ने सोच वा धारणाले ग्रसित भएकोले यस्तो सजिलो कुरालाई पनि बुझ्न नसक्ने अवस्थामा छौं। वास्तवमा समस्या वा पाप भन्नु स्वयम् आफैंसँग अनादिकालबाट भइरहेका समाधानका उत्तरहरूको अनभिज्ञता हो।



## सामाजिक वातावरण - सुरक्षित कि असुरक्षित ?

कुनै पनि समाजले धम्की सहन गर्न सक्दैन । समाजले आफ्नो मूल्यमान्यताको अस्तित्वलाई कायम राख्न चाहन्छ तर यसलाई परिवर्तन गर्न खोजेमा त्यो प्रयास हिंसामा गएर अन्त्य हुन्छ । प्रजातन्त्र भनेको धनी र सत्ताधारीले मनपरी अपराध गर्नेहरूको राज हो । धनीले गरीबलाई लुट्दछ भने राज्यले तथाकथित शान्ति र सेवाको नाउँमा सबैलाई लुटेको छ । राज्य धनीको आडमा बाँच्दछ तसर्थ धनीले नै नीतिनियमको जाँच गर्दछ । धनीले आफ्नो अस्तित्वलाई खतरामा ल्याउने नियम कदापि बनाउन चाहँदैन । एकातिर पुलिसको आवश्यकता देखाएर अर्कोतर्फ आणविक शस्त्रअस्त्र निर्मूलताको कुरा गर्नु असम्भव छ । पुलिसको चरम रूप नै आणविक र जैविक अस्त्र हुन् । मानव जन्म त अद्वितीय र अनुपम छ र मानव सबैभन्दा उत्कृष्ट प्राणी हो, यस्तो जन्म लिन देवताले पनि तपस्या गर्नुपर्छ भनी बनाएको धार्मिक उत्कृष्टताले मानवलाई मानवसँग युद्ध गर्नुपर्ने अहंकार उत्पन्न गराएको छ । अन्य प्राणीभन्दा उत्कृष्ट प्राणीको नाउँमा अति निर्लज्ज र कमजोर खेल खेलीराखेको छ - मानव ।

जीवनको प्रादुर्भाव कुनै व्यक्ति वा अदृश्य कुराले इच्छा गरेर भएको होइन । यो त अजैविक तत्वहरूबीच हुन गएको अचानक सुमधुर मिलन प्रक्रियाको प्राकृतिक परिणाम हो । प्रकृतिमा जो बलियो छ त्यो बाँच्दछ भन्ने भनाइले मानवलाई मानवकै विरुद्धमा उभ्याएर धर्म र पार्टीको वैचारिक शक्तिको होडबाजीको खेलमा मानव जकडिंदै पर्यावरणलाई असन्तुलित बनाएको छ । **मानवले विकसीत वैचारिक मूल्यमान्यता र विश्वासले विज्ञान र प्रविधिमा उल्लेखनीय प्रगति गरेको भए तापनि प्रकृतिभन्दा मानव प्राणीको अस्तित्व खतरामा परेको कुरा स्पष्ट भइसकेको छ ।** मानिसले स्वयम् आफूलाई विश्व बन्धुत्व, भातृत्व र जनसेवाका आदर्शहरू आविष्कार गरी आफैंलाई धोका दिईराखेका छन् । समाजको कारणले व्यक्तिको मौलिकता ओझेलमा परेको छ । जबसम्म पारस्पारिक फाइदा र कृतज्ञताको कुरा गरिन्छ तबसम्म सम्बन्ध स्थापना हुन सक्दैन । कुनै न कुनै रूपले अर्थात् मानसिक, सामाजिक, धार्मिक वा राष्ट्रियताको नाउँमा हिंसा नभएको ठाउँ नै छैन । वास्तवमा सबैलाई एकतामा बाध्न करुणा वा प्रेमको नाराले सम्भव नभई, यदि भएमा, अस्तित्वको अन्त्य हुने डरले सम्भव हुन सक्ला ।

वातावरणमाथि विजय पाउनुपर्छ भन्ने विकसित अभिलाषा र धारणाको कारणले गर्दा विलयको खतरामा परिरहेको मानव अस्तित्वलाई गम्भीर भएर सामना गर्न मानव





बाहिरहेको छैन । मानव आफूलाई आफ्नै जातिको विरुद्धमा उभ्याएर मृत्युको खेलको रचयिता बनेको छ र अब त कुनै पनि प्राणी प्रकृतिको छनौटमा मात्र नपरी मानवको विचार र धारणाको छनौटमा पनि योग्य हुनुपर्ने कुरा प्रमुख बनेको छ । अर्को शब्दमा युद्ध नै मानव जातिहरूमा जीवन छनौटको मुख्य तत्व बन्न पुगेको छ तर जनावरको राज्यमा भने यस्तो जीवन-छनौटको नियम धेरै नै कम लागू हुन्छ । जातहरू र वर्गहरूबीचको संघर्षले गर्दा सायद कतिपय जातिहरू अहिले अस्तित्वमा रहेका छैनन् र अब अस्तित्वमा रहेका जातहरू र वर्गहरू पनि यस्तै वर्ग र जातियताका युद्धहरूले विलय गराउने कुरा स्पष्ट छ । आफ्नो जात र वर्गलाई विस्तार गराउने मूल्य मान्यताले सामूहिक आक्रमण गरी आफ्नो अधिकार स्थापित गर्न पछाडि नपरिरहेको कुरा मानव जातिको इतिहासले स्पष्ट पारिसकेको छ । मानव जातिको विस्तार र विकासको क्रममा वर्ग र जातियतालाई आधारभूत तत्वको रूपमा विकसित गराइरहेको कुरा स्पष्ट छ । मानव व्यवहार प्राकृतिक नभएर सांस्कृतिक प्रभावले परिपूर्ण भएकोले त्यसको प्रभाव जीवन विकासक्रममा परेको पाइन्छ । **मौरी र कमिलाहरूमा पाइने प्राकृत-संगठनात्मक स्वरूपलाई र मानवनिर्मीत संगठनात्मक स्वरूपलाई हेर्दा मानवको संगठन सांस्कृतिक स्वभावको अधिपत्यले गर्दा मौरी र कमिलाको जस्तो संगठनात्मक स्थायित्व प्राप्त गर्न सकिरहेको छैन ।** जुनसुकै ठाउँमा भएपनि मानव स्वभाव र समस्याहरू एउटै छन् । **स्वार्थ भन्ने कुरा व्यक्तिबाट समाज र समाजबाट राष्ट्रमा विस्तारित भएको छ ।** विश्व सम्पदा र स्रोतहरूमाथि एकलौटी राज गरेको राष्ट्लाई एकाधिकार छोड्ने धम्की आउदाँ आफुसँग भएका र आफैंले आविष्कार गरिएका सम्पूर्ण विध्वंसकारी हतियारहरू आफ्नो बर्चश्व कायम राख्न प्रयोग गर्ने गरेको पाइन्छ । यसरी राष्ट्ले पनि व्यक्तिले जस्तै देश-प्रेम,जनसेवा वा भाइबन्धुत्वको नाराबाजीको हतियार प्रयोग गरी आफ्नो एकाधिकार जायज भएको प्रमाणित गर्न खोजेको देखिन्छ । **लाखौं व्यक्तिहरू युद्धमा मारिनु र कयौं व्यक्तिहरूलाई भोक र खानाको निम्ति भन्दा पनि आदर्श र भक्ति-भावनाको निम्ति ज्यान लिने र दिने प्रवृत्तिले हिंसा र युद्धलाई मानव जीवनको एउटा आधारभूत आवश्यकताको रूपमा स्थापित गरेको पाइन्छ ।**

शरीरभित्रका लाखौं कोषहरूले एक आपसमा रहने अन्तरसम्बन्ध प्राकृतिक तरिकाले पहिचान गरी सह-अस्तित्व नै बाँच्ने प्रणाली वा विधि हो भन्ने कुरा सहजै बुझेको पाइन्छ । प्रत्येक कोषले आफु नजिकैको कोषको अन्त्य भएमा म पनि अन्त्य हुनेछु भन्ने सम्बन्धको सह-अस्तित्वको बाँच्ने आधार प्राकृतिक भएको स्पष्ट पारेको

छ। यो बुझ्नको लागि विद्यालय,क्याम्पस वा त्यस्तै मस्तिष्कले निर्माण गरेको कुनै पनि धार्मिक ग्रन्थ पढ्नुपर्ने आवश्यकता छैन। धर्मको विरुद्धमा स्थापित भएको साम्यवादले केवल मुल्य र मान्यताको परम्परागत प्रणालीमा अर्को तथाकथित आदर्श उन्मुख द्वन्दात्मक भौतिकवाद खडा गरी मानव जीवनलाई बाध्यता र डरको भावनाले क्रान्ति ल्याउन नसकी केवल संशोधन, पुर्नमूल्याकंन र कुनै नयाँ वैचारिक व्यवस्थाले प्रतिस्थापन गर्दै आइरहेको पाइन्छ।

कुनै परिवर्तनको कुरा अपेक्षा गरिन्छ भने त्यो परिवर्तन मानसिक नभई जैविक तथा शारीरिक तहबाट आएको हुनुपर्दछ। यहाँ कुनै तरिकाले परिवर्तनको सम्भावना देखिए तापनि राज्य र राजनीतिक पार्टीहरूले परिवर्तनको आवश्यकतालाई दुरूपयोग गर्ने कुरा प्रत्येक कुरालाई राजनीतिकरण गरेर ब्यापार गर्ने कुराले स्पष्ट गरेको पाइन्छ। मानवलाई पश्चिमी सभ्यता,मानव अधिकारको आवाज,स्वतन्त्र बजार,आर्थिक स्वतन्त्रताको अभिव्यक्ति आदिमा अल्झाएर आदर्शोन्मुख काल्पनिक कथामा झुलाएर देखाउन र ल्याउन खोजेको कथित आनन्द र जनसेवाको स्रोत वा मुहान नै गलत छ, झुटो छ। प्रत्येक पार्टी र प्रणालीमा भ्रष्टाचार र स्वार्थव्याप्त रहेको स्वीकार गर्न मानिसलाई गाह्रो भइरहेको छ। **लाखौं अशिक्षित भोको पेटलाई वाक् स्वतन्त्रता र प्रेस स्वतन्त्रताको कुनै अर्थ रहँदैन।** केही राष्ट्रहरूले प्राकृतिक सम्पदा र स्रोतहरूको एकाधिकार शोषणले धनी र गरीबबीचको विषमता वृद्धि गरेको पाइन्छ। तथाकथित मानव संस्कृति प्रकृतिसँग समन्वय गर्ने आधारमा विकसित भएको छैन। वास्तवमा इन्द्रियहरूले गर्ने कार्य हामीलाई लादेको विश्वासबाट भिन्न छ। **ईश्वरको बारेमा सोचेर शक्ति नष्ट गरिराखेका छौं।** वर्तमान समयमा जुन मुल्य र मान्यता समाजमा विकसित भइरहेको छ त्यसलाई तोड्न खोज्ने व्यक्तिलाई अलपत्र र एक्लो पारी सखाप पार्न यो समाज सदा तत्पर रहिरहेको पाइन्छ। जीवनको उद्देश्य, यदि केही छ भने, परिवर्तनशील वातावरणप्रति सामन्जस्यपूर्ण र ग्रहणयोग्य मानव जात बनाउनु हो। हामीले विचारद्वारा जीवन र मानवबीचको सुमधुर मेल सिर्जना गर्नमा असम्भव हुने कुरालाई देख्न, हेर्न सकिरहेका छैनौं।

मानव जीवनको शारीरिक रक्षार्थ कुनै चिन्तन गर्नुपर्ने आवश्यकता पर्दैन किनभने मौलिक अवस्था स्वयम्ले रक्षार्थको मार्गनिर्देशन आवश्यक अवस्थामा स्वभावतः गरिहाल्दछ। जस्तै : सर्प देख्नेबित्तिकै पछाडि हट्ने काम चिन्तन नगरी स्वतः हुन्छ तर प्रत्येक परिस्थितिमा सुरक्षित हुनको लागि मानव मस्तिष्कले सुरक्षाको नाउँमा जुन चिन्तन अगाडि सार्दै आएको पाइन्छ त्यसको कुनै अर्थ नै छैन किनभने प्रत्येक परिस्थिति





आफ्नै तरिकाले भिन्न हुन्छ। यहाँ मानवले सुरक्षाको नाउँमा प्रयोग गरेका असुरक्षित साधनमाथि प्रश्न नउठाएसम्म मानव जीवनले दिने मौलिक सुरक्षाको दर्शन कुनै पनि हालतमा प्राप्त हुन सक्दैन।

कुनै पनि व्यक्ति सामाजिक ढाँचामा आबद्ध नभए तापनि समाजको प्रभावबाट पन्छिन भने सक्दैन। मानिसलाई कुनै न कुनै रूपले समाजका क्रियाकलापले आबद्ध गराउन नसके तापनि असर भने पारिरहेको हुन्छ। कुनै पनि व्यक्ति वा समाजको भावना र विचारहरूलाई आफूले अनुभूति गर्न खोजिन्छ भने हामी त्यसको अंश बन्न पुग्दछौं। हाम्रो आफ्नो भन्ने कुनै विचार र अनुभव नभएकोले हामी समाजबाट टाढा भाग्न सक्दैनौं र समाजको अंश भएर हामी नै समाज हौं भनेर हेर्नुबाहेक अन्य कुनै विकल्प नै छैन। यहाँ कसैले कसैलाई साधारण वा असाधारण भनेर छुट्याउनुपर्ने आवश्यकता नै छैन। असाधारण मानिएको मानिसलाई व्यवहार गर्ने, उपचार गर्ने साधारण मानिस पनि असाधारण बन्न पुगी उसैलाई साधारण बनाउनुपर्ने अवस्थाको सिर्जना मानिसको विचारले निर्माण गरेको पाइन्छ। यहाँ विश्व बन्धुत्व, भातृत्व, प्रेम, शान्तिको नाउँमा भइरहेका कुराहरूले कुनै पनि हालतमा मानवलाई संरक्षण दिई बचाएर राख्न नसकेको प्रमाणित भइसकेको हुनाले अब वर्तमान समयमा मानव अस्तित्वलाई खतरामा पार्ने विभत्स मानव कार्यको प्रत्यक्ष अनुभूतिले मात्र बाँच र बाँच्न देउको पाठ सिकाउन सक्दछ। मनोगत र शारीरिकरूपले आफूले आफूलाई चोट नपारीकन अर्कोलाई मात्र चोट पार्न नसकिने एक आपसको अन्तर्निहित सम्बन्धको प्रगाढ सम्वेदनशीलतालाई स्वयम् व्यक्तिले नै बोध नगरेसम्म यहाँ कुनै अवतार,प्रेमको गीतसंगीत,भाषण र लेखले कसैलाई सुरक्षित राख्न सक्दैन। हामीले अरूलाई ढाट्न सकेतापनि आफूलाई ढाँट्न नसकिने भएकोले गोप्यरूपमा गर्ने विभत्स कार्यले आफूलगायत अरूलाई पनि असर पार्न सक्ने यथार्थतालाई सबैले बुझेर मानव सुरक्षा कुनै एक व्यक्तिसँग मात्र सरोकारको विषय नभई सम्पूर्ण मानव जगत्सँगको सम्बन्धित विषय हो भनि तदनुरूप कार्य गरेमा मात्र सुरक्षा हुन सक्दछ। **राष्ट्रिय र अन्तर्राष्ट्रिय सम्बन्ध र सुरक्षाको कुरालाई व्यक्तिगत सम्बन्धहरूको तहमा ल्याई सुरक्षाको प्रश्न खडा गरी प्रत्येक व्यक्तिले सुरक्षाको अनुभूति गर्न सक्नुपर्दछ।**



## मानवको सम्पत्ति "विचार" - शत्रु कि मित्र ?

विभाजित चेतनालाई कायम राख्नु भनेको शरीरको सुमधुर संमेलको कार्यलाई अस्वीकार गरी विभाजन गर्ने र प्राकृतिक अवस्थाको स्व-अभिव्यक्ति गर्नमा रोक लगाउने विचारको गति हो जसले समय र स्थान सिर्जना गर्दछ। भोलि सिर्जना गर्ने यो प्रत्येक उत्पन्न विचार मर्नैपर्दछ अन्यथा विचारले पुनर्जन्म लिनै सक्दैन र विचारको साथमा हामी पनि मर्नुपर्दछ। विचारले विचारको स्वभावलाई बुझ्न विचारलाई नै प्रयोग गर्ने-गराउनु असम्भव छ तर हाम्रो संस्कृति र सभ्यताले विचारले नै विचारलाई बुझि शून्यतामा आउन सकिने कुरालाई जोड दिइराखेको छ।

कुनै पनि व्यक्तिलाई धार्मिक र सामाजिक संस्कार र शिक्षाले प्रभावीत गराएको हुन्छ र वास्तवमा **असल गुरुले संस्कार र शिक्षाको प्रभावले खेल्ने खेलमाथि मात्र प्रकाश नपारी स्वयम् आफ्नै वाक्यहरूले पनि पार्न सक्ने प्रभावमाथि सचेत भई ती वाणीहरूको औचित्यहीनतालाई प्रष्फुटन गरी स्पष्ट पार्दछ।** कुनै कुराको परिवर्तन गर्नुपर्ने आवश्यकता नभएको हुनाले शिक्षा भन्ने शब्द पनि प्रयोग गर्नुपर्ने आवश्यक छैन किनभने शिक्षा शब्दले कुनै परिवर्तन ल्याउने वा गर्ने अर्थ बोकेको हुन्छ। कुनै पनि व्यक्तिलाई कसैद्वारा बचाउन वा मुक्ति गर्न नसकिने भएकोले जतिसुकै गहिरो र करुणामय बोलीको शिक्षा भए पनि अन्त्यमा त्यो निरर्थक सावित हुन्छ। आधिकारिक रूपमा कुनै पनि यथार्थ दृश्य दर्शन गराउन कसैले पनि कसैलाई चेष्टा गर्ने कुरा होइन। कसैको विचार वा धारणाले यो सामाजिक मूल्य र मान्यताको गतिलाई संशोधन गरी केही राहतको महसुस दिलाउन सके तापनि वास्तविक समस्याको समाधान भने कहिल्यै हुन सक्दैन।

जबसम्म प्रत्येक व्यक्ति स्वयम्भित्र युद्ध वा तनाव चलिरहन्छ तवसम्म त्यो भित्री खेल बाहिर प्रतिबिम्बित भइ नै रहन्छ। वास्तवमा भित्री र बाहिरी खेलको अस्तित्व ल्याउने तत्व विचार हो। केवल सम्झनाको निरन्तर प्रयोगले परिचयको सिर्जना गराउँदछ तर वास्तवमा त्यहाँ विचार भन्ने कुरा नै छैन। ऐनाको जस्तो परावर्तन गर्ने कामवाहेक अरू काम सम्भव छैन। हाम्रा सम्पूर्ण क्रियाहरू वास्तवमा प्रतिक्रियाहरू हुने भएकोले कुनै पनि स्वतन्त्र क्रिया अस्तित्वमा रहेको छैन तर वास्तवमा प्रत्येक क्रिया स्वाधिन र स्वतन्त्र हुन्छ। इच्छा भनेको कुरा हार्मोनभित्र रहने हुनाले सम्पूर्ण नैतिकता र धार्मिकताका नियमहरूको कथा अर्थहिन छ। ब्रम्हचर्य वा संभोगलाई ईश्वरसँग जोडिएकोले संभोगबाट स्वतन्त्र हुनुअगाडि तथाकथित ईश्वर वा भगवान भन्ने कुराबाट स्वतन्त्र हुनुपर्दछ। मायाले भ्रमपूर्ण खेलको अपिल गराउन सक्दछ। कुनै पनि आधार बिना मापन गर्न सकिदैन र जहाँबाट मापन गरिन्छ त्यहाँबाट नै भ्रम सिर्जना हुन्छ। कुनै पनि कुरालाई कसरी लिने भन्ने कुरा नबुझेपछि उक्त कुरा अतार्किक, असम्बद्ध वा विरोधाभास लाग्न थाल्दछ।





प्रत्येक उत्तेजकहरूप्रति प्रत्युत्तर दिनु जीवनको आधारभूत कुरा हो तर प्रत्युत्तरको साथमा प्रतिक्रियाले खेलेको अनावश्यक र अर्थहिन खेलको निरन्तरताले मानिसलाई विचारको दलदल जमिनमा लगेर गाडिदिएको छ। विचारहरू आउँछन् जान्छन्, दोहोरिन्छन् तर त्यसबाट प्रतिपादित कुनै पनि त्यस्तो तथाकथित आनन्द, सत्य, मोक्ष भन्ने कुनै कुरा छैन। कुनै पनि समस्या धेरै समयसम्म रहिरहँदैन किनभने त्यसलाई अर्को कुनै कुराले धकेलिदिने हुनाले मानिसले गर्नुपर्ने केही पनि हुँदैन। त्यहाँ के घटिरहेको छ भन्ने अनुभूति गर्नुभन्दा पहिल्यै नै त्यहाँबाट त्यो समस्याको सजीवता बितिसकेको हुन्छ। अहिले हेर्दा पहिले जे थियो त्यो भन्दा पूर्ण भिन्न दर्शन हुन पुगिसकेको हुन्छ। जब कुनै ठाउँमा बसेर ती विचारहरूलाई जोड्ने वा नियन्त्रण गर्ने गर्दछौं तव मात्र समस्याको रूपमा अगाडि देखा पर्ने भएकोले विचारलाई नियन्त्रण गर्ने प्रयास नै समस्याको जड हो। **शारीरिक कार्य जुन विचारद्वारा हस्तक्षेप गरिएको हुँदैन ले मात्र जीवनको गतिलाई आत्मसाथ गरी परिस्थिति अनुकूल गर्नुपर्ने कार्यको स्वतः प्रतिपादन गर्दछ।** उक्त गतिलाई दिशा निर्देश गर्नु जीवनलाई कैद गर्न खोज्नु हो। यदि हामीले विचारले समस्या समाधान गर्न नसक्ने निस्साहयतालाई बोध गर्नेबित्तिकै समस्याले समाधानको गति समात्न पुगिहाल्दछ। यहाँ स्वतन्त्रता प्राप्त गर्ने कुनै पनि कार्य पूर्ण स्वतन्त्रको छैन। जुन क्षणमा कुनै कुराको अनुभव गर्ने कर्ता अस्तित्वमा आउँदैन त्यही क्षणमा नै त्यस्तो मौलिकताको घटना उदय हुन पुग्दछ। यसको लागि कुनै पनि धार्मिक, सामाजिक वा राजनैतिक वादको बहस जरुरत पर्दैन तर तथाकथित पवित्र मानिएका धार्मिक व्यक्तित्व तथा ज्ञानीहरूले भने यसलाई स्वीकार गर्न चाहँदैनन्।

कर्ताबिना कसैले पनि आफ्नो विचारलाई हेर्न नसकिने भएकोले विभाजित कार्य बिना नै विचारलाई हेर्ने भन्ने कुरा अति चलाखी, धुर्तपूर्ण कार्य बन्न पुग्दछ। एउटा विचारले अर्को विचारलाई हेर्ने भन्ने कुनै दुई विचारहरूको आभास दिलाए तापनि वास्तवमा एउटै विचारले मात्र गति लिइराखेको हुन्छ। भ्रमपूर्ण विभाजनको काम गरी द्वन्द चर्काउन र निर्दयी शासकको रूपमा आफ्नो अस्तित्व कायम गराउन हत्या र हिंसाको खेल खेलाउने विचारको स्वभाव हो। विचार स्वयम् निरंकुश हुन्छ। विचारलाई केवल आफूसँग भएको ज्ञानद्वारा मात्रै अनुभव गर्न सकिन्छ। विचारहरू कहिल्यै पनि स्वःस्फुर्त हुँदैन बरु तिनीहरू बाहिरबाट आउँदछन्। **वास्तवमा मस्तिष्कले विचार सिर्जना गर्ने नभई बरु संग्रह गर्ने र प्रतिक्रिया दिने स्वभावको काम गर्दछ** तर उक्त काम गरेर आफ्नो क्षमताको पूर्ण प्रयोग गर्नबाट वन्चित गराउन सफल भइरहेको छ– हाम्रो सांस्कृतिक परम्परा। चरित्र निर्माण गर्नुपर्दछ भन्ने माग समाजले आफ्नो निरन्तरता कायम राख्नको लागि गरेको हो। चरित्र निर्माण गर्ने आर्दशले मानवभित्रको मौलिकतालाई प्रष्फुटन गर्नमा दबाब सिर्जना

गरेको छ। मानव सबैभन्दा पहिला बाँच्न चाहन्छ र सन्तानोत्पादनमा स्वाभाविक अग्रसर हुन्छ जसको बारेमा प्रश्न गर्नु सूर्य किन चम्कन्छ भन्नुजस्तै हो।

कुनै आधारबिना कुनै भावनाको सञ्चार असम्भव छ। मानिस प्रत्येक पल स्वयम्सँग सञ्चार गरिराखेको हुन्छ र जब स्वयम्ले स्वयम्सँग सञ्चारको कार्य गर्न सक्दैन तब दोस्रो पक्षलाई प्रवेश गराउनको लागि आवश्यक अनुकूलता आफू स्वयम्ले सिर्जना गरी दोस्रो दर्जाको श्रवण गर्नुपर्ने अधिकार आफैंले सिर्जना गर्न पुग्दछ। जबसम्म स्वयम्ले देखिदैन तबसम्म कसरी कुनै दोस्रोले आएर भनेको कुरालाई विश्वास गरी सत्य मान्न सकिन्छ ? **अर्काको तर्क र भावनाद्वारा आफूलाई बुझ्न चेष्टा गर्नु भनेको वास्तवमा आफ्नो अध्ययन अरूको अनुसार गरि आफूलाई दोस्रो दर्जाको मानव घोषणा गर्नु हो।** परिवर्तनको कुरा गरे तापनि वास्तवमा परिवर्तन गर्नुपर्ने बेलामा परिवर्तनबाट पन्छिने काम गर्नु विचारको स्वभाव हो। हातमा पन्जा लगाएर कुनै पनि वस्तुलाई स्पर्श गरेजस्तै मानिसले डर, इर्ष्या, हिंसा, मृत्यु इत्यादिलाई विचारको पन्जाले स्पर्श गर्दै समस्या समाधानको अर्थहीन खेल खेलिराखेको छ।

चाहना गर्नु र सोच्नु दुई फरक कुराहरू होइनन्। बुझ्न खोज्नु नै विचारको गति हो। विचारको पुनरावृत्ति गर्ने कार्यले नै जीवनलाई विरसिलो र झन्झटीलो बनाएको छ। **वास्तवमा मानिसको विचार स्वयम् नै चोर हो तर संस्कृतिले मानिसभित्र विचारको रूपमा पुलिस सिर्जना गरी वास्तविक चोर लाई नसमाति अर्को कुनै बाहिरको चोरलाई समात्नुपर्ने व्यापारिक खेल खेलाइरहेको छ।**

विचारकको अस्तित्व छैन तर मानिसले प्रत्येक विचारलाई अध्ययन अनुसन्धान गर्नको लागि विचारक उत्पन्न गरेको छ। अज्ञात, अदृश्य शक्ति पनि वास्तवमा विचारद्वारा नै सिर्जित संशोधित विचारहरूका अंशहरू हुन्। ईश्वर, आनन्द, मुक्ति, प्रेमजस्ता अस्तित्वमा नरहेका कुराहरूको खोजमा लागेर हिड्ने व्यक्तिले केवल एउटा विचारले अर्को विचारको विरुद्ध दया देखाउने काम गर्ने भएको परिणामस्वरूप संसार र सम्पूर्ण मानव जातिको लागि दुःख सिर्जना गर्न पुग्दछ। जीवनलाई नियन्त्रण गरी सत् मार्गमा चलाउँछु भन्ने प्रयासले नै दोस्रो दर्जाको विचारको गति सिर्जना गरेको छ जुन पूर्ण रूपले अप्राकृतिक कुरा हो। **दोस्रो दर्जाको मानिससँग हुने सम्पत्ति भनेकै मस्तिष्कमा कुनै विचार वा वादको बास गराई त्यसको लागि जीवन समर्पण गर्नु हो।** विचार मानिसको मित्र हुनुपर्ने ठाउँमा शत्रुको भुमिका अर्थात् विभाजनको खेल खेलिरहेको स्पष्ट छ। म भन्ने प्राणीलाई हेर्ने प्राणी स्वयम् नै म हो भन्ने चिन्तन सकारात्मक वा नकारात्मक मध्ये एउटा हुन्छ र जब सकारात्मक प्रयास र चिन्तनले असफल परिणाम ल्याउँदछ तब हामी नकारात्मक चिन्तन अगाडि सारेर हिडे तापनि यसरी हिंड्ने सकारात्मक र नकारात्मक, दुवैको उद्देश्य एउटै हुने गर्दछ।





## जीवनको महाप्रलय – जल्छ मात्र कि जलाउँछ पनि ?

मानव दुःखमा बाँचीरहेको छ र दुःखी भएर नै मर्ने गरेको छ। जे हामीले अनुभव र सिर्जना गरेका छौं, त्यही नै संसार हो। हामी त्यही नै हौं जे हामी देख्छौं, सुन्छौं, चिन्तन गर्छौं र अनुभव गर्छौं। हामी जे हौं त्योभन्दा अरू केही बन्न खोज्नु अप्राकृतिक कुरा हो। संसारलाई स्वर्ग बनाउने ठेक्का लिन पुगेका तथाकथित नेता, धर्मगुरु र समाजसेवीहरूले नै वास्तवमा यो पृथ्वीलाई नरक बनाउन पुगेका छन् जुन जन-सेवाको नाउँमा भइरहेको हत्या, हिंसा र धार्मिकताको नाउँमा चलेको प्रतिस्पर्धात्मक दान र पुण्यको खेलले स्पष्ट पारिरहेको छ। हामी स्वयम्भित्रको अन्तर्द्वन्द्वले नै बाहिरी द्वन्दको दृश्यलाई प्रतिविम्बित गराइरहेको छ। स्वयम् आफुभित्र नहेरी अरूलाई सेवा वा मुक्ति दिने प्रतिज्ञाले नै समस्यालाई झन् विकराल बनाउँदै लगेको छ। कुनै आर्थिक समानता, समाधि, सत्य वा स्वर्ग प्राप्ति केवल विचारले निरूपण गरेको काल्पनिक खेल हो। विचारले इन्द्रियहरूको कार्यसञ्चालनमा हस्तक्षेप गरी फाइदा प्राप्त गर्ने उद्देश्य राखेको हुन्छ।

जीवनलाई कुनै पनि वैचारिक ढाँचा वा रूपरेखामा कैद गर्नु भनेको स्वयम् आफू अकालमा मर्नको लागि पासो थाप्नु हो। कुनै पनि भावी अनुभवको अपेक्षा गर्नको लागि कुनै न कुनै रूपमा मस्तिष्कले ज्ञानको माग गर्दछ। न त आफू जन्मेको अनुभव व्यक्त गर्न सकिन्छ न त जन्मनुभन्दा पहिलाको अवस्था स्मरण गर्न सकिन्छ। अतः कसैले पनि भविष्यमा समाधि वा भावविहीन अस्तित्वको अनुमान गर्ने कुनै आधार नै छैन।

यो परिस्थिति ठीक वा बेठीक भनि छुट्टाई त्यस अनुसार प्रभावित हुने कार्यले नै नैतिक समस्याको उदय गर्दछ। जीवनको अभिव्यक्ति क्रियाद्वारा हुन्छ र त्यसमाथि गरिने प्रश्नले कर्ताको जन्मगरी विभाजन ल्याई असुरक्षित भावना सिर्जना गर्दछ। वर्तमानको असन्तुष्टि र हिंसाले नै भावी सन्तुष्टि वा शान्तिको स्थापना गरेको हो। **कुनै पनि कुरा अनुभव गर्न सर्वप्रथम त्यसको बारेमा ज्ञान हुनुपर्दछ र ज्ञान जहिले पनि अरूबाट प्राप्त गरिने भएकोले नै वास्तवमा कसैको पनि आफ्नो भन्ने कुनै ज्ञान नै छैन, सबै ज्ञान विगतबाट प्राप्त गरिएको हुन्छ।** इन्द्रियानुभूतिको अनुवाद गर्नु नै म को जन्म हुनु हो। मस्तिष्कमा विचारहरूको बारेमा विचार गरिरहने कुनै अदृश्य शक्ति वा प्राणीको अस्तित्व निर्माण गर्नु भ्रम हो भनेर भन्ने म ले विचारको अन्त्य नगरी बरु विचारहरूको बारेमा विचार गरिरहने चिन्तनले गर्दा नै म ले निरन्तरता पाइरहेको हुन्छ।

देख्नेलाई प्रेम गर्न नसक्नेले नदेख्ने भगवान् वा परमेश्वरलाई प्रेम गरेर निम्त्याएको हिंसा र युद्धबाट धर्मको अस्तित्व अर्थहिन भइसकेको छ। कसैले पनि संसारलाई बचाउनको

लागि ठेक्का लिने र दिने काम गर्न सक्दैन। राजनैतिक नेताहरूले ठेक्का लिएजस्तै तरिकाले कुनै शान्ति वा मुक्तिको चिन्तन स्थापित गर्ने बित्तिकै उक्त सोच वा धारणालाई अन्धभक्त चेला,समर्थक तथा कार्यकर्ताहरूले त्यसलाई वादमा परिणत गरी परम्पराको सुरुवात गर्न पुगी उक्त परम्परामा आबद्ध गराउनको लागि मर्न र मार्न पनि पछि नपर्ने हिंसाको खेल प्रारम्भ गर्ने गरेको पाइन्छ। परिणामस्वरूप अर्को कुनै व्यक्तिको आगमनले उक्त परम्परालाई विष्फोटन गर्नुपर्ने आवश्यकता सिर्जना हुन पुगेको पाइन्छ। त्यसैले सम्पूर्ण कथित धार्मिक तथा राजनैतिक बौद्धिक व्यक्तित्वहरूले मानव जीवनमा हेर्नुपर्ने र गर्नुपर्ने कुरालाई परम्परागत शैलीमा विकास गरी कुनै कुरा प्राप्तिको लागि कुनै मार्ग अवलम्बन गर्नुपर्ने कारण देखाउनु नै मानवको लागि ठूलो घातक सिद्ध हुन पुगेको कुरा स्पष्ट छ। **परम्पराको शुत्रपात गर्नु वर्तमान जीवनलाई महत्वहिन पार्नु हो।**

**आफूले आफूलाई चिन्ने कुनै आधार छ भने त्यो हो – विचार।** यही विचारले नै आफूले आफूलाई हेर्ने र चिन्ने कुराबाट बन्चित गराउँदछ। म को हुँ ? भन्ने प्रश्नमा **म र को** भन्ने कुरा वास्तवमा एउटै कुरा हुन् तर विचारले विभाजन गरि आफ्नो अस्तित्व कायम गर्न र वैचारिक शासनलाई निरन्तरता दिन खोजिरहन्छ। वर्तमानमा भइरहेको कुराभन्दा अर्को कुनै कुरा **म** भित्र हुनुपर्दछ भन्ने मान्यताले विचारलाई गति प्रदान गर्दछ।

शक्तिलाई नष्ट गर्न सकिदैन भन्ने तथ्यले यो कुरा उद्घाटित गर्दछ कि शरीर अमर छ। कुनै न कुनै रूपले एउटा प्राणी अर्को प्राणीमा बाँच्नको लागि भर पर्नु परेको कुरा स्वभाविक छ।

स्वयम्‌को बारेमा भएको ज्ञानले नै स्वयम्‌लाई हेर्दा स्वयम् भन्ने अस्तित्व उत्पन्न हुने हुँदा स्व-ज्ञान भन्ने कुराको कुनै अर्थ नै रहँदैन। यो ज्ञान स्वयम्‌ले स्वयम्‌सँग चलाखीपूर्ण खेल खेलिरहेको हुन्छ। मानिस पृथ्वी ग्रहलगायत अरू ग्रहको पनि गुरु बन्न खोज्ने कुरा धर्मबाट प्रतिपादित कुरा हो। मानवकार्यलाई चलाउने तत्व तर्क नभई शक्ति हो तर तर्क अर्थात् ज्ञान नै शक्तिको स्रोत बनेर विज्ञान तथा प्रविधिले जीवनमाथि शासन चलाउन थालेको पाइन्छ जुन कालान्तरमा गएर अभिशाप सिद्ध हुने निश्चित छ। सहज ज्ञान पनि विचारको परिस्कृत विचार हो।

हाम्रो परिचय र पहिचानको उत्पत्ति नै बाल्यकालबाट प्रारम्भ हुने र हामीसँग भएको ज्ञानको बारम्बार प्रयोगले हाम्रो परिचय वा स्वाभिमानलाई बलियो बनाउँदै लगेको कारणले हामी ज्ञानलाई अन्त्य गर्न चाहँदैनौ। ज्ञानमा आधारित मूल्य–मान्यतालाई





स्मरणको आधारमा निरन्तरता दिने बाहेक अन्य काम हुन नसक्ने भ्रम हामीले सिर्जना गर्न पुगेका छौं। मानव जन्म विशेष उद्देश्य पूर्तिको लागि हो भन्ने मान्यताले नै शोषक र शोषितको सिर्जना गरेको छ। **मानव अवस्यालाई रूपान्तरण गर्ने विचारको खुबी वा क्षमतामाथि गरिने विश्वासको तार्किक अबधारणा गलत छ।**

जीवन सरल छ तर जटिलताको प्रभावले सहजै सरलतालाई कार्य गर्न दिन चाहँदै चाहँदैन। कसैले पनि त्यो सरल,सहज भोक कसैको लागि सिर्जना गर्न सक्दैन तर चामलको भुसभित्रको आगोजस्तै एक पटक सिर्जित भोकले भने सदा भित्र तबसम्म जलीरहन्छ जबसम्म स्वयम् भोक आफैं भष्म हुँदैन। साहस भन्नु अभ्यास गरेर देखाउने कुरा नभई धार्मिकताको नाउँमा भए गरेका सम्पूर्ण आजसम्मका अनुभव र परम्पराहरूलाई नकार्नु नै साहस हो। जबसम्म कसैमाथि भर परिन्छ तबसम्म व्यक्तिगत अनुपमताले प्रष्फुटन हुन पाउँदैन।

सम्पूर्ण शुद्धिकरण गर्न न त सम्वाद वा वादविवादले सहयोग गर्न सक्दछ न त कुनै साधना र नैतिकताको विधिले सम्भव गराउन सक्दछ। कुनै एक साधना वा विधिले सफल नभएपछि अर्को विधिको प्रतिस्थापन गरी केवल नयाँ र भिन्न शब्दहरू प्रयोग गरेर गति लिन खोजे तापनि वास्तविक खेल भने उही एउटै हुन्छ। जबसम्म कुनै पनि साधना वा विधिको औचित्यहिनता वा पथभ्रष्ट भ्रमको अनुभूति हुँदैन तबसम्म कुनै पनि व्यक्ति एक दिनको श्रवण वा अभ्यासले नभएमा अर्को दिनको श्रवण वा अभ्यासले मुक्ति मिल्नेछ भनी आश गरी प्रत्येक दिन नक्कली गीत गाउनुबाहेक अर्को कुनै विकल्प नै देख्दैन। जति धेरै विश्वास गरिन्छ त्यति नै कठिन र जटिल बन्दै जान्छ। त्यसैले जतिसक्दो छिटो परम्पराको जटिल ढाँचालाई तोड्नुपर्दछ तर यहाँ कुनै एक व्यक्तिले परम्परालाई विष्फोटन गराएको छ भने पनि उसलाई त्यही पुरानै परम्पराद्वारा विकसित गरिएको एक अंश मानी अर्को परम्परागत श्रवणशैली विकास गर्न पुगी अझ झन् जटिल बनाएको पाइन्छ। जब कुनै पनि आवाज अर्थात् विचार आउँछ त्यो स्वयम् तत्काल जलेर भष्म हुने तरिकाले प्रस्तुत हुनुबाहेक अन्य कुनै विकल्पको कार्य नै छैन। यदि कुनै विकल्प देखिन्छ भने त्यसले परम्पराको खास्टो ओढी आफ्नो अस्तित्व जमाउन खोज्दछ। **अरूको पछि लाग्नु पशु गुण हो। पशु बनाउने कारक तत्व नै संस्कृतिले विकसित संस्कार हो।**

समय भन्नु नै भविष्य हो। समयभित्र घटित हुने कार्य वा समयभित्र घट्नु घटाउनु पर्ने कुनै पनि घट्नाले समयभन्दा बाहिरको कुराको अपेक्षा गर्नु स्वयम् समयले समयको

अपमान गर्नु हो। कुनै अपेक्षा वा घटना नै समय हो। जब समय नै हुँदैन तब न त घटना हुन्छ न त घटनुपर्ने कुरा हुन्छ। कुनै पनि कुराको प्राप्तिले कारण र असरको चक्रमा आवद्ध गराउने भएकोले महाप्रलयको प्रयास स्वयम्को लागि आत्मघाती सावित हुनपुग्दछ। मोक्ष प्राप्ति खोज नै दुःखहरूको पनि महादुःख हो। यदि आनन्द, खुशी, शान्ति भनिने कुनै कुराको अनुभव पाइहालियो भने पनि त्यसको स्थायी माग गर्नाले प्रकृतिभित्रको गतिशीलतालाई अस्वीकृत गर्न पुग्दछ। यहाँ ध्यान, तन्त्र, मन्त्र, यन्त्र, योगी, भोगी, जोगी जुनसुकैको कुराले पनि कुनै न कुनै रूपमा स्वार्थ केन्द्रित क्रियाकलापतिर अर्थात् **म तिर** उन्मुख गराइरहेका हुन्छन्। यो गति अन्तर्गत कुनै पनि कुराको घोषणाले गतिलाई स्थिरतामा ल्याइदिइहाल्दछ।

कस्तो कुरा सुन्नुपर्दछ वा सुन्नुहुँदैन भनेर विचार गर्न लगाउने नै संस्कृति हो। सकारात्मक धारणालाई फाल्न नकारात्मक धारणाको विकास हुन्छ तर नकारात्मक धारणालाई फाल्न भने नकारात्मक धारणा स्वयम् आफैंले आफूलाई जलाउनुपर्दछ। यो जलन भने कुनै पनि हालतमा कुनै सकारात्मक लक्ष्य प्राप्तितिर उन्मुख भएको हुन सक्दैन। सकारात्मक परिणामोन्मुख सोचले प्राकृत अविभाज्य चेतनाको गतिलाई नै धराशायी बनाउँदछ। अविभाज्य प्राकृत चेतना **छ** भन्नु नै त्यसको विनाश अर्थात् विभाजन गर्नु हो। अविभाज्य प्राकृत चेतना तार्किक रूपले विकसित गरी निर्धारण गरिएको मान्यता होइन। प्राकृत चेतनाको सम्वाद हुन सक्दैन। यी माथि उल्लेखित सक्दैन, हुँदैन, होइन, रहँदैन भन्ने पूर्ण नकारात्मक व्यवहारिक अभिव्यक्तिको प्रष्फुटन स्वयम् आफैंभित्रबाट नभएसम्म प्राकृतिक जीवनको धरातलमा विहार गर्न असम्भव छ। हजारौं अवतारहरूको अभिव्यक्तिले पनि त्यसलाई मानिसबाट बाहिर प्रष्फुटित गराउन सकिँदैन तर आश भने जगाइदिन्छ र क्रमशः त्यही आशले प्रष्फुटनमा आउनुपर्ने कुरालाई अवरोध सिर्जना गरिदिन्छ र आशैआशमा मानिसको देह लिला समाप्त हुन्छ।

**जब भ्रम पूर्णरूपमा विलिन हुन्छ तब स्वतः प्राकृत चेतनको** आगमन **हुने भएकोले पत्ता लगाउनुपर्ने कुरा भनेको वास्तवमा विचारको भ्रमपूर्ण वाहियात खेल हो।** जे कुरालाई अनुभव गर्न सकिदैन त्यसलाई सञ्चारित गराउन पनि सकिँदैन। ज्ञानविना कुनै कुराको अनुभव र उत्तर दिन नसकिने हुनाले ज्ञानलाई चारवटा पर्खालहरू उभिएको परिणामस्वरूप निर्माण हुन पुगेको कोठासँग मिलाउन सकिन्छ तर मौलिक अवस्थालाई दर्शन गर्न ज्ञानरूपी चार पर्खालले पूर्णरूपमा अवरोध खडा गरेको छ। पलपलमा जीवन जिउनु भन्ने **भनाई** कुनै पनि हालतमा सचेत अस्तित्वको हिस्सा बन्न सक्दैन। वास्तवमा वर्तमान र भविष्य नभई केवल विगतमात्र





छ र त्यो विगत **म** हो। वर्तमानलाई अनुभव कहिल्यै गर्न सकिदैन र यदि गरिन्छ भने त्यो वर्तमानको बारेमा गरेको ज्ञानमात्र हो र ज्ञान जहिले पनि विगतको हुन्छ। **म** को लागि वर्तमान भन्ने कुरा एउटा धारणाबाहेक अन्य तरिकाले अस्तित्वमा रहँदैन। **म** ले जे अनुभव गर्छ त्यो बस्तुको नभई बस्तुको बारेमा संग्रह गरेको ज्ञानको अनुभव लिन्छ। स्वयम् **म** को आफ्नो भन्ने कुनै ज्ञान नभएकोले उसले जे जति अनुभव गर्दछ त्यो सदा अर्काले दिएको ज्ञानको उपज हुन्छ। त्यसैले **म** लाई वर्तमानमा हेर्न सिकाउन र बुझाउनको लागि धेरै विधिहरू लिएर धार्मिक व्यक्तिहरू आए तापनि वास्तवमा वर्तमानलाई हेर्न कुनै साधना र विधिको बाटो आवश्यकता पर्दैन। वर्तमानको व्यक्त गर्नुपर्ने र गर्न सकिने कुनै अनुभव नहुने हुनाले जसले वर्तमानको व्याख्या वा विश्लेषण गर्दछ त्यो सधैं द्वैत स्थितिमा रहिरहन्छ। **आफैंले आफैंलाई स्वतन्त्र छु भनेर ज्ञात गर्न नसक्नु नै वर्तमान हो।** त्यसैले म वर्तमानमा छु कि छैन, स्वतन्त्र व्यक्ति हुँ कि होइन, मोक्ष प्राप्त गरेको हुँ कि होइन आदि इत्यादि वाहियात प्रश्न गर्न सम्भव हुँदैन। महान शिक्षकहरूले कसैको पनि आधिकारिक भनाइलाई पछ्याउँदैनन्।

जबसम्म स्वयम्मा त्यो शान्त, मौनताको ज्वाला दन्किरहन्छ तबसम्म न त म स्वतन्त्र छु भन्ने कुरा उत्पन्न हुन्छ न त मैले अरूलाई स्वतन्त्र गराउनुपर्दछ भन्ने विचार उत्पन्न हुन्छ। त्यो व्यक्ति फूलजस्तै फुलिरहन्छ। चाहे गोबरमा फुल्ने होस् वा गमलाभित्र फुल्ने फूल होस्, तिनीहरूको आ–आफ्नै अतुलनीय महत्व हुन्छ। त्यसको बारेमा कसैले पनि केही भन्न सक्दैन। त्यो फूलको अवस्था अनुभवको अवस्था नभई बरु अनुभव गर्नुपर्ने कुनै पनि कुरा नहुने अवस्था हो। यसरी **स्व–ज्ञान वा स्व अनुभूति भन्नु नै त्यहाँ कुनै अनुभूति गर्नुपर्ने स्व नै छैन भन्ने कुरा आफैंले आफ्नो लागि अनुभूति गर्नु नै जीवनको महा–प्रलय हो। यो प्रलयले म को हुँ भन्ने कुराको खोजले नै वास्तवमा म लाई निरन्तरता दिई स्वयम् आफूले नै भ्रमपूर्ण मोक्ष र लक्ष्यको खेल सिर्जना गरेको कुरा स्पष्ट हुन्छ।**

श्रवण गर्नु भन्नु नै व्याख्या विश्लेषण गर्ने भएकोले वास्तवमा शुद्ध, निष्पक्ष श्रवण गर्ने कला नै छैन। जे कुरा सुनिन्छ त्यसलाई व्याख्या बिना नै सुन्न सक्ने खुबी मानिसमा छैन। जबसम्म विचारको गति रहन्छ तबसम्म यो अवस्थालाई स्पर्श गर्न पनि सकिदैन। **जब विचारको गति रहँदैन तब त्यहाँ बुझ्नुपर्ने आवश्यकता पनि रहँदैन। यस अर्थमा यो भन्न सकिन्छ कि वास्तवमा यहाँ बुझ्नुपर्ने केही पनि छैन।** कुनै पनि व्यक्ति सचेत तहमा कारुणिक बन्न सक्दैन। कसैले कसैलाई परिवर्तन

गर्नु गराउनु भनेको स्वयम्भित्र परिवर्तन नभएको कुराको सङ्केत हो ।

वैचारिक प्रतिक्रियाप्रदत्त रिसले आफूलाई मात्र नभई अरूलाई पनि हानी गर्ने गर्दछ तर प्राकृत रिसले कसैको हानि गर्दैन र यो शान्त समुन्द्रमा छाल आएर पुनः शान्त भएजस्तै रिस आउँछ र जान्छ तर कसैको विगार गर्दैन । कतिपय क्रियाकलापको प्रत्युत्तर मेरुदण्डले दिएको हुन्छ तर जब क्रियाहरू मस्तिष्कमा आइपुग्दछन् तब विचारले आफ्नो खेल सुरू गरी प्रतिक्रिया दिन पुग्दछ । वास्तवमा सजीवताको सञ्चार गर्नु नै सजीवतालाई मार्नु हो ।

शरीर र मस्तिष्क प्रकृतिका अस्तित्व हुन् तर तिनीहरूको कुनै प्रारम्भ र अन्त्य छैन । दुर्भाग्यवश विचारले कुनै पनि कुराको सुरू र अन्त्यको खेल खेलाई विचार स्वयम्ले आफ्नो अस्तित्वको स्थायित्व कायम राख्ने माग गरिराखेको हुन्छ । शरीरलाई जन्म-मृत्युको सम्बोधन गरेर शरीरलाई **प्रकृतिभन्दा भिन्न रूपमा स्थापित गर्ने काम नै विचारको हो ।** हेर्नको लागि स्थान विशेष आवश्यक हुन्छ र विचारले स्थान सिर्जना गर्दछ । तसर्थ स्थान स्वयम् नै एउटा आधार हो जसले पूर्वाग्रह दृष्टि उत्पन्न गर्दछ । सजीव विचार भन्ने कुनै कुरा नै छैन । जे लाई सजीव मानी अनुभव गर्न लगाइएको छ त्यो त्यस्तो वैचारिक भ्रम हो जसलाई कुकुरले हड्डी चपाउँदा आफ्नै गिजा आफैंले काट्न पुग्नाको परिणामस्वरूप आउने रगतलाई हड्डीबाट आएको रगत ठानी कुकुरले चाट्ने भ्रमसँग तुलना गर्न सकिन्छ । यसरी विचारले अनेकौं तरिकाले आफ्नै सिर्जना गरेको कैदभित्र कैदी बन्न रुचाउने र झुलाउने स्वभाव भएको कारणले गर्दा अप्ठेरो समयमा जहिले पनि आफूले सिर्जित कैदखानाबाट मुक्त हुन प्रयास गरिरहनु नै मानव दुर्गति र दुर्दशा हो ।

हामीभित्र कर्ताको अस्तित्व नै छैन भन्नुको अर्थले हामीले जे बाहिर देख्छौं त्यही बस्तु नबनी बरु हाम्रो पृष्ठभूमिमा संग्रहित ज्ञानको प्रक्रियाले बस्तुको अनुभूति अर्थात् मोटो, पातलो, नरम, तातो, चिसो भनी अनुभूति गर्ने बाहेक अर्को कुनै पनि आधार छैन। वास्तवमा मस्तिष्कमा नयाँ अनुभव भन्ने कुरा नभए तापनि अनुभव लगातार गर्ने मागले स्मरणको सम्पूर्ण यन्त्रलाई गिराउन पुगेको छ । चेतना नै स्मरण हो र स्मरणमा संग्रहित वस्तुको ज्ञानद्वारा नै हामीले त्यो बस्तुको सचेतता महसुस गर्दछौं । स्मरणको प्रयोग गर्ने निरन्तर मागद्वारा नै स्मरणले कर्ताको रूपमा आफ्नो अस्तित्व बचाएर राखेको हुन्छ। वास्तवमा मस्तिष्कमा चेतनाको चेतन,अर्धचेतन,अचेतन भन्ने जस्ता तहहरू हुँदैन । सचेतता मस्तिष्कको कार्यबाट अलग गर्न सकिदैन । जुन पलमा हामीले आफूलाई सचेत ठान्छौं तब विभाजनले ठाउँ लिइराख्दछ । बाह्य प्रभावको कारणले विचार बाहिरबाट आउने गर्दछ ।





यही विचारको प्रयोगले हामीले उद्देश्य प्राप्त गर्न चाहन्छौं। कम्प्युटरलाई कुनै आर्गत दिनेबित्तिकै काम गर्न थाले जस्तै हाम्रो मस्तिष्कले पनि कुनै कुराको प्रभाव पर्ने बित्तिकै सोधखोज कार्य गरी प्राप्त गर्न चाहन्छ । खोज्नु नै सोच्नु हो अर्थात् यान्त्रिक प्रक्रिया हो । हामीसँग प्रकाशजस्तै जीवनशक्ति पनि छ तर त्यो शक्तिलाई यान्त्रिकताको राजले तहसनहस पारीरहेको देखिन्छ । हाम्रा सम्पूर्ण कार्यहरू विचारमा आधारित भएको हुनाले धारणा र कार्य वास्तवमा एउटै हुन् । हाम्रा धारणाहरू नै एक पिंढीबाट अर्को पिंढीमा हस्तान्तरित गरिएका विचारहरू हुन् । विचारले कुनै पनि हालतमा मिलनप्रवृत्तिले ओतप्रोत सजीव जीवन जिउनमा सहायता गर्न सक्दैन । जब मानवले मृत्युलाई देख्दछ तब मृत्युभन्दा पर गएर अमरत्व प्राप्त गर्ने सोच बनाउँदछ र स्वभावतः मृत्युभन्दा परको कुरा सिर्जना गर्न पुग्दछ । यसरी मानिसले एउटा भ्रम हटाएर अर्को भ्रम सिर्जना विभिन्न तरिकाले गर्दै आइरहेको पाइन्छ किनभने भ्रमको अन्त्य नै मृत्यु हो जुन मानिसले चाहँदैन । यसरी मानिसको तथाकथित भ्रमित मूल्य मान्यता प्रणाली नै दुःख र दुर्दशाको प्रमुख कारण बनेको छ ।

विचारको स्वभाव भन्नु नै गतिशील भई तत्काल उदय हुनेबित्तिकै बिलय हुनु हो तर विचारलाई साधनको रूपमा नभई साध्यको रूपमा प्रयोग गरी विचारकको सिर्जना गर्न पुगेको पाइन्छ । शरीरले त्यस्तो कुनै पनि आनन्द र खुशीको माग राख्न जान्दैन । शारीरिक क्रिया र वैचारिक क्रियाबिचको द्वन्द एक आपसमा अन्यौलग्रस्त हुन पुगी प्राकृतिक सीमा काटेर कृत्रिम दुर्दशातिर लम्किरहेछ । वास्तवमा मस्तिष्कमा विचारक भन्ने कर्ता नभई केवल चिन्तन प्रक्रियामात्र छ । यदि विचारक छ भने पनि त्यसलाई जान्ने कुनै बाटो नै छैन । जे हामी देख्दछौं त्यो केवल वैचारिक स्मरणको गति हो । विचारबाट भिन्न छुट्टै कुनै पनि कर्ता नहुने भएकोले विचारको बुझाइ वा विचारलाई हेर्ने भन्ने कुनै कुरा हुँदैन । आफ्नो वैचारिक प्रक्रियामाथि सचेत हुने भन्ने कुरा तथ्यगत हुँदैन । वैचारिक अस्तित्व कायम राख्ने प्रणाली स्वयम् विध्वंश भएपछि मात्र शक्तिको उद्भव हुन्छ जुन कुरा कसैसँग पनि साटफेर गर्न मिल्दैन । वास्तवमा यहाँ कसैले कसैलाई केही दिने र लिने कुनै कुरा नै छैन तर अनावश्यक माग र संग्रहको सोचले गर्दा दान,पुण्य र सेवाका धारणाहरू अस्तित्वमा आएका हुन् । खाना नखाई बस्दैमा शरीरमा स्वभावतः उत्पन्न हुने रासायनिक परिवर्तनको अनुभवलाई भ्रमित आध्यात्मिक अनुभवको दर्जा दिई शरीरभित्र झन् मानसिक रोग सिर्जना गरिएको पाइन्छ । शरीरले भोक लागेपछि खाना चाहन्छ त्यो प्राकृतिक हो तर यो खाना र त्यो खाना भनि विभेद गर्न भने शरीरले जान्दैन र चाहँदैन बरु त्यो गर्ने काम विचारको हो ।

इच्छा बंशाणुगत गुणभित्र निहित कुरा हो तर मुक्ति र मोक्षको इच्छा भने शरीरबाट उत्पन्न नभई संस्कारले ग्रसित मस्तिष्कबाट उत्पन्न भएको कुरा हो। **ज्ञान न त रहस्यमय छ न त भावमय नै छ बरु ज्ञान केवल बस्तुको परिचय हो।** मस्तिष्कभित्र संग्रहित ज्ञानले नै अनुभव गर्ने बस्तुको सिर्जना गर्दछ। विचारको जन्म स्वयम् आफैंमा एउटा कार्य हो। वास्तवमा राम्रो नराम्रो भन्ने विचार हुँदैन तर यदि राम्रो नराम्रो बनाइन्छ भने त्यो केवल पूर्वाग्रहको कारणले गर्दा बन्न पुगेको हुन्छ। मानव केवल सम्झना र ज्ञानद्वारा मात्र सचेत बन्न सक्दछ। स्वतन्त्रता भन्ने कुरा प्रश्नको उत्तर पाउँदैमा आउँदैन बरु सम्पूर्ण प्रश्नहरूको विलय भएमा आउँदछ। **जबसम्म व्यक्तिले समाजलाई परिवर्तन गर्ने इच्छा राख्दछ त्यसले स्वयम् आफूमा असन्तुष्टि भएको स्पष्ट पार्दै संसारलाई सपार्ने अभिलाषा लिन पुगेको हुन्छ।**

प्रतिक्रियाले पक्ष विपक्षको आधारशीला खडा गरी राम्रो नराम्रोको श्रृङखला निर्माण गर्दछ भने प्रत्युत्तरले विचारबिना नै केवल दर्शन गर्दछ,हेर्दछ र तत्काल प्रत्युत्तर दिइहाल्दछ जसको अर्को भावी प्रत्युत्तरसँग कुनै सम्बन्ध स्थापित गर्न सक्दैन।

भावना भनेको शारीरिक प्रत्युत्तर हो। **आजसम्म शिक्षा र संस्कृतिद्वारा प्रतिपादित त्यस्ता कुनै पनि काल्पनिक योगी, भोगी र जोगीवादलाई पूर्णरूपले मस्तिष्कबाट विलय गराउन सक्नु नै प्राकृतिक अनुपमतालाई सु-स्वागतम् गर्नु हो।** त्यसपछि उसको लागि आस्तिक ,नास्तिक वा कुनै पनि वाद महत्वहीन सावित भई ऊ जे छ त्यही नै बन्दछ। उसले जे देख्छ त्यही बोल्छ। शब्द भन्दा परको कुनै अस्तित्व रहेछ भने पनि त्यसले स्वत आफ्नै तरिकाले कार्य गर्न पुग्दछ। बनस्पति र प्राणीहरूमा कार्य गर्ने चेतना सबैको एउटै हो तर मानवको सम्बन्धमा भने चेतनाले विभाजित तरिकाले कार्य गरेकोले संसारमा कहीं नभएको युद्धको रचयिता मानव बन्न पुगेको छ। विचारबिना कार्य गर्न नसकिने हुँदा त्यहाँ त्यस्तो विचारमुक्त कार्य, शुद्ध कार्य भन्ने नै छैन। तुलनात्मक अध्ययन र विश्लेषणको अन्त्यमा मात्रै वास्तविक मौलिकताले सजीवता पाउँदछ। **प्रकृतिले समय समयमा आफ्नै तरिकाले क्रमिक विकासका परिणामहरूलाई अन्त्य गर्दै नयाँ कुराको शुभारम्भ गरिरहने हुनाले कुनै पनि प्रकृतिको एउटा नमुनालाई ठोस रूपमा भविष्यमा अर्को व्यक्तिमाथि प्रयोग गर्न सकिदैन। स्वयम् सूर्य जसरी चम्किरहेको छ त्यसरी नै जीवनको महाप्रलयले कुनै पनि उत्पन्न विचारभित्र आफू स्वयम् जल्दै अरूको विचारलाई पनि जलाउँदछ।**







# खण्ड-तीन

# अविभाज्य प्राकृत चेतना
## ("UNDIVIDED NATURAL CONSCIOUSNESS")

### मानवको अविभाज्य प्राकृत चेतनाको अतुलनीय स्व-बोधी नृत्य :

प्रत्येक अनुपमताले जन्मसिद्ध अधिकार बोकेर उदय भएको हुन्छ। प्रत्येक अभिव्यक्तिले कुनै नयाँ घटना उद्घाटन गर्न सक्ने स्वभाव बोकेको हुन्छ र यो नै प्रकृतिको स्वभावको साथसाथै उद्देश्य पनि हो। प्रकृतिले कुनै पनि हालतमा गुरु-शिष्यको गुरूपरम्परा सिर्जना गरी अरूलाई दिग्भ्रमित गराई ईश्वरले सबैको रक्षा गर्दछन् र ईश्वरको रक्षा मैले गर्नुपरेको छ भन्ने जस्तो व्यापारिक नाराको अनुमति दिन नसक्नु नै प्रकृतिको अद्वितीय अनुपम स्वभाव हो। यो मौलिक अवस्था यति सरल, स्वच्छ र स्पष्ट छ कि जटिलतामा हुर्किएको वा जकडिएको ढाँचाले त्यो सहजपन र निर्मलतालाई अस्वीकृत गरिदिन्छ। त्यहाँ गर्नुपर्ने,गर्न सकिने र घट्नुपर्ने केही पनि छैन भन्ने घोषणाको साथमा शब्द स्वयम् विलय हुन्छ। जीवन गति हो र यो गति जस्तो बाहिर छ त्यस्तै भित्र छ। प्राकृत अवस्थामा पागल र बच्चाको संमेलको अवस्थाको भाव झल्किन सक्दछ। उसले के कस्तो देखिरहेछ, सुधिरहेछ,सुनिरहेछ भन्ने कुरा स्वयम्लाई थाहा नभएपनि उसको इन्द्रियहरू अति उच्चरूपले संवेदनशील भइरहन्छन्। **अहं वा म बाट स्वतन्त्र हुने कुनै पनि क्रियाकलापले नै अहंकार र स्वार्थलाई औंल्याउने हुनाले वर्तमानमा रहिरहनु पर्दछ भन्ने र केही अभिलाषा राख्नु वा नराख्नु दुवै कुराले केही बन्नु पर्ने अर्थ दिने हुनाले यो बन र त्यो नबन भन्ने कुनै पनि कुराहरूको अस्तित्व रहदैन।**

प्राकृत अविभाज्य चेतनाको आफ्नै अनुपम गति हुन्छ यो सदा अविरल चलिराख्दछ। अविभाज्य प्राकृत चेतना जब बोल्दछ तब त्यो चेतना कार्यगत रूपले

बिभाजित हुन पुग्दछ। प्राकृत चेतनालाई पिछा गर्नु, खोज्नु, पत्ता लगाउने प्रयास गर्नु भन्नु र आफ्नो छायाँलाई समातेर राखिराख्छु भन्ने एउटै कुरा हुन्। मौलिक अवस्थाले ज्ञानरूपी पर्खाललाई परिस्थितिअनुकूल प्रयोग गरी गास, वास कपासको निर्माणमा प्रयोग गर्न सक्दछ। मौलिक अवस्था नदीको पानीको प्रवाह हो र यदि पानीको प्रवाहमा कुनै अवरोध खडा भएमा तत्काल मोडिएर, भरिएर, फुटालेर वा अन्य कुनै तरिकाले आफ्नो कार्य गरिहाल्दछ। अविभाज्य प्राकृत चेतनामा समाहित वक्ता स्वयम्को त्यस्तो कुनै कुरा गर्ने आधार नै हुँदैन। वक्ताको आधार भन्नु नै श्रवणकर्ता र श्रवणकर्ताको प्रश्न हो। वास्तवमा अविभाज्य प्राकृत चेतना भनेको अव्यक्त र असञ्चारित भनेर भन्दैमा प्राकृत चेतनाभित्र केही छ भनेर अर्थ लगाउनु अत्यन्त भ्रमयुक्त र पीडादायक सावित हुन पुग्दछ। त्यहाँ केही पनि छैन भनेर भन्दा खेरी फेरि मानिसले खाली, शून्य, रित्तो भन्ने शब्दावलीले श्रृङ्गार गर्न खोजिएको पाइन्छ तर संक्षेपमा यति नै भन्नु उपयुक्त हुन्छ कि **त्यहाँ केही छ वा छैन भन्ने कुरा थाहा छैन र यदि केही छ भने पनि कुनै पनि हालतमा त्यसलाई ज्ञात गर्ने तरिका नै छैन। अज्ञात भन्ने त्यस्तो कुनै कुरा नै छैन।** अज्ञातको बारेमा जे जति ज्ञात हुन्छ त्यो अज्ञात नभइ ज्ञात हो। चेतनाका सूचीहरू यति प्रचण्ड हुन्छन् कि त्यसको बारेमा केही भन्नै सकिदैन तर कसरी कसले त्यो ज्ञात गर्न नसकिने अवस्था हो भनि ठोकुवा गर्न सक्दछ भनि प्रश्न गर्ने व्यक्तिको लागि भने प्रश्न सान्दर्भिक हुन्छ वा देखिन सक्छ किनभने प्रश्न गर्ने व्यक्ति त्यो अवस्थामा रहेको हुँदैन तर त्यो अवस्थामा आएको व्यक्तिस्वयम्ले आफूलाई त्यो अज्ञात छ भनेर भन्न सक्दैन। यसरी प्रश्नकर्ताको चेतनाको सन्दर्भमा भन्नु पर्दा उक्त अवस्थालाई ज्ञात गर्ने कुनै बाटो न त प्रश्नकर्तासँग छ न त अरू कसैसँग हुन सक्दछ। त्यो अवस्था अनुभवभन्दा पनि परको अवस्था भनेर भन्नु पनि अनुभवको, विचारको उपज हुने भएकोले त्यो अवस्थाको बारेमा केही भन्नै मिल्दैन। **यो अवस्था सपना, विपना र निन्द्रावस्थाको विभाजित अवस्था होइन। यो पूर्णरूपमा विभाजनको अनुपस्थिति हो तर यसलाई एकताको अवस्था, पूर्णताको अवस्था भनेर भन्न अति कठिन हुन जान्छ।** जीवन कुनै दुई भिन्दाभिन्दै गति होइन। जीवनको अर्को काम प्रत्युत्तर गर्नु हो। यो अवस्थाले कुनै पनि हालतमा म अज्ञातको अवस्थामा छु भनेर आफूले आफूलाई भन्न सक्दैन बरु अज्ञात अवस्था स्वयम्ले ज्ञात गर्न नसकिने कुराको अभिव्यक्ति स्वभाविक रूपमा प्रष्फुटन गरेको हुन सक्छ। **यो तर्करहित अवस्था हो भन्नु को अर्थ यो अतार्किक छ भन्नु पनि होइन। यो अवस्थाको यदि कुनै तर्क छ भने आफ्नै**





**स्वभावको तर्क छ र त्यो तर्क वास्तवमा यहाँ कसैले कसैको कुरा नसुनी बरु आफ्नै कुरा सुनेर हेर्नुमा नै त्यो तर्कको प्रष्फुटन सम्भव छ।** सजीव गति कहिल्यै पनि रोकिदैन र कुनै हालतमा कैद गर्न पनि सकिदैन। अविभाजनमा प्रतिध्वनिको संभाव्यता रहेको हुन्छ। वैचारिक मृत्युको विष्फोटनले शरीरभित्र कहिले, कसरी र कहाँ ठाउँ लिन पुग्दछ भन्ने कुरा न त कसैलाई थाहा हुन्छ न त कसैले भन्दैमा उद्घाटित हुन सक्छ। यो विष्फोटनले कुनै साधना र तरिकासँग कुनै पनि प्रकारको सम्बन्ध राख्दैन। **यहाँ न त शक्तिमात्रै छ न त पदार्थमात्र छ बरु शक्ति र पदार्थ एउटै कुराका दुई रूप हुन् तर जब विचारले जन्म लिन्छ तब त्यो शक्ति पदार्थको रूप लिन पुग्दछ। शरीरको काम उत्तेजकप्रति प्रत्युत्तर दिनु हो।** शरीर वास्तवमा आफ्नै तरिकाले अमर छ किनभने शरीरको प्रारम्भ र अन्त्यको रेखांकन गर्न सम्भव छैन तर जब विचारको अन्त्य हुन्छ तब शरीर मुर्दा बन्न पुग्दछ र तत्पश्चात् शरीर भित्र कस्ता अवशेषहरू रहन्छन् भन्ने ज्ञात शरीरलाई हुँदैन किनभने त्यहाँ विचारको अन्त्य भइसकेको हुन्छ। कुनै पनि कुराको आदि-अन्त्य नै छैन भन्ने कुराले हाम्रो चातुर्यपूर्ण वैचारिक खेलको अन्त्य गरिदिने हुनाले यो कुरालाई स्वीकार गर्न नचाहनु विचारको चातुर्यता हो। त्यहाँ त केवल अनन्त समय-स्थान र शक्तिको सुमधुर प्रवाहको धरातल छ।

कसैले पनि आफ्नो वास्तविक प्राकृतिक अवस्था कुनै पनि अस्तित्वका सचेत क्रियाहरूद्वारा व्यक्त गर्न सकिदैन। प्राकृत मानव कहिल्यै पुनरावृत्ति नहुने प्रकृतिको खेल खेलीरहन्छ।

विचारविहीन अवस्था हुनै सक्दैन तर विचारको आफ्नै प्राकृतिक स्थान, महत्व र कार्य भने अवश्य हुन्छ। अकस्मात् विचार जब आफ्नो प्राकृतिक अवस्थामा आउन पुग्दछ तब शरीरमा जे घटिरहेको हुन्छ त्यो केवल अस्तित्वको प्राकृतिक अवस्थाको अभिव्यक्ति हुन पुग्दछ तर त्यहाँ घट्नाहरूले कसरी कार्य गरिरहेको छ भन्ने ज्ञान भने हुँदैन। इन्द्रियहरूले असाधारण रूपमा आफ्नो संवेदनशीलता तब प्रस्तुत गर्न सक्दछन् जब विचारको गतिमा निरन्तरता वा नियमितता हुँदैन।

प्रकृतिले मानवसँग गर्नुपर्ने कार्य पूर्णरूपमा गरिसकेको छ। स्व-सचेत, उद्देश्यमूलक विचार र सु-विवेकी क्रिया गर्ने प्राणीको सिर्जना गरेकोले त्यस भन्दा टाढा प्रकृति जानु पर्ने आवश्यकता पनि छैन र जान पनि सक्दिनन्।

शब्दबेगरको श्रवण भए तापनि त्यो सचेत तहमा हुन सक्दैन। त्यो श्रवण मनोवैज्ञानिक, धार्मिक, आत्मिक नभई केवल साधारण शारीरिक र प्राकृतिक स्वभावको

हुन्छ। अनुवाद र व्याख्या विश्लेषणविना को बाहिरी आवाज केवल भित्रको लागि प्रतिध्वनि बाहेक अरू केही बन्न सक्दैन किनभने त्यहाँ विभाजन हुँदैन। आफ्नो भन्ने कुनै पनि कुराहरूले ओतप्रोत नभएको हुनाले यस्तो प्राकृतिक अवस्थाले प्रतिक्रिया नभई प्रत्युत्तर दिने गर्दछ।

चेतनालाई स्वतः कार्य गर्न दिनुपर्छ भन्नु ले नै यदि कुनै प्रयासको अर्थ दिलाउँछ भने त्यो पनि प्राकृतिक अवस्थालाई अति सूक्ष्म रूपमा सडाउने किरो बन्न जान्छ। यदि हामी गहिरीएर जाने हो भने विचारले सिर्जित म भन्ने कुरा हराउन पुगी शारीरिक मृत्युले ठाउँ लिन पुग्दछ।

प्राकृत इन्द्रियानुभूति जीवनको गतिसँगै चल्दछ। त्यो गतिलाई समात्ने वा आबद्ध गर्ने प्रश्नले मौलिक अवस्थामा आउन दिँदैन। **वास्तवमा चेतना यस्तो कुरा हो जसलाई ज्ञात गर्न सकिँदैन।** जब आन्तरिक माग वा इच्छा अन्त्यमा आउँदछ तब समाजसँग सम्मेल हुन पुग्दछ। जब ज्ञानको विष्फोटन वा अन्त्य हुन्छ त्यो क्षणमा लगातार अनुभव गर्ने स्थायी मागको अनुपस्थिति भई विष्फोटनले शरीरमा रासायनिक परिवर्तन ल्याएको हुन्छ। कसैको कुनै पनि तार्किक प्रश्नले विष्फोटनपश्चात्को अवस्थासँग कुनै अर्थ राख्दैन। मानव शरीर चिन्तनद्वारा नभई इन्द्रियहरूको क्रियाकलापद्वारा निर्देशित हुन्छ। यसले कुनै कार्य गर्नुअघि र कार्यपश्चात् प्रश्न गर्न सक्दैन र कुनै पश्चाताप र तर्क बिना नै कर्म गर्दछ। बच्चाको स्वभावजस्तै प्रत्येक क्रियाको स्वाभाविक निष्कपट र निर्दोष प्रत्युत्तर हुन्छ। प्रतिक्रिया र प्रत्युत्तरले कहिल्यै पनि पूर्व निर्धारित भएर अग्रसरको गति लिन सक्दैन। वास्तवमा मानव चेतनाभित्र भित्री र बाहिरी भन्ने कुनै विभाजन नै छैन। **जीवन भनेको कर्म हो र प्रश्नविहीन कर्म नै नैतिकता हो।** जब चिन्तनको प्रक्रिया बन्द हुन्छ तब मात्र यथार्थताको दर्शन हुन्छ,जुन प्राकृतिक हुन्छ।

प्राकृत अवस्थामा विगतलाई औंल्याउने कुनै पनि आधार नै रहदैन। ज्ञात गर्न नसकिने कुरा छ भनी भन्नु पनि ज्ञान हो तर यसको मतलब यो होइन कि जे छ त्यसलाई प्रश्न गरेर प्रश्नको उत्तर बनाउनु प्राकृत अवस्थालाई उपेक्षित गर्नु हो। मौलिक अवस्थालाई व्यक्त गर्ने बित्तिकै त्यो मौलिक रहदैन।

प्राकृतिक अवस्थामा रहन अरूको सहायताले नभई स्वयम् आफ्नो सहायताले पनि ल्याउन नसकिने अवस्था हो। विभिन्न वातावरणका विविध तत्वहरूको बाबजुद पनि जीवनले विभिन्न रूपहरू अभिव्यक्त गर्न प्राथमिक आधार खडा गरी गति दिई राख्नु





नै जीवनको अद्वितीय कुरा हो।

**विष्फोटन भई मौलिकतामा आउन सक्ने संभाव्यता अन्त कतै बाहिर नभई प्रत्येक व्यक्ति स्वयम्भित्र विद्यमान हुनुपर्ने र हुने यसको प्राकृतिक स्वभाव हो। यो विष्फोटन कसैलाई घटने र कसैलाई नघटने कारण के हो भनेर उत्तर दिन असम्भव हुनाको प्रमुख कारण नै त्यो घटना जहिले पनि अकारण र आकस्मिक हुने हुनाले हो। प्राकृतिक मौलिकताको उदय कुनै पनि अभ्यास वा साधना गरेर प्राप्त नहुने हुँदा यसको उदय चिन्तनविना अचानक हुन पुग्दछ।**

जब प्रश्न स्वयम् आफैं जल्दछ तब त्यहाँ जे छ त्यो स्वतः प्रस्तुत हुन थाल्दछ र त्यो अभिव्यक्ति वास्तवमा धार्मिक, मनोवैज्ञानिक अवस्थाको अभिव्यक्ति नभई एउटा शुद्ध शारीरिक क्रियाहरूको सर्वोत्कृष्ट क्षमतामा इन्द्रियहरूले काम गरिरहेको मौलिक अवस्थाको अभिव्यक्ति हुन पुग्दछ।

**चेतनाको वास्तवमा कुनै आकार नहुनु नै यसको प्राकृतिक स्वभाव हो र यसलाई जहाँ राख्यो त्यहीं नै त्यो बन्न पुग्दछ** र उक्त चेतनाले कुनै पनि वैचारिक अवरोध वा कैदलाई नष्ट गर्न अति तीव्र रूपमा चलायमान भइरहन्छ। सजीवता र क्रिया एक आपसमा अन्तरसम्बन्धित एकिक प्रक्रिया हो। **मौलिक अवस्थाले प्रत्येक पलको स्वास लिने र छाड्ने प्रक्रियाको सायमा जन्मने र मर्ने गर्नुलाई नै मृत्यु र पुनर्जन्मको रूपमा हेर्न पुग्दछ।** बाँच्नु र प्रजनन् प्रणालीमा सरोकार राख्नु नै जीवन जिउने प्राकृतिक तरिका हो। मानव जीवनले बाँच्न र आफ्नो सन्तानोत्पादनलाई निरन्तरता दिन विचारद्वारा मात्र सम्भव भएकोले विचार जीवन जिउनको लागि अति आवश्यक छ।

**प्राकृत अभिव्यक्ति सबैको साझा सम्पत्ति हो।** मौलिकता अनुभवको क्षेत्रभन्दा परको कुरा हो। वैचारिक हस्तक्षेप बिनाको इन्द्रियहरूको स्व-सञ्चालन नै जीवन हो । प्राकृतिक अवस्थामा रहँदा उत्पन्न हुने कुनै पनि विचारहरू चिन्तन गरेरमात्र आउने भन्ने कुरा हुँदैन। वास्तवमा व्यक्तिले दोहोरो सम्वादको लागि खेल्नुपर्ने नाममात्रको भूमिकामात्र निभाएको हुन्छ। उसलाई बोल्नमा अन्य कुराहरूले अग्रसर गराएको हुन्छ तर उसको वास्तवमा आफ्नो भन्नुपर्ने केही कुरा पनि हुँदैन। उसले जे भन्छ त्यो पृष्ठभूमिमा रहेर बसेकोले स्वतः आउँदछ र आउनेवित्तिकै विलाइहाल्दछ। प्रत्येक इन्द्रियानुभूतिहरूले आ-आफ्नै तरिकाले स्वतन्त्र काम गर्दछन्। अविभाज्य

प्राकृत अवस्थाको मानिसले आफ्नो कुनै प्रतिबिम्ब वा स्वरूप निर्माण गर्न नसक्ने भएकोले उसले अरू व्यक्तिहरूको प्रतिबिम्ब सिर्जना गर्न सक्दैन ।

**अन्त्यमा, मानव जीवन वैचारिक मृत्युबाट गुज्रिएपश्चात्को अविभाज्य प्राकृत चेतनाबाट अचानक प्रष्फुटित गतिशील स्व-बोधी नृत्य, नाटक वा खेलको अभिव्यक्ति..............**

**यथार्थता यो हो.......**
**संसार अर्थात् मानव स्वार्थी छ ।**
**स्वार्थको प्रमुख कारण विचार हो ।**
**विचारको समाधान कुनै पनि विधिबाट सम्भव छैन ।**
**अविभाज्य प्राकृत सचेतता नै समाधानको अखण्ड ज्योति हो ।**

**सत्य यो हो ....................**

**न त म हुँ पंच तत्व, न त बुद्धि विवेक ।**
**होइन म तीनै अवस्था, न त म हुँ तीन काल ॥**
**रूप र शून्य पनि होइन, तर व्याप्त निराकार ।**
**हुँ म त्यही स्व-रूप शून्य, अव्यक्त अनादिकाल ॥**

**अन्त्य नै नयाँ शुभारम्भ हो ...**







# सत्य

| छ । (x) | छैन । (y) |
|---|---|
| छ कि छैन मध्ये एउटा **छ** । Either x or y. = **X** . | छ कि छैन मध्ये एउटा पनि **छैन** । Neither x nor y. = **Y** |
| **कि** छ कि छैन मध्ये एउटा छ भन्ने **छ** **कि** छ कि छैन मध्ये एउटा पनि छैन भन्ने छ । | **न त** छ कि छैन मध्ये एउटा छ भन्ने छ **न त** छ कि छैन मध्ये एउटा पनि छैन भन्ने छ । |
| **Either X or Y .** | **Neither X nor Y.** |



लेखक : युवराज तिमिल्सिना
ठेगाना : पोखरा-६, लेक साइड, जरेवर
पेशा : शिक्षण
फोन : ९८४६०४५२४३
E-mail : disorderinorder@yahoo.com



"मानव जातीले आफूले आफूलाई प्रकृतिबाट पृथक राखेर प्रकृतिलाई कहिल्यै अध्ययन गर्न सक्दैन ।"

"कुनै पनि स्कूल बास्तवमा घर तब बन्दछ जब त्यहाँ कसैले पनि कसैलाई विना डर आफ्ना कुराहरु स्वतन्त्रपूर्वक राख्न सक्ने बातावरण स्थापित भएको हुन्छ ।"



"बैचारिक धरातलद्वारा हुर्केको मानव धर्म र मानव अधिकारको अबधारणा आफैंमा असफल साबित भएको छ ।"

मूल्य रु. १५०/-



ISBN:978-9937-2-0700-3